## प्रेस काउन्सिल नेपालका पदाधिकारीहरू



वरिष्ठ अधिवक्ता बोर्णबहादुर कार्की
अध्यक्ष



डा. महेन्द्र विष्ट
सदस्य



किशोर श्रेष्ठ
सदस्य



खिलबहादुर भण्डारी
सदस्य



चन्द्रकिशोर झा
सदस्य



चन्द्रदेव कामती
सदस्य



नवलकिशोर यादव
सदस्य



मनऋषि धिताल
सदस्य



माधव शर्मा
सदस्य



मुरलीप्रसाद यादव
सदस्य



सुदर्शन आचार्य
सदस्य



लक्ष्मीविलास कोइराला
सदस्य-सचिव


**प्रेस काउन्सिल नेपाल**
**सञ्चारग्राम, तिलगंगा, काठमाडौं**
**फोन** : ४११२६७८, ४११२७९९
**फ्याक्स** : ४११२६९४
**इमेल** : prescoun_mdf@wlink.com.np
**वेबसाइट**: http://www.presscouncilnepal.org




चालिसौं वार्षिक प्रतिवेदन

प्रेस काउन्सिल नेपाल

# प्रेस काउन्सिल नेपाल

सञ्चारग्राम, तिलगङ्गा, काठमाडौं

# बार्षिक प्रतिवेदन







## २०७१/०७२

# प्रेस काउन्सिल नेपाल

## ४० औं वार्षिक प्रतिवेदन

## आर्थिक वर्ष २०७१/०७२




**२०७२ असोज**

| | | |
|---|---|---|
| प्रकाशक | : | प्रेस काउन्सिल नेपाल |
| | | सञ्चारग्राम, तिलगंगा, काठमाडौं |
| | | फोन : ४११२६७८, ४११२७९९ |
| | | फ्याक्स : ४११२६९४ |
| | | इमेल : prescoun_mdf@wlink.com.np |
| | | वेबसाइट : http://www.presscouncilnepal.org |
| सम्पादन | : | अन्तर्राष्ट्रिय सम्बन्ध एवं प्रकाशन तथा अनुसन्धान उपसमिति |
| प्रकाशन मिति | : | २०७२ असोज |
| मुद्रित प्रति | : | १००० |
| मुद्रक | : | एक्सिस प्रिन्टर्स प्रा.लि. |

# विषय सूची



## अनुसूचीहरू

# नवीन परिवेशमा प्रेस काउन्सिलको दायित्व

आधुनिक नेपालले राजनीतिकरुपमा हासिल गरेको महान् उपलब्धी संविधानसभाबाट नयाँ संविधान निर्माण हो । संविधानसभाको राजनीतिक नारालाई सर्वस्वीकार्य बनाउने भूमिकामा नेपालको प्रेस जगत अग्रमोर्चामा रहेको थियो । पहिलो संविधानसभाको अवशान भएपनि दोस्रो संविधानसभामा सहभागी हुन नेपालीजनलाई नेपालको प्रेस जगत्ले प्रेरित गऱ्यो । त्यसको परिणामस्वरुप नेपालमा दोस्रो संविधानसभाको चुनाव भयो । राजनीतिक दलहरुको बीचमा संवादको वातावरण बनाउन उनीहरुका विचार र धारणा जनताबीच पुऱ्याउन र जनताको अभिमतलाई नीति निर्माण तहको नेतृत्वसम्म पुऱ्याउने भूमिका नेपालको प्रेस जगतले निर्वाह गऱ्यो । संविधान निर्माणअघि देशमा देखिएका विभिन्न द्वन्द्वहरुबीच सामाजिक सद्भाव कायम राख्न र महाभूकम्पका कारण जनताको मनोविज्ञानमा परेको असर कम गर्न नेपालका आमसञ्चार माध्यमले महत्वपूर्ण भूमिका निर्वाह गरे । प्रेस काउन्सिल नेपालले आधुनिक नेपालका यी दुई महत्वपूर्ण सुखद् र दुःखद् परिघटनामा नेपालको प्रेस जगतले खेलेको सकारात्मक भूमिकाको उच्च मूल्यांकन गर्दछ ।

नेपालको राजनीतिक संक्रमणकालले समग्र मिडिया क्षेत्रलाई पनि प्रभावित पाऱ्यो । साथै महाभूकम्पले पनि दीर्घकालीन असरसहित नेपालको मिडिया क्षेत्रलाई प्रभावित पाऱ्यो । राष्ट्रिय सद्भाव र मनोविज्ञान उच्च राख्दै नेपालको मिडिया क्षेत्र आफूमाथिका समस्याहरुविरुद्ध पनि संघर्षरत रह्यो । प्रेस काउन्सिल नेपाल समग्र आमसञ्चार क्षेत्रको नियमनकारी निकाय भएकाले यसले आमसञ्चार माध्यम तथा त्यहाँ कार्यरत सञ्चारकर्मीहरुका समस्या र पीडाहरु पनि बुझ्ने गरेको छ । प्रेस काउन्सिलका विभिन्न समिति-उपसमिति तथा सचिवालयबाट सञ्चारमाध्यम तथा सञ्चारकर्मीहरुको अवस्था तथा उनीहरुको कामहरुको निरन्तर अनुगमन भएको छ । त्यही अनुगमनको निष्कर्ष स्वरुप नै वर्तमान परिवेशमा नेपालको समग्र मिडिया क्षेत्रको अवस्था र भूमिका सकारात्मक रहेको प्रेस काउन्सिलले ठहर गरेको छ ।

प्रेस काउन्सिल आफ्नै साधन, श्रोत र जनशक्तिको अभाव, निरन्तर राजनीतिक संक्रमण तथा प्राकृतिक विपद्हरुबाट प्रभावित हुनु स्वाभाविकै थियो । त्यसको परिणामस्वरुप केही वर्षयता प्रेस काउन्सिलले आफ्ना नियमित  दैनिक काम कारवाहीबाहेकका रचनात्मक गतिविधि गर्न नसकेको विभिन्न क्षेत्रबाट गुनासो पनि थियो । तर यस बीचमा प्रेस काउन्सिल नेपालले आचारसंहिता अनुगमन, देशका विकट ठाउँहरुमा पुगेर मिडिया जागरण, सामाजिक सद्भाव हासिल गर्न मिडिया संवादहरु, अन्तर्राष्ट्रिय सम्बन्ध विस्तार, आचारसंहिताको पुनरावलोकनका लागि प्रमुख शहरमा महत्वपूर्ण गोष्ठीहरु आयोजना गऱ्यो । आचारसंहिता उल्लंघनका गम्भीर घटनाहरुमा प्रेस काउन्सिलले पीडितका पक्षमा आफैं सक्रिय भएर काम गऱ्यो । न्यू मिडियाका

रुपमा उदाएको अनलाइन पत्रकारितालाई व्यवस्थित गर्न र अनलाइन पत्रकारहरुले राज्य तथा गैर राज्यपक्षबाट सामना गरिरहेका समस्या समाधान गर्न पनि प्रेस काउन्सिलले अग्रता लियो । त्यसबाट नेपालको न्यू मिडियाले पनि संरक्षण तथा अभिभावकत्व प्राप्त गरेको छ । कानुनी संरक्षणका लागि कानुन बनाउन नेपाल सरकारलाई प्रेस काउन्सिलले सुझाव दिइसकेको छ । नयाँ संविधानमा प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताका पक्षमा प्रावधानहरु सुनिश्चित गर्न पनि प्रेस काउन्सिलले संविधानसभालाई सुझाव दियो । नयाँ संविधानले सुनिश्चित गरेका प्रेस तथा अभिव्यक्ति स्वतन्त्रताको अधिकारलाई अझै ग्यारेन्टी गर्न आवश्यक कानुन बनाउन नेपाल सरकार तथा व्यवस्थापिका संसद्लाई सुझाव दिइनेछ ।

प्रेस काउन्सिलले सूचना सञ्जालमा जोडिएको नेपाल र सूचना सञ्चालमा जोडिन बाँकी नेपालका पक्षमा पनि आफ्नो भूमिका निर्वाह गर्नेछ । त्यसका लागि नेपालका अतिदूर्गम स्थानका सञ्चारमाध्यम तथा सञ्चारकर्मीको हित प्रवर्द्धनदेखि उनीहरुको सीप, क्षमता र सकारात्मक सामाजिक प्रभाव बढाउन सक्दो सहयोग गर्नेछ । साथै आचारसंहितामा प्रतिवद्ध भएको नपाइएमा प्रेस काउन्सिल त्यस्ता सञ्चारमाध्यम तथा सञ्चारकर्मीहरुप्रति कडा हुनेछ । राज्य र गैर-राज्यपक्षबाट प्रेसमाथि हुने र हुनसक्ने क्रियाकलाप विरुद्ध प्रेस काउन्सिल जसरी उभिएको छ, प्रेसबाट जनतामाथि हुनसक्ने गलत क्रियाकलाप विरुद्ध पनि प्रेस काउन्सिल उत्तिकै कडा छ ।

नयाँ संविधान र त्यसले निर्दिष्ट गरेको नयाँ नेपालको फराकिलो मार्गमा यात्रा गर्न प्रेस काउन्सिलको पनि अब पुनःसंरचना आवश्यक छ । आमसञ्चार माध्यमको संस्थागत विकास र नयाँ राजनीतिक वातावरणबीच प्रेस काउन्सिलले के कस्तो भूमिका निर्वाह गर्नुपर्छ र के कसरी प्रेस काउन्सिलको पुनः संरचना गर्नुपर्छ भन्ने कुराको बहस गर्न र सुझाव दिन पनि प्रेस काउन्सिल सबैसँग अपिल गर्दछ । ४६ औं वार्षिकोत्सव मनाइरहँदा राजनीतिक संक्रमण तथा प्राकृतिक विपद्बीच आफ्नो महत्वपूर्ण समय दिएर प्रेस काउन्सिललाई सशक्त बनाउने बोर्ड सदस्यहरु तथा मेहनतपूर्वक आफ्नो सीप र क्षमता लगाएर प्रेस काउन्सिलको दैनिक कार्य सञ्चालनमा खट्ने सबै कर्मचारी साथीहरुलाई हार्दिक धन्यवाद ज्ञापन गर्न चाहन्छु ।

बोर्णबहादुर कार्की
अध्यक्ष
प्रेस काउन्सिल नेपाल
२०७२ असोज ६ गते

# सिक्दै र अभावमा टिक्दैको सञ्चारकर्म

**प्रारम्भ**

आव ०७१/०७२ को अन्त्य अर्थात् २०७२ को प्रारम्भमै बैशाख १२ गते आएको शक्तिशाली भूइँचालो र त्यसपछि क्रमशः गएका शक्तिशाली धक्काहरूले देशमा महासंकट र महासमस्या ल्याइदियो । यस महाविपत्तिबाट आमसञ्चारजगत अछुतो रहन सकेन । नेपाली मिडिया र श्रमजीवी पत्रकारले सधैँ एकै र उस्तै खालका समस्याहरूसँग जुध्नु त परेकै थियो । शक्तिशाली भूइँचालोले यसवर्ष नेपाली आमसञ्चारक्षेत्रमा नयाँ विपत्ति र समस्या थपिदियो । विपद्का कारण मिडिया र मिडियाकर्मी विस्थापित भए, केही पत्रकारको उठिबास लाग्यो । विभिन्न जिल्लाका पत्रिका, रेडियो तथा टिभीमा क्षति पुग्यो । भूइँचालोमा परी गोरखापत्रका खेलकुद संवाददाता सुमन भोम्जनको निधन भयो । यसक्रममा प्रेस काउन्सिल नेपालले चहराइरहेको घाउ निको पार्न

नसके पनि विपद्बाट अति प्रभावित जिल्लामा स्थलगत निरीक्षण गरी क्षतिको विवरण संकलन गर्नुका साथै पत्रकारको राहतको लागि मिडिया विकास कोषबाट प्रतिजिल्ला रु. ५० हजार सहयोग गरेर मलम लगाउने काम गऱ्यो ।

यी र यस्ता समस्या पार लगाउँदै नेपाली मिडिया र पत्रकार विपत्तिसँग मुकाविला गरी अगाडि बढे, बढिरहेका छन् । पत्रकारजगत समाचार सम्प्रेषण गर्न अहोरात्र खटिरहेका छन् । विपद्को समयमा केही सरकारी, गैह्र-सरकारी आमसञ्चारमाध्यमले खेलेको भूमिका निकै सकारात्मक देखियो । केही मिडियाले जानी-नजानी बहकिएर सन्त्रास फैलाउने ढंगले भूइँचालोबारे समाचार सम्प्रेषण गर्दा पत्रकार आचारसंहिता उल्लंघन हुनगयो । यस्तो अवस्थामा प्रेस काउन्सिल नेपालले अत्यन्तै संयमित भएर सबैप्रकारका आमसञ्चारमाध्यमहरूको ध्यानाकर्षण गरायो ।

## विकसित प्रवृत्तिहरू

विश्व मिडियाजगत धेरै पुराना र केही नयाँ प्रवृत्तिअनुसार सकारात्मक र नकारात्मक रूपमा अभ्यस्त भइरहेको देखिन्छ । छापामाध्यमदेखि सामाजिक सञ्जालसम्म आउँदा नेपाली मिडियामा पनि नयाँ प्रकारका प्रवृत्तिहरू मौलाएका छन् । हुँदै नभएको घटनालाई भएको भनेर कथा बुन्नदेखि नमरेको मानिसलाई मरेकै भनेर नक्कली लाशको तस्वीरसहित समाचार दिनसमेत भ्याएका छन् पत्रकार र आमसञ्चारमाध्यमले यसवर्ष ।

## सकारात्मक पक्ष

खासगरी गोरखे भारत जीवन, सुधासागर, गोरखापत्र साप्ताहिकबाट हुर्कंदै आएको नेपाली मिडिया अझ झ्याँगिँदै छ । सूचना विभागबाट २०७२ सालमा प्रकाशित मिडिया डाइरेक्ट्रीमा ०७१ साल चैत्र मसान्तसम्म सात हजार १९ वटा पत्रपत्रिका (दैनिक, अर्ध साप्ताहिक, साप्ताहिक, पाक्षिक, मासिक, द्वैमासिक, त्रैमासिक, चौमासिक, अर्धवार्षिक, वार्षिक) दर्ता भएको उल्लेख छ । प्रेस काउन्सिल नेपालको आव ०७१/०७२ को तथ्याङ्कअनुसार तीमध्ये देशभरबाट अहिलेसम्म ५९२ पत्रपत्रिका नियमित प्रकाशित हुँदैआएका छन् । सूचना तथा सञ्चार मन्त्रालयको २०७२ असार ९ गतेसम्मको अद्यावधिअनुसार नेपालभरि प्रसारित एफ.एम. रेडियोको संख्या ६२८, २०७२ बैशाख ३ गतेसम्मको अभिलेखअनुसार टिभीको संख्या ८२, २०७२ बैशाख ३ गतेसम्मको रेकर्ड अनुसार केबल प्रसारकहरूको संख्या ८४८, २०७२ असार २९ गतेसम्मको रेकर्डअनुसार डाउनलिङ्क प्राप्त च्यानलहरूको संख्या १३३, सिग्नल वितरकहरूको संख्या राष्ट्रिय/अन्तर्राष्ट्रिय गरी ३२ रहेको छ । काउन्सिलमा सूचीकरणका लागि नाम लेखाउने अनलाइनको संख्या २०७२ भदौ १० सम्म २१२ रहेको छ । मन्त्रालयको २०७२ बैशाख ३ गतेको तथ्याङ्कअनुसार नेपालमा २०७१/०७२ मा जाँचपास भएका चलचित्रको संख्या १६४ र यसै आवमा जाँच पास भएका स्वदेशी/विदेशी विज्ञापन चलचित्रको संख्या ६४ रहेको छ । नेपाल पत्रकार महासंघका अनुसार देशभरका पत्रकारको संख्या १० हजार ७७ (जसमा पुरुष ८ हजार २ सय १४ र महिला १ हजार ६ सय १३) रहेका छन् भने सूचना विभागका अनुसार २०७२ श्रावण १ गतेदेखि भाद्र २७ गतेसम्म २ हजार ५२ जनाले प्रेस प्रतिनिधि पत्र नवीकरण गराएका छन् ।

विधागत र भाषागत पत्रकारिताको विकास हुने क्रम दिनदिनै बढ्दै आएको छ । राजनीतिक, आर्थिक, साहित्यिक, शिक्षा, खेलकुद, कृषि, जलस्रोत, महिला, बालबालिका, सम्पदा, पर्यटन, सूचना-प्रविधि, धार्मिक, मनोरञ्जन, स्वास्थ्य, पुस्तकालय, तथ्याङ्क, प्रशासन आदि विधागत पत्रकारिताको विकास भएको छ । नेपाली भाषाका चार हजार ७४८, नेपाल भाषा (नेवारी)का ४४, तामाङका १०, थारुका १३, लिम्बूका ३, डोटेलीका ४, राईका २, संस्कृतका ५, मैथिलीका ४५, भोजपुरीका ६, उर्दूका ८, तिब्बतीका ३, हिन्दीका २४, अंग्रेजीका ४८४, नेपाली/अंग्रेजीका एक हजार २४४ र अन्य भाषाका ३७६ वटा पत्रपत्रिका दर्ता भएका छन् । त्यसमध्ये नेपाली, नेपाल भाषा (नेवारी), तामाङ, थारु, लिम्बू, डोटेली, राई, मैथिली, भोजपुरी, उर्दू, हिन्दी, अंग्रेजी, नेपाली/अंग्रेजी, तिब्बती, संस्कृत, भाषाका पत्रिकाहरू प्रकाशित हुँदैआएको काउन्सिलको तथ्याङ्कमा उल्लेख छ ।

नेपाली पत्रकारिता बजारका रेडियो, टिभी, अनलाइन आमसञ्चारमाध्यममा पनि विधागत पत्रकारिताको झलक आउन थालिसकेको छ । एफएम रेडियो, टेलिभिजन सरकारी, गैरसरकारी, सहकारीरूपमा सञ्चालित छन् भने सरकारले रेडियो नेपाल र नेपाल टेलिभिजनलाई सार्वजनिक प्रसारणका रूपमा अगाडि बढाउने गृहकार्य थालिसकेको छ । अवस्था विगतको तुलनामा निकै आशलाग्दो र चर्चा गर्नलायक छ । नाक, कान, घाँटी, मुटु, आँखा, टाउको, हात-गोडा, पेट, मृगौला आदि अङ्गका विशेषज्ञ चिकित्सकको विकास भएजस्तै विधागत पत्रकारिता जसरी नै विधागत-पत्रकारको विकास भइरहेको छ । आज राजनीति, अर्थ, साहित्य, शिक्षा, खेलकूद, महिला, अपराध, बालबालिका, सम्पदा, पर्यटन, सूचना-प्रविधि, धर्म, कला-मनोरञ्जन, स्वास्थ्य, विज्ञान, पुस्तकालय, तथ्याङ्क, प्रशासन, कूटनीति, कृषि आदि क्षेत्रमा छुट्टाछुट्टै पत्रकार जन्मिसकेका छन् । समाजमा हेपिएका, थिचिएका, पछि पारिएका भनिएका विभिन्न वर्ग, समूह, समुदाय, सम्प्रदायमा पत्रकारिता तथा आमसञ्चारप्रति रुचि जाग्न थालेको छ । यी समुदायका मानिस पत्रकारिता क्षेत्रमा लाग्न अग्रसर भएका छन् । पत्रकारिता तथा आमसञ्चार विषयको अध्यापन, तालिम, प्रशिक्षण, अनुसन्धान आदिमा मानिसको रुचि बढ्न थालेको छ । अझ महिलाजगत यसक्षेत्रमा बढी उत्साहित भएर लागेको पाइन्छ । पछिल्लोचरणमा पत्रकारिता तथा आमसञ्चार विषय पढेको, तालिम, प्रशिक्षण लिएको बढीजसो जनशक्तिको प्रवेश यसक्षेत्रमा भएकाले पत्रकार आचारसंहिताप्रति उनीहरू अलि सजग हुन थालेको देखिन्छ । अर्कोतिर जनताको हातहातमा मोबाइल, इन्टरनेटको पहुँच पुगेकाले बालकदेखि बृद्धासम्म स्वयं पत्रकारजस्ता भएका छन् । आमजनतालाई नै पत्रकार वा सञ्चारकर्मीभन्दा पनि कुनै फरक नपर्ने भएको छ । आफूले देखेका सूचना आदानप्रदान गर्न उनीहरूलाई कुनै सम्पादकले निर्देशन गर्न नपर्ने भएको छ । अर्थात् विना'गेटकिपिङ' नागरिक पत्रकारिता गरिरहेका छन् उनीहरूले । दूरसञ्चार प्राधिकरणका अनुसार अहिले नेपालको जनसंख्यामध्ये ४३ दशमलव ३६ ले इन्टरनेट प्रयोग गर्दछन् । त्यसमा मोबाइलबाट नेट चलाउनेको संख्या एक करोड १० लाख ३० हजार ४८०, नेट लाइन नै लिएर इन्टरनेट चलाउने १० लाख २० हजार दुई सय र सबै मिलाएर वायरलेस सेवाबाट इन्टरनेट चलाउनेको संख्या एक करोड १४ लाख ८८ हजार रहेको छ । मात्रात्मक दृष्टिकोण लगाउँदा नेपाली आमसञ्चार क्षेत्रमा विकास हुँदै गरेको सकारात्मक फड्को हो यो । यसबाट आमजनतामा जागरण ल्याउन महत्वपूर्ण भूमिका मिलिरहेको पाइन्छ ।

## नकारात्मक पक्ष

कुनै पनि क्षेत्रमा सकारात्मकसँगै नकारात्मक पक्षहरू पनि घालमेल हुनु स्वाभाविक हो । नेपाली मिडियाजगतको विकास जसरी भइरहेको छ त्यसरी नै विकृति, विसङ्गतिहरू पनि फस्टाएका छन् । सबैभन्दा प्रमुख कुरा नेपाली मिडियामा अहिले पनि लगानीमा पारदर्शिता छैन । मूल्य र मान्यताको भन्दा कर्पोरेट पत्रकारिताको बर्चश्व बढ्न थालेको छ । मिडिया 'पुँजीवाल' सीमित वर्गको हातमा छ । 'कालो पैसालाई सेतो बनाउन' मिडियामा लगानी हुने गरेको चर्चा आज पनि उत्तिकै छ । समाजलाई क्षणभरमै तरङ्गित पार्न सक्ने, कालोलाई गोरो, गोरोलाई कालो बनाउन र भनाउन सक्ने, हिरोलाई किरो र किरोलाई हिरो बनाउन सक्ने केही ठूला मिडिया मुठ्ठीभर वर्गको हातमा छ । मिडिया वा पत्रकारिता क्षेत्र व्यापार होइन, यो नितान्त शुद्ध व्यवसाय मात्र हो । व्यापारमा अस्वस्थ प्रतिस्पर्धा हुन्छ, व्यवसायमा नाफा/नोक्सानलाई मात्र ख्याल गरिन्छ । तर नेपाली पत्रकारितामा शुद्ध व्यवसायलाई भन्दा कर्पोरेट पक्ष र कर्पोरेट विचारलाई मात्र हेरिँदै आएको पाइन्छ । वस्तु बिकाउन जस्तो पायो त्यस्तो समाचार-सामग्रीलाई सुनियोजितरूपमा उठाउने गरेको देखिन्छ । मिडिया-मालिकहरूले आफ्ना समाचार वा समाचार-सामग्रीको मूल्यभन्दा पनि बिक्ने विषयलाई मात्र पस्कन लगाएको देखिन्छ । नेपाली मिडियामा पनि सम्पादकको अवशान भइसकेको अवस्था छ । खासगरी केही ठूला मिडिया हाउसका सम्पादकलाई मिडिया-मालिकसामु 'सेल्फ्सेन्सर' गर्न बाध्य पारिएको देखिन्छ । उनीहरू मालिकको मनोभावना बुझेर त्यसअनुसार नै विषय-वस्तु पस्कनमा माहिर भइसकेको आभाष पाइन्छ । यसअर्थमा विश्लेषण गर्दा सम्पादकीय स्वतन्त्रता सोझै 'सेल्फ्सेन्सरसिप' मा परेको भन्न सकिन्छ । अर्कोतिर राजनीतिक दल, स्वतन्त्र वा साना व्यक्ति वा समूहको लगानीबाट सञ्चालित मिडियाको लगानीको पारदर्शिता पनि खुल्न सकेको पाईंदैन ।

श्रमजीवी पत्रकारको समस्या ज्यूँको त्युँ छ । सरकारी (स्थायी र दरबन्दीमा रहेका बाहेक) र निजी आमसञ्चारमाध्यममा कार्यरत श्रमजीवी पत्रकार पुरानै समस्याबाट जेलिइरहेका छन् । प्रेस काउन्सिल नेपाल, नेपाल पत्रकार महासंघ, न्यूनतम पारिश्रमिक निर्धारण समितिलगायतका संस्थाले आवाज उठाउँदै आएको भए पनि श्रमजीवी पत्रकार ऐन कार्यान्वयन गराउन नसकिएको अवस्था छ । यसमा मिडिया सञ्चालकका दुईखाले विचार छन्, ठूला लगानीका मिडिया-मालिकहरूले पत्रकारलाई 'ढिलोचाँडो भोको नराखेको' दावी गरेका छन् भने साना लगानीका मिडिया सञ्चालकले सरकारले समानुपातिक विज्ञापन प्रणाली लागू नगर्दा आफ्ना मिडिया नै जीवन-मरणको अवस्थामा रहेकाले सो ऐन पालना गर्न असमर्थ भएको तर्क गर्ने गरेका छन् । श्रमजीवी पत्रकारहरूले भने रोजीरोटीको समस्या भएकाले आफ्नो क्षमता बढाउन र कुशल व्यवसायिक प्रदर्शनी गर्न नसकेको गुनासो गर्ने गरेका छन् । जसरी विश्वमा नै पत्रकारमाथि कुटपिट हुने, धम्की दिइने र मारिने क्रम रोकिएको छैन, त्यसरी नै त्यस्तै घटना नेपालका पत्रकारको हकमा पनि मत्थर भएको छैन । यसै वर्ष बंगलादेशका ब्लगरद्वय अभिजित रोय र अन्नत बिजोई दासको हत्या भएको छ । गत महिना भएको कैलालीको टीकापुर घटना र सीमांकनका नाममा देशभर भइरहेका आन्दोलनका क्रममा पत्रकारमाथि नै आक्रमण भइरहेका छन् । यद्यपि यी र दोस्रो संविधानसभाले यस आवको अन्त्यतिर संविधानको मस्यौदा जनतामाझ ल्याएको अवस्थामा 'पूर्ण'

## सञ्चारसम्बन्धी पछिल्लो अवस्था

| विवरण | संख्या | स्रोत |
|---|---|---|
| २०७१ चैत्र मसान्तसम्म दर्ता भएका पत्रपत्रिका | ७०१९ | सूचना विभाग |
| प्रकाशित पत्रपत्रिका | ७९५ | प्रेस काउन्सिल नेपाल |
| एफ.एम.रेडियो | ६२८ | सूचना तथा सञ्चार मन्त्रालय |
| टिभी | ८२ | सूचना तथा सञ्चार मन्त्रालय |
| अनलाइन | २२० | प्रेस काउन्सिल नेपाल |
| केबल प्रसारक | ८४८ | सूचना तथा सञ्चार मन्त्रालय |
| सिग्नल वितरक | ३२ | सूचना तथा सञ्चार मन्त्रालय |
| डाउनलिंक अनुमतिपत्र प्राप्त च्यानल | १३३ | सूचना तथा सञ्चार मन्त्रालय |
| आव ०७१/०७२ मा जाँच पास गरेका चलचित्र | १६४ | सूचना तथा सञ्चार मन्त्रालय |
| आव ०७१/०७२ मा जाँच पास गरेका विज्ञापन चलचित्र | ६४ | सूचना तथा सञ्चार मन्त्रालय |
| देशभरका पत्रकार | १०,०७७ | नेपाल पत्रकार महासङ्घ |
| सूचना विभागबाट परिचयपत्र नवीकरण गराउने पत्रकार | २०५२ | सूचना विभाग |
| स्वतन्त्र पत्रकार | १८८ | सूचना विभाग |
| विदेशी मिडियामा कार्यरत नेपाली पत्रकार | ४९ | सूचना विभाग |
| इन्टरनेट प्रयोगकर्ता | ४३.३६% | दूरसञ्चार प्राधिकरण |

प्रेस स्वतन्त्रता शब्द उल्लेख नभएको भन्दै प्रेस काउन्सिल नेपाल र नेपाल पत्रकार महासंघले सरकार र पार्टीहरूलाई घच्घच्याउँदै आएकै छ। तर श्रमजीवी पत्रकारको समग्र मुद्दाका विषयमा त्यति प्रभावकारी र बलियो नबनेको आलोचना पनि हुने गरेको छ। पछिल्लो समय सैद्धान्तिक मुद्दामा मात्र अल्मलिएको टीका-टिप्पणी हुने गरेका छन्। एकातिर विधागत पत्रकारिताको विकास हुनु सकारात्मक र प्रशंसनीय पक्ष हो भने अर्कोतिर विधागत पत्रकारिताका नाममा सानासाना पत्रकार संघ खोल्दा र समाचार स्रोत र मिडिया-मालिकसँग समन्वय गर्दा महासंघ नै कमजोर भएको र श्रमजीवी पत्रकारका मुद्दा ओझेलमा पर्ने गरेको तर्क गरिँदै आएको छ।

प्रसङ्ग यतातिर पनि तानिन आवश्यक छ। कुनै पनि राष्ट्रमा हरेक क्षेत्रका लागि आवश्यक पर्ने सक्षम र विज्ञ जनशक्ति उत्पादन गर्न औपचारिक शिक्षालयको व्यवस्था गरिएको हुन्छ। नेपालमा पत्रकार उत्पादन गर्ने निश्चित 'आलय' नभएको अवस्थामा २०३८ सालदेखि रत्नराज्य

लक्ष्मी क्याम्पस, प्रदर्शनीमार्ग, काठमाडौंमा प्रवीणता प्रमाणपत्र तहमा पत्रकारिता तथा आमसञ्चार विषयमा औपचारिक अध्ययन सुरु गरियो । त्यसपछि सरकारी र निजीस्तरका क्याम्पसहरूमा पत्रकारिता तथा आमसञ्चार र कार्यमूलक पत्रकारिता विषयसमेत अध्यन गराईदैँ आएको छ । अहिले देशका केही विद्यालयदेखि त्रिभुवन विश्वविद्यालय, पूर्वाञ्चलका कलेजहरूमा विभिन्न तहमा यसै विषयमा अध्ययन हुने गरेको छ । साथै, नेपाल प्रेस इन्स्टिच्युट, मिडिया प्वाइन्टलगायतका संस्थाले पत्रकारितासम्बन्धी तालिम दिँदै आएका छन् । पछिल्लो समय यसरी अध्ययन गरेका विद्यार्थी पत्रकारिता क्षेत्रमा प्रवेश गर्दा आचारसंहिताप्रति संवेदनशीलता र गाम्भीर्यता बढेको र पत्रकारितामा सुधारका बाछिटाहरू लाग्न थालेको पक्कै हो तर यसरी उत्पादन हुँदैआएको जनशक्तिको व्यवस्थापन नहुँदा, पत्रकारिता क्षेत्र सोचेजति मर्यादित नबन्दा र श्रमजीवी पत्रकारका रोजीरोटीकै समस्या हल हुन नसक्दा यो विषय पढ्नेहरूमा भविष्यप्रति नै निराशा आउन थालेको पाइन्छ । त्यसैले अहिले पत्रकारिता तथा आमसञ्चारमा योग्यता भएकाहरूको उचित व्यवस्थापन गर्न राज्यले प्रत्येक कार्यालयमा सञ्चार अधिकृत र जनसम्पर्क अधिकृतको व्यवस्था गर्नुपर्ने आवाज टड्कारोरूपमा उठिरहेको अवस्थालाई पनि नजरअन्दाज गर्न मिल्दैन सम्बन्धित पक्षले ।

सबै मिडियालाई एउटै घानमा हालेर आलोचना गर्न त हुँदैन तर समग्रमा नेपाली मिडियामा लागिरहेका रोगहरू अझै निको भएको पाइँदैन । जस्तै,

- चोरी र हुवहु पत्रकारिताको बिगबिगी, अनलाइनमा अझ बढी, कपी वा चोरी पत्रकारिताबाट नेपाली मिडिया अझै ग्रसित छ । पत्रपत्रिका हुबहुमा पर्ने क्रम जारी छ ।
- एउटा मिडियाले कुनै विषय दिएपछि त्यसको वास्तविकता नबुझी त्यसैलाई आफ्नो मिडियाबाट पनि सम्प्रेषण गर्ने 'व्हीम पत्रकारिता' र 'व्हीम पत्रकार'को संख्या अझै बढ्न थालेको छ ।
- एकातिर मिडियालाई प्रयोग गरेर वा आफैँले पैसा तिरेर विज्ञापन सम्प्रेषण गरी सोझा सीधा जनता लुट्ने, ठग्ने क्रम बढेकै देखिन्छ भने अर्कोतिर ठूला र पहुँचवालाले मात्र विज्ञापन पाउने गरेको आमपत्रकारको जनगुनासो उस्तै छ ।
- नेपालमा जो पनि पत्रकार बन्न पाउने र पत्रकार बन्ने स्पष्ट मापदण्ड नहुँदा पत्रकारको स्तर निर्धारण हुनसकेको छैन ।
- सेवामुखीभन्दा मेवामुखी, गम्भीरभन्दा 'आफ्नोकारिता', 'हनुमानकारिता', 'अनुमानकारिता' र 'हावाकारिता' हावी छ ।
- नेपालका धेरै मिडियाले राष्ट्र र राष्ट्रियताप्रति खासै चासो दिई संवेदनशील भएर सामग्री दिएको पाइँदैन ।
- व्यक्तिको गोपनीयता, मानसम्मान र इज्जतप्रति खेलवाड गर्ने पत्रकारिता कायमै छ ।
- अनलाइन मिडिया र ब्लगको बाढी नै लागेको छ, तिनीहरूमध्ये धेरै झन् हावादारी देखिएका छन् ।
- सामाजिक सञ्जाल कि जञ्जाल ? भनी छुट्ट्याउनै सकस छ ।
- कर्तव्यभन्दा अधिकार मात्र खोज्ने पत्रकारिता कायमै छ ।
- सर्वोच्च अदालतले फैसला गरिसक्दा पनि समानुपातिक विज्ञापनको समस्या उस्तै छ, विज्ञापनमा काखा र पाखाकै व्यवहार छ भन्ने जनगुनासो आइ नै रहेको छ ।

- साना लगानीका मिडियाको कमजोर अवस्था छ ।
- जिल्लागत र स्थानीय पत्रकारिताका पनि समस्या छन् ।
- बिट पत्रकारिताका नाममा समाचार 'किल' गर्ने प्रवृत्ति हावी छ ।
- समावेशीकरणको अझै कमी छ ।
- हरेक लेख/रचना र समाचारमा एकाधिकार, एकैप्रकारका व्यक्तिहरूको रजाइँ वा 'सिण्डिकेट' छ ।
- राजनीतिक पत्रकारिता झनै छुद्र देखिन्छ, अझै सुध्रिएको पाइँदैन ।
- अझै डाम्ने र ठोक्ने पत्रकारिताको हालीमुहाली छ ।

## के के गऱ्यो काउन्सिलले ?

सधैँका आर्थिक वर्ष झैँ आव २०७१/२०७२ मा पनि प्रेस काउन्सिल नेपालबाट पत्रकार आचारसंहिता, राष्ट्रियता, पत्रकारका हकहित तथा आन्तरिक सबलीकरणका पक्षमा विविध कार्यक्रमहरू आयोजना गरिए ।

यसवर्ष पुँजीगततर्फ  कर्मचारी अवकास कोष वृद्धि तथा फर्निचर/फिक्चर्स खरिदसम्बन्धी कार्यक्रम रहेको थियो । यसअनुसार आ.व. २०७१/२०७२ मा सरकारबाट प्राप्त बजेटबाट रु. ३० लाख रुपैँयाँ सो कोषमा जम्मा गरिएको छ भने स्वीकृत कार्यक्रमअनुसार फर्निचर, फिक्चर्स र मेशिनरी औजार खरिदसम्बन्धी कार्य सम्पन्न भएको छ । काउन्सिलको नवनिर्मित मञ्च निर्माण, साधारण कुर्सी, हेभी कुर्सी, अफिसर टेबुल, सोफा सेट, काठको बुक केस ऱ्याक निर्माण, बुक केस ऱ्याक, स्टीलको दराज, कार्पेट/पर्दा खरिद गरिएको छ ।

चालुगत प्रगतिअन्तर्गत आचारसंहिता अनुगमन तथा जागरण, पत्रपत्रिका वर्गीकरण, मिडिया संवाद  र मिडिया अनुगमन, मिडिया अद्यावधिकरण, अनलाइन सूचीकरणको प्रारम्भलगायतका कार्यसम्पादन गरिए । पत्रकार आचारसंहिता उल्लंघनका विषयमा काउन्सिल सचिवालयबाट अनुगमन कार्य भइरहेको छ । पत्रपत्रिकामा प्रकाशित समाचारविरुद्ध उजुरी पर्ने क्रम जारी नै छ । यसवर्ष ५१ वटा उजुरी परेका छन् भने ४ वटा जनगुनासा प्राप्त भएका छन् । यस्ता उजुरी छापामाध्यम, विद्युतीय माध्यम, अनलाइन, व्लग, सामाजिक सञ्जालसँग सम्बन्धित छन् । पत्रकारितासँग सम्बन्धित तर सीधै काउन्सिलको क्षेत्राधिकारभित्र नपर्ने खालका उजुरी पनि परेको देखिन्छ । काउन्सिलले यसपालि स्टीकर/आचारसंहिता, स्पाइरल नोट बुक लगायतका प्रकाशनहरुसहित प्रभातफेरी समेत गरी आचारसंहिता जागरण नामक नयाँ कार्यक्रम आयोजना गऱ्यो । यस्ता कार्यक्रम कञ्चनपुर, कैलाली, बाँके, दाङ, कपिलवस्तु, चितवन, मकवानपुर, धनुषा, सिराहा, झापा तथा मुगु जिल्लामा आयोजना भए । ब्यानर, स्टिकर, नोटकपी आदि छपाई पत्रकार आचारसंहिताको व्यापक प्रचारप्रसार गर्ने कार्य यसै अवधिमा गरियो । यसलाई चालु आर्थिक वर्षमा पनि निरन्तरता दिइएको छ । आमसञ्चारमाध्यमको द्रूततर विकास भइरहेको आजको अवस्थामा पत्रकार आचारसंहिता-२०६०(संशोधित तथा परिमार्जित-२०६४) मा समयसापेक्ष संशोधन तथा परिमार्जन प्रमुख विषय बनेर देखापरेको छ । पत्रकारिता तथा आमसञ्चार क्षेत्रसँग सम्बन्धित विभिन्न क्षेत्रबाट यससम्बन्धी सुझावहरू आइरहेको अवस्थामा काउन्सिल निकै गम्भीर भएर यसमा लागिरहेको छ । यसैक्रममा युनेस्को काठमाडौँसँगको सहकार्यमा मोरङ (विराटनगर),

धुलिखेल, काठमाडौं र कास्की (पोखरा) मा सरोकारवालाहरूसँग बृहत् छलफल र अन्तर्क्रिया गरी प्राप्त सुझावका आधारमा विशेषज्ञद्वारा प्रारम्भिक मस्यौदा तयार पारिएको छ ।

यस्तै २०७२/१/१३ गते आमसञ्चारमाध्यमहरुलाई उद्धार र राहत कार्यमा सहयोग पुग्नेगरी समाचार सम्प्रेषण गर्न प्रेस विज्ञप्तीमार्फत् ध्यानाकर्षण गराउने, २०७२/१/१७ मा सञ्चारमाध्यमहरुमा फोटो/दृश्य प्रकाशन प्रशारण गर्दा पत्रकार आचारसंहितामा ध्यान पुऱ्याउन, विभत्स दृश्य प्रकाशन/प्रशारण नगर्न प्रेस विज्ञप्तीमार्फत ध्यानाकर्षण गराउने, २०७२/१/१२ गतेको शक्तिशाली भूइँचालो र तत्पश्चात पराकम्पनको समाचार सम्प्रेषणको क्रममा कतिपय विदेशी सञ्चारमाध्यमहरुले राष्ट्रिय अखण्डता, सार्वभौमसत्तामा खलल पार्ने, पीडितलाई पीडा पुग्नेगरी सूचना सम्प्रेषण गरेको, विभत्स दृश्य प्रकाशन/प्रशारण गरेको सन्दर्भमा काउन्सिलको गम्भीर ध्यानाकर्षण भई उक्त विषयमा नेपाल सरकारलाई खबरदारी गर्ने निर्णयानुसार पहल गरेको, केही अनलाइन तथा व्लगले ज्योतिषका भविष्यवाणी भन्दै भूइँचालोसम्बन्धी विभिन्न अवैज्ञानिक/अप्रमाणित समाचार सम्प्रेषण गरी त्रास फैलाउने गरेकाले विपद्को समयमा समाचार सम्प्रेषण गर्दा संयमित रहन र पत्रकार आचारसंहिता पालना गरी जिम्मेवार र उत्तरदायी हुन विभिन्न अनलाइनको ध्यानाकर्षण गराएको, भूकम्पपश्चात् सञ्चारमाध्यमहरुको स्थिति अवलोकनको लागि उपत्यकामा केही सञ्चारगृहको स्थलगत अवलोकन गरेको हो ।

मिडियालाई आचारसंहिता छाप्न तथा प्रसारण गर्न लगाउन पत्राचार गरिएको छ । आचारसंहिता अनुगमनलाई प्रभावकारी र व्यवस्थित बनाउने हेतुले अन्तर-कर्मचारीलाई पत्रकार आचारसंहितासम्बन्धी अभिमुखीकरण तालिम दिइएको छ । काउन्सिल सचिवालयमा छापा र विद्युतीय सञ्चारमाध्यमहरुको आचारसंहिता अनुगमनको लागि छुट्टाछुट्टै कार्यसमूह गठन भएको छ । ७५ वटै जिल्लामा आचारसंहितासम्बन्धी प्रशिक्षक उत्पादन गर्ने लक्ष्यअनुरुप उपत्यकासहित १५ जिल्लाका ९ जना महिला र ४१ पुरुष गरी ५० जना पत्रकारलाई पत्रकार आचारसंहिता प्रशिक्षक प्रशिक्षण (TOT) तालिम दिइएको छ ।

सामयिक अनुसन्धान तथा स्थलगत निरीक्षण र अध्ययनमा पनि काउन्सिल सक्रिय बन्दै आएको छ । सरकारको सेवा केन्द्र विस्तार गर्ने निर्णयको विरोधमा रौतहट जिल्लाको गौरमा भएको आन्दोलनको क्रममा प्रेस लक्षित आक्रमण भएका गुनासा आएपछि स्थलगत रूपमा त्यहाँको वस्तुस्थिति अध्ययन गर्न २०७१ चैत्र २४ गते सदस्य चन्द्रदेव कामतीको संयोजकत्वमा महासंघका केन्द्रीय सदस्य एवं मध्यमाञ्चल संयोजक शीतलप्रसाद महतो र महासंघ रौतहट शाखा अध्यक्ष शैलेन्द्र गुप्ता सदस्य रहेको मिशन टोली गठन गऱ्यो ।

प्रेस काउन्सिल ऐनको दफा १० ले वितरण संपरीक्षण समितिलाई छुट्टै अस्तित्व भएको समितिका रूपमा परिभाषित गरे पनि काउन्सिल पत्रपत्रिकाको वर्गीकरण गर्न विवश हुँदै आएको छ । धेरैजसो जनशक्ति यही कार्यमा खटिनुपर्ने हुँदा काउन्सिलको मूल कार्य आचारसंहिता अनुगमन ओझेलमा पर्दै आएको छ । र, पनि यस वर्ष प्रेस काउन्सिलले वर्गीकरणमा परेको जाम हटाई आव २०६९/०७० र २०७०/०७१ को पत्रपत्रिकाको वर्गीकरण कार्य सम्पन्न गरेको छ । राष्ट्रिय, क्षेत्रीय र स्थानीय गरी तीन तहमा वर्गीकरण हुने गरेअनुसार आर्थिक वर्ष २०६९/०७० मा ८८१ र २०७०/०७१ मा ८७५ पत्रपत्रिकाको वर्गीकरण गरिएको छ। पत्रपत्रिकाको मूल्याङ्कन

र वर्गीकरणका क्रममा देखिएका त्रुटीउपर ध्यान दिई सम्बन्धित पत्रिकालाई सचेतसमेत गराइएको छ ।

मिडिया र पत्रकारले समाजमा खेलिरहेको भूमिकालाई दृष्टिगत गरी सर्लाहीमा सामाजिक सद्भावका लागि मिडियाको भूमिका, कास्की र काठमाडौँमा विपद्कालमा साना लगानीका सञ्चारमाध्यमको अवस्था र भूमिका तथा अनलाइन पत्रकारिता र विपद्काल विषयमा मिडिया संवाद कार्यक्रम गरिएको छ । यसैवर्ष मेची, भेरी अञ्चल र मोरङ, सुनसरी, धनकुटा, रसुवा, नुवाकोट, धादिङ, काभ्रेपलाञ्चोक, बारा, पर्सा, चितवन, मकवानपुर, नवलपरासी, रुपन्देही, बाँके, बर्दिया, जाजरकोट, मोरङ, लमजुङ, बाग्लुङ, पर्वत, स्याग्दी, डडेलधुरा, कैलाली, सुर्खेत, मुगु, जुम्ला, बर्दिया, गोरखा र सुनसरी जिल्लामा मिडिया अनुगमन गरिएको छ ।

पत्रकार कल्याण कोषबाट यसवर्ष काठमाडौं-११, सुनसरी-१, मोरङ-३, रसुवा-२, गुल्मी-१, ललितपुर-१, सुर्खेत-२, पर्वत-१, धनुषा-२, स्याङ्जा-२, कास्की-१, झापा-६, मकवानपुर-१, बागलुङ-१, सिन्धुपाल्चोक-१, रामेछाप-१, चितवन-२ र बाँकेका १ गरी ४० जना बिरामी पत्रकारलाई औषधि उपचारका लागि रु. तीन लाख ३१ हजार आर्थिक सहयोग उपलब्ध गराइएको छ । प्रेस काउन्सिल नेपालअन्तर्गत रहेको मिडिया विकास कोष उपसमितिले मोफसलको पत्रकारिता क्षेत्रको विकासका लागि अफसेट प्रेस राख्न, एफएम उपकरण खरीद गर्न र मिडिया क्षेत्रको अन्य विकास गर्ने उद्देश्यले लिएको बैंक ऋणमा व्याज अनुदान उपलव्ध गराउँदै आएकोमा यस वर्ष मकवानपुरको रेडियो निकास, मुस्ताङको मुस्ताङ अफसेट प्रेस, पाल्पाको नव जनचेतना दैनिक, पर्वतको न्यु कालिगण्डकी अफसेट छापाखाना, ओखलढुङ्गाको रमाइलो सामुदायिक रेडियो, सल्यानको सञ्चार केन्द्र, चितवनको चितवन पोष्ट, मोरङको स्वतन्त्र विराट साप्ताहिक, रेडियो मध्यपश्चिम एफ.एमलाई यस्तो सहयोग प्रदान गरिएको छ भने पत्रकार आचारसंहितासम्बन्धी विषयमा शोधपत्र लेखनका लागि तीन जना शोधार्थीलाई छात्रवृत्ति दिइएको छ। वैशाख १२ गतेको शक्तिशाली भूईंचालो र त्यसपछिका पराकम्पनबाट अतिप्रभावित उपत्यकाबाहिरका दोलखा, रामेछाप, ओखलढुंगा, सिन्धुपाल्चोक, काभ्रेपलाञ्चोक, रसुवा, नुवाकोट, धादिङ, गोरखा, लमजुङ, सिन्धुली, सोलुखुम्बु र मकवानपुर जिल्लाका पत्रकारलाई पत्रकार महासंघ जिल्ला शाखामार्फत ३ लाख २० हजार आर्थिक सहयोग गरिएको छ ।

प्रेस काउन्सिल नेपालले पत्रपत्रिकाको हाजिर अभिलेख अद्यावधिक गर्दै आएको छ । वर्गीकरणका लागि यस आ.व.को अन्त्यसम्ममा दर्ता भएका तीन हजार ७३१ पत्रपत्रिकामध्ये ७९५ मात्र प्रकाशित हुने गरेका छन् । त्यसमा पनि नियमित ५९२ र अनियमित २०३ रहेका छन् । नियमितमा पनि दैनिक १३५, अर्धसाप्ताहिक २, साप्ताहिक ४४२ र पाक्षिक १३ रहेका छन् । यस्तै ५५ वटा दैनिक, एउटा अर्धसाप्ताहिक, १३५ वटा साप्ताहिक र १२ वटा पाक्षिक अनियमित रहेका छन् । यो आलेख तयार पार्दासम्म २२० वटा अनलाइन सूचीकरणका लागि प्राप्त भएका छन् । पत्रपत्रिका स्क्यानिङ गरिँदै आएको छ । काउन्सिलले 'संहिता' त्रैमासिक जर्नल र वार्षिक प्रतिवेदन प्रकाशन गर्दैआएको छ । विभिन्न पत्रपत्रिकाहरुमा प्रकाशित समाचार, लेख, रचना एवं सूचनाहरुको दैनिकरूपमा क्लिपिङ तयार पारी आफ्ना ग्राहकमा प्रेस क्लिपिङ सेवा उपलब्ध गराइएको छ। काउन्सिलले पुस्तकालयलाई व्यवस्थित गराउने उद्देश्यले पुस्तक संकलन गरिरहेको छ भने पत्रकारको तालिम, पत्रकारिता क्षेत्रका विद्यार्थी, विभिन्न संघ/संगठनसँगको अन्तर्क्रिया आदिजस्ता सेवामा काउन्सिल अग्रसर भएर लागिरहेको छ ।

## राष्ट्रियताप्रति गम्भीर

यसैसाल बैशाख १२ गते गोरखाको बार्पाक केन्द्रविन्दू बनाई ७.६ रेक्टरस्केलको शक्तिशाली भूइँचालो गएपछि कतिपय विदेशी आमसञ्चारमाध्यमले नेपाली राष्ट्रियता नै दुखाउने गरी अफवाह फैलाए । जसले गर्दा जनतामा निराशा पैदा हुनपुग्यो । नेपाली केही मिडियाले पनि त्यस्तै लहैलहैमा लागेर समाचार सम्प्रेषण गरे । त्यस समयमा काउन्सिलले ज्यादै महत्वपूर्ण भूमिका खेल्यो । पहिलो भूमिका हो-नेपाली राष्ट्रियता दुखाउने गरी समाचार सम्प्रेषण गर्ने विदेशी मिडियाको सम्बन्धमा नेपाल सरकारको ध्यानाकर्षण गराउने काम दोस्रो हो, जथाभावी समाचार सम्प्रेषण गर्ने नेपालका केही अनलाइन लगायतका मिडियामाथिको खबरदारी ।

## मित्रराष्ट्रका काउन्सिलबीच सम्बन्ध स्थापना

काउन्सिलले विदेशी मित्रराष्ट्रका प्रेस काउन्सिलसँग सम्बन्ध स्थापित गर्ने कार्य थालेको छ । यसैक्रममा प्रेस काउन्सिल नेपाल (Press Council Nepal) र भारतीय प्रेस काउन्सिल (Press Council of India) बीच सु-सम्बन्ध कायम गरी दुई देशको पत्रकारिताबारे अनुभव आदान-प्रदान गर्ने तथा जिम्मेवार र उत्तरदायित्वपूर्ण पत्रकारिताको विकास गरी राष्ट्र निर्माणमा योगदान पुर्‍याउने प्रमुख उद्देश्यले दुवै देशका प्रेस काउन्सिलको अध्यक्षबाट (Memorandum of Understanding (MOU) मा २०७१ असोज ६ गते



*श्रीलंकाको सञ्चार तथा संसदीय मामिला मन्त्रालयमा मन्त्री र सचिवसँग काउन्सिलका अन्तर्राष्ट्रिय विभाग प्रमुख किशोर श्रेष्ठ र नेपाली दूतावासकी प्रतिनिधि तारा शर्मा ।*

काउन्सिलको वार्षिकोत्सवको अवसरमा हस्ताक्षर गरिएको छ । साथै, प्रेस काउन्सिल नेपालको सचिवालयमा काउन्सिल अध्यक्ष र पदाधिकारी तथा प्रेस काउन्सिल श्रीलंकाका प्रतिनिधिबीच भेटवार्ता भई यसै उद्देश्यले मेमोरेण्डम अफ अण्डरस्ट्याण्डिङ गर्नेबारे प्रस्ताव गरिएको छ । दुई पक्षीय सम्बन्धबारे अन्तर्राष्ट्रिय विभाग प्रमुख किशोर श्रेष्ठ र श्रीलंकाका सञ्चारमन्त्री र सचिवबीच कोलम्बोमा प्रत्यक्ष भेटवार्ता भएको छ ।

## समस्या र समाधान

**क्षेत्राधिकारसम्बन्धी समस्याः**

प्रेस काउन्सिल ऐन, २०४८ को प्रस्तावनामा 'पत्रकारिताको पेशागत उच्चतम आचरण कायम राखी स्वस्थ, स्वतन्त्र र उत्तरदायी पत्रकारिताको विकास तथा सम्बर्द्धनका लागि' र दफा तीनमा स्वस्थ पत्रकारिताको विकासका लागि काउन्सिल जरुरी हुने कुरा उल्लेख छ । यसैगरी दफा सातअनुसार काउन्सिलको काम, कर्तव्य र अधिकार निम्नानुसार हुनेछ-

- पत्रकारितासम्बन्धी नीतिलाई समयसमयमा अवलोकन गरी सम्बन्धित क्षेत्रको रायसल्लाह लिई नेपाल सरकारलाई सुझाव दिने
- स्वस्थ पत्रकारिताको विकास गर्न पत्रकारितासम्बन्धी आचारसंहिता तयार गरी लागू गर्ने
- पत्रकारिताको विकासका लागि नेपाल सरकारलाई सुझाव दिने
- पत्रकारिताको वितरण स्थितिको अद्यावधिक अभिलेख राख्ने
- पत्रपत्रिकामा प्रकाशित समाचारसँग सम्बन्धित विषयलाई लिएर कसैले काउन्सिलमा उजुरी दिएमा सो सम्बन्धमा आवश्यक कारबाही गर्ने
- पत्रपत्रिकाको गतिविधि एवं वस्तुस्थितिबारे अध्ययन र मूल्याङ्कनसहितको वार्षिक प्रतिवेदन नेपाल सरकारसमक्ष पेश गर्ने
- पत्रपत्रिकामा प्रकाशित असामाजिक र आपत्तिजनक कुराहरूको सम्बन्धमा छानबिन गर्ने

यसैगरी दफा ५ मा काउन्सिलको उद्देश्यलाई यसरी प्रष्ट पारिएको छः

- स्वस्थ पत्रकारिताको विकासको लागि उपयुक्त वातावरण सिर्जना गर्ने
- प्रेस स्वतन्त्रताको दुरुपयोग हुन नदिन पत्रकारितासम्बन्धी आचारसंहिता तोक्ने
- प्रेस र नेपाल सरकारबीच सौहार्द्रपूर्ण सम्बन्ध कायम राख्ने
- सार्वजनिक नैतिकता र नागरिकहरूको मर्यादा कायम राख्न लगाउने
- प्रेसको स्वतन्त्रता र पत्रकारिताको मर्यादामाथि हस्तक्षेप हुन नदिन प्रयत्नशील रहने

माथि उल्लिखित प्रावधानबाट काउन्सिलको क्षेत्राधिकार स्पष्ट भएको देखिन्छ । तर काउन्सिलले कतिपय अवस्थामा धेरै क्षेत्रमा हात हाल्नुपरेकाले चुस्तदुरुस्त कार्य हुनसकेको पाईदैँन । मानौँ कि प्रेस काउन्सिल नेपाल यस्तो सानो भाँडो हो, जहाँ जे पनि अटाउनैपर्ने बाध्यता छ । सरकारमा बस्ने, नीति-निर्माण बनाउनेहरूमा समेत मिडियासँग सम्बन्धित सम्पूर्ण विषयको ठेक्का काउन्सिलले नै लिनुपर्छ भन्ने बुझाई रहेको पाइन्छ ।

सो ऐनको दफा ४ ले काउन्सिललाई स्वशासित संस्थाका रूपमा परिभाषित गरे पनि व्यवहारमा काउन्सिललाई सूचना तथा सञ्चारमन्त्रालयको एउटा इकाईजस्तो बनाइँदै आएको छ । यसलाई व्यवहारमा साँच्चैको स्वायत्त संस्था बनाउनुपर्ने अर्को चुनौती रहेको छ ।

मिडियाको आगमन बढ्दो छ । छापामाध्यम नै आचारसंहिताप्रति पूर्णतया गम्भीर नभइरहेको अवस्थामा अनलाइन मिडिया र सामाजिक सञ्जालको तीव्र आगमनले समाज नै सकारात्मक/नकारात्मक रूपमा तरङ्गित भइरहेको छ । अनुगमन र अनुसन्धान कार्यलाई व्यवस्थित र प्रभावकारी बनाउन काउन्सिलमा अहिलेसम्म छापा (छापामा पनि दैनिक, साप्ताहिक, मासिक, पाक्षिक, क्षेत्रगत, भाषागत आदि) र प्रशारण (प्रशारणमा पनि रेडियो, एफ.एम. रेडियो, टिभी, अनलाइन, सामाजिक सञ्जाल, समाचार समिति, चलचित्र आदि) माध्यमको अनुगमनका लागि छुट्टाछुट्टै एकाइ हुनुपर्ने थियो । तर आवश्यक जनशक्तिको अभाव र क्षेत्राधिकार बाहिरका कार्यबोझको कारण चाहँदाचाहँदै व्यवहारतः प्रेस स्वतन्त्रताको प्रवर्द्धन र पत्रकार आचारसंहिता अनुगमनमा मात्र केन्द्रित हुन पाइरहेको छैन काउन्सिल । अनलाइनसहित सबै मिडियाको प्रभावकारी र द्रूतरूपमा अनुगमन गर्न भ्याइरहेको छैन । किनकि थोरै जनशक्तिले पत्रकारका चोरी वा ठगी, मुद्दा-मामिला, कानुनी राय दिनुपर्नेजस्ता कार्य गर्नुपर्ने अवस्था छ । यद्यपि काउन्सिलको ऐन, विनियमावली, सांगठानिक संरचनामा परिवर्तन गरी आवश्यक दरबन्दी थप गराइएमा, विद्यमान पत्रकार आचारसंहितामा रहेको कारबाही प्रक्रिया फराकिलो बनाई अलि कडा दण्डको व्यवस्था गरिएमा र मुलुकमा संघीय राज्यहरू स्थापना हुन लागेको अवस्थामा कम्तिमा पनि प्रत्येक राज्यमा प्रेस काउन्सिलका एक/एकवटा संघीय कार्यालय खडा भएमा काउन्सिल पत्रकारितालाई अझ स्वस्थ, मर्यादित, जिम्मेवार बनाउन सक्षम हुनेछ ।

अतः सारांशमा काउन्सिलसामु **ऐन संशोधनसम्बन्धी, नीतिगत, जनशक्तिसम्बन्धी, मिडिया अनुगमन, राष्ट्रिय एकता अभिवृद्धि, प्रेस स्वतन्त्रताको संरक्षण, सम्बर्द्धन, पत्रकारको व्यावसायिक क्षमता अभिवृद्धि** आदि चुनौति रहेका छन् ।

## आगामी कार्यभार र कार्ययोजना

- ऐन, संशोधनमा परिमार्जन वा संशोधनका लागि पहल
- आचारसंहिता शाखाको विस्तार, उपकरण खरिद
- आचारसंहिता संशोधन तथा परिमार्जन
- विज्ञापन र चलचित्रहरूको समेत छुट्टै अनुगमन
- प्रेस परीक्षा
- मिडिया संग्रहालय स्थापना

## र. अन्त्यमा

दोस्रो संविधानसभामार्फत नयाँ संविधान जारी हुँदै गर्दा विभिन्न असन्तुष्टीका कारण मुलुकमा द्वन्द्व चर्किरहेको र मुलुक अत्यन्तै सङ्गीन मोडबाट अघि बढिरहेको वर्तमान अवस्थामा सरकार, असन्तुष्ट पक्षहरू, सम्पूर्ण मिडियाजगत र आम जनता संवेदनशील र गम्भीर भई एकताको भावनाबाट अघि बढेमा मुलुक दुर्घटनाबाट बच्न सक्नेछ । प्रेस काउन्सिल नेपाल सम्बन्धित सबै पक्षलाई गम्भीर भई वार्ता र संवादबाट नै आफ्ना समस्या, असन्तुष्टी, असन्तोष, फरक मतहरूको संबोधन गर्न आग्रह गर्दछ। साथै, सम्पूर्ण मिडियाजगतलाई मर्यादित, जिम्मेवार र उत्तरदायी भई आफ्ना मिडिया र मिडिया सामग्रीको अभ्यास र प्रयोग गर्न आव्हान गर्दछ।

परिच्छेद
१

# समिति तथा उपसमितिहरु

प्रेस काउन्सिल ऐन र विनियमावलीबाट व्यवस्थित समिति, उपसमिति र त्यसमा प्रतिनिधित्व गर्ने पदाधिकारीहरुको विवरण निम्नानुसार रहेको छ :

**क. वितरण सम्परीक्षण समितिः**

| | | |
|---|---|---|
| १. | श्री लक्ष्मीविलास कोइराला, महानिर्देशक सूचना विभाग | अध्यक्ष |
| २. | श्री यदुप्रसाद पन्थी, प्रतिनिधि, सञ्चार मन्त्रालय | सदस्य |
| ३. | श्री मनऋषि धिताल, प्रतिनिधि, प्रेस काउन्सिल नेपाल | सदस्य |
| ४. | श्री मदन कुमार निरौला, प्रतिनिधि, नेपाल चार्टर्ड एकाउन्टेन्ट्स् संस्था | सदस्य |
| ५. | श्री रुद्रप्रसाद भट्टराई, प्रतिनिधि, नेपाल विज्ञापन एजेन्सी संघ | सदस्य |
| ६. | श्री निर्मलकुमार पौडेल, प्रतिनिधि, नेपाल चेम्बर अफ कमर्स | सदस्य |
| ७. | आमन्त्रित डा. श्री महेन्द्र बिष्ट, श्री मुरलीप्रसाद यादव, श्री सुदर्शन आचार्य | आमन्त्रित |
| ८. | मुख्य अधिकृत श्री झविन्द्र भुसाल | सचिव |

**ख. प्रेस काउन्सिल गोपालदास पत्रकारिता पुरस्कार समितिः**

| | | |
|---|---|---|
| १. | श्री बोर्णबहादुर कार्की | अध्यक्ष |
| २. | श्री महेन्द्र बिष्ट, अध्यक्ष नेपाल पत्रकार महासंघ | सदस्य |
| ३. | श्री चन्द्रकिशोर झा, प्रतिनिधि, प्रेस काउन्सिल | सदस्य |
| ४. | श्री लक्ष्मीविलास कोइराला | सदस्य |
| ५. | श्री रामकृष्ण रेग्मी | सदस्य |
| ६. | प्रशासन प्रमुख, श्री झविन्द्र भुसाल | सदस्य |
| ७. | | सचिव |

**क. पदपूर्ति समितिः**

| | | |
|---|---|---|
| १ | श्री बोर्णबहादुर कार्की | अध्यक्ष |
| २ | श्री लक्ष्मीविलास कोइराला | विज्ञ सदस्य |
| ३ | श्री लक्ष्मी जोशी /नारायणप्रसाद अधिकारी सूचना तथा सञ्चार मन्त्रालयको प्रतिनिधि | सदस्य |
| ४ | श्री झविन्द्र भुसाल, मुख्य अधिकृत | सचिव |

**ग. मिडिया विकास कोष उपसमितिः**

| | | |
|---|---|---|
| १. | अध्यक्ष, प्रेस काउन्सिल, श्री बोर्णबहादुर कार्की | अध्यक्ष |
| २. | अध्यक्ष, नेपाल पत्रकार महासंघ, श्री महेन्द्र बिष्ट | सदस्य |
| ३. | सदस्य सचिव, प्रेस काउन्सिल, श्री लक्ष्मीविलास कोइराला | सदस्य |
| ४. | प्रतिनिधि, हिमालयन बैंक, श्री उज्जवल राजभण्डारी | सदस्य |
| ५. | प्रतिनिधि, नेपाल प्रेस इन्स्टिच्युट, श्री चिरन्जीवी खनाल | सदस्य |
| ६. | मुख्य अधिकृत श्री झविन्द्र भुसाल | सदस्य सचिव |

**उप–समितिहरुः**

प्रेस काउन्सिल ऐन २०४८ को दफा ९ मा काउन्सिलले आफ्नो कार्य सुचारु रुपले सञ्चालन गर्नका लागि उपसमिति गठन गर्न सक्ने व्यवस्था गरिएको छ। सो व्यवस्थाबमोजिम काउन्सिलले देहायका उपसमिति गठन गरी कार्य सम्पन्न गर्दै आएको छ । उपसमितिमा प्रतिनिधित्व हुने पदाधिकारी र कार्यक्षेत्रको विवरण निम्नानुसार रहेको छ :

| क. आचारसंहिता अनुगमन उपसमितिः | | |
|---|---|---|
| १. | श्री बोर्णबहादुर कार्की | संयोजक |
| २. | डा. श्री महेन्द्र बिष्ट | सदस्य |
| ३. | श्री किशोर श्रेष्ठ | सदस्य |
| ४. | श्री खिलबहादुर भण्डारी | सदस्य |
| ५ | श्री चन्द्रकिशोर झा | सदस्य |
| ६ | श्री मनऋषि धिताल | सदस्य |
| ७. | श्री सुदर्शन आचार्य | सदस्य |
| ८ | प्रतिनिधि नेपाल बार एशोसियशन, श्री मोहन इङ्नाम | सदस्य |
| ९. | | सचिव |

**कार्यक्षेत्र :**

१. पत्रकार आचारसंहिताको प्रभावकारी कार्यान्वयन सुनिश्चित गर्ने ।

| ख. अन्तर्राष्ट्रिय सम्बन्ध एवं प्रकाशन तथा अनुसन्धान उप–समितिः | | |
|---|---|---|
| १. | श्री किशोर श्रेष्ठ | संयोजक |
| २. | डा.श्री महेन्द्र बिष्ट | सदस्य |
| ३. | श्री खिलबहादुर भण्डारी | सदस्य |
| ४. | श्री माधव शर्मा | सदस्य |
| ५. | श्री मनऋषि धिताल | सदस्य |
| ६. | श्री मुरलीप्रसाद यादव | सदस्य |
| ७. | श्री सुदर्शन आचार्य | सदस्य |
| ८. | श्री जगदीशप्रसाद पौडेल | सचिव |

**कार्यक्षेत्र :**

१. काउन्सिलको तर्फबाट प्रकाशित हुने बुलेटिन, जर्नल, वार्षिक प्रतिवेदन तथा अनुसन्धानमूलक पुस्तकसमेत सवै प्रकाशनहरुको संयोजन र व्यवस्थापन गर्ने ।

२. अन्तर्राष्ट्रिय सम्बन्ध विकास एवं विस्तारसम्बन्धी कार्य गर्ने ।

| ग. ऐन, नियम पुनरावलोकन उपसमिति: | | |
|---|---|---|
| १. | श्री मुरलीप्रसाद यादव | संयोजक |
| २ | डा. श्री महेन्द्र बिष्ट | सदस्य |
| ३ | श्री किशोर श्रेष्ठ | सदस्य |
| ४ | श्री खिलबहादुर भण्डारी | सदस्य |
| ५ | श्री नवलकिशोर यादव | सदस्य |
| ६ | श्री मनऋषि धिताल | सदस्य |
| ७ | श्री सुदर्शन आचार्य | सदस्य |
| ८ | श्री लक्ष्मीविलास कोइराला | सदस्य |
| ९. | श्री अध्यक्ष, प्रेस काउन्सिल नेपाल कर्मचारी संघ | सदस्य |
| १०. | | सचिव |

**कार्यक्षेत्र:**

१. आवश्यकताअनुसार प्रेस काउन्सिल ऐन, नियम, विनियमावली आदिलाई पुनरावलोकन तथा परिमार्जन गर्ने ।

| घ. विकास, योजना तथा प्रशासन सुधार उपसमिति: | | |
|---|---|---|
| १. | डा.श्री महेन्द्र बिष्ट | संयोजक |
| २. | श्री खिलबहादुर भण्डारी | सदस्य |
| ३. | श्री चन्द्रदेव कामती | सदस्य |
| ४. | श्री नवलकिशोर यादव | सदस्य |
| ५. | श्री मनऋषि धिताल | सदस्य |
| ६. | श्री माधव शर्मा | सदस्य |
| ७. | | सचिव |

**कार्यक्षेत्र :**

१. काउन्सिलको उद्देश्य परिपूर्तिका निम्ति आवश्यक योजना तथा कार्यक्रमहरु पहिचान गरी व्यवस्थित गर्ने ।

२. योजना तथा कार्यक्रमहरुको निम्ति वार्षिक बजेट तर्जुमा गरी काउन्सिलसमक्ष पेश गर्ने ।

३. प्रशासनिक सुधारसम्बन्धी कार्यहरु गर्ने ।

| ङ. विधागत पत्रकारिता विकास उपसमितिः | | |
|---|---|---|
| १. | श्री माधव शर्मा | संयोजक |
| २ | डा.श्री महेन्द्र बिष्ट | सदस्य |
| ३. | श्री किशोर श्रेष्ठ | सदस्य |
| ४ | श्री चन्द्रदेव कामती | सदस्य |
| ५ | श्री नवलकिशोर यादव | सदस्य |
| ६ | श्री मनऋषि धिताल | सदस्य |
| ७ | श्री सुदर्शन आचार्य | सदस्य |
| ८. | श्री झविन्द्र भुसाल | सचिव |

**कार्यक्षेत्रः**

१. साहित्यिक तथा अन्य विधागत पत्रकारिताको विकास र सम्वर्द्धनका लागि आवश्यक नीति निर्माण गरी समस्या समाधानका लागि पहल गर्ने ।

| च. पत्रकार कल्याण कोष उपसमितिः | | |
|---|---|---|
| १. | श्री बोर्णबहादुर कार्की | संयोजक |
| २ | श्री किशोर श्रेष्ठ | सदस्य |
| ३ | श्री मुरलीप्रसाद यादव | सदस्य |
| ४ | श्री लक्ष्मीविलास कोइराला | सदस्य |
| ५ | श्री झविन्द्र भुसाल, मुख्य अधिकृत | सदस्य |
| ६. | श्री सुर्यमणी गौतम, प्रतिनिधि नेपाल पत्रकार महासंघ | सदस्य |
| ७ | श्री डा.मुक्तिराम श्रेष्ठ, प्रतिनिधि नेपाल मेडिकल काउन्सिल | सदस्य |
| ८. | | सचिव |

**कार्यक्षेत्र :**

१. स्वास्थ्य उपचार गराउनुपर्ने पत्रकारहरुलाई महासंघको सिफारिसमा ऐन, नियम र प्रकृयाको अधिनमा रही औषधोपचार सुविधा उपलव्ध गराउने ।

| छ. श्रमजीवी पत्रकार उपसमितिः | | |
|---|---|---|
| १. | श्री चन्द्रकिशोर झा | संयोजक |
| २ | श्री नवलकिशोर यादव | सदस्य |
| ३ | श्री मुरलीप्रसाद यादव | सदस्य |
| ४ | श्री सुदर्शन आचार्य | सदस्य |
| ५ | श्री उजिर मगर, प्रतिनिधि, नेपाल पत्रकार महासंघ | सदस्य |
| ६. | | सचिव |

**कार्यक्षेत्रः**

१. श्रमजीवी पत्रकारहरुको हकहित प्रवर्द्धनका लागि प्रयत्नशील रहने ।

| ज. न्यू मिडिया विद्युतीय सञ्चार माध्यम उपसमितिः | | |
|---|---|---|
| १. | श्री नवलकिशोर यादव | संयोजक |
| २ | श्री किशोर श्रेष्ठ | सदस्य |
| ३ | श्री चन्द्रदेव कामती | सदस्य |
| ४ | श्री मनऋषि धिताल | सदस्य |
| ५ | श्री सुदर्शन आचार्य | सदस्य |
| ६ | | सचिव |

**कार्यक्षेत्र :**

१. विद्युतीय सञ्चार माध्यमको विकास, विस्तार एवं प्रवर्धनका निम्ति अनुसन्धान र पहल गर्ने ।
२. विद्युतीय सञ्चार माध्यमको अनुगमनका निम्ति अध्ययन, अनुसन्धान गरी ठोस सुझाव काउन्सिलसमक्ष प्रस्तुत गर्ने ।
३. काउन्सिलमा सूचना प्रविधिको व्यवस्थापनका लागि आवश्यक पहल गर्ने ।
४. विद्युतीय सञ्चारमाध्यमको वर्गीकरण गर्ने ।

| झ. प्रेस क्लिपिङ सेवा उपसमितिः | | |
|---|---|---|
| १. | श्री मनऋषि धिताल | संयोजक |
| २. | श्री किशोर श्रेष्ठ | सदस्य |
| ३. | श्री खिलबहादुर भण्डारी | सदस्य |
| ४. | श्री चन्द्रदेव कामती | सदस्य |
| ५. | श्री सुदर्शन आचार्य | सदस्य |
| ६. | श्री झविन्द्र भुसाल | सदस्य |
| | | सचिव |

**कार्यक्षेत्र :**

१. काउन्सिलको वैकल्पिक आम्दानीको स्रोतको रुपमा सञ्चालन भइरहेको प्रेस क्लिपिङ सेवालाई विस्तार गर्न प्रयत्नशील रहने ।

| ञ. मिडिया संवाद तथा बहस उपसमितिः | | |
|---|---|---|
| १. | श्री खिलबहादुर भण्डारी | संयोजक |
| २ | श्री किशोर श्रेष्ठ | सदस्य |
| ३. | चन्द्रकिशोर झा | सदस्य |
| ४ | श्री मनऋषि धिताल | सदस्य |
| ५. | श्री माधव शर्मा | सदस्य |
| ६ | श्री मुरलीप्रसाद यादव | सदस्य |
| ७. | | सचिव |

**कार्यक्षेत्र :**

१) समसामयिक विषयहरुमा मिडिया संवादसम्वन्धी कार्यक्रम तय गरी वार्षिक कार्यक्रममा समावेश गर्ने ।

२) मिडिया संवाद कार्यक्रम संचालन गर्ने ।

| ट. | प्रेस नीति सुझाव तथा परामर्श उपसमितिः | |
|---|---|---|
| १. | श्री सुदर्शन आचार्य | संयोजक |
| २ | श्री किशोर श्रेष्ठ | सदस्य |
| ३. | श्री खिलबहादुर भण्डारी | सदस्य |
| ४. | श्री चन्द्रकिशोर झा | सदस्य |
| ५ | श्री नवलकिशोर यादव | सदस्य |
| ६. | श्री माधव शर्मा | सदस्य |
| ७. | श्री लक्ष्मीविलास कोइराला | सदस्य |
| ८. | | सचिव |

**कार्यक्षेत्र :**

१) प्रेस सम्वन्धी नीति/कानुनमा छलफल गरी सुझाव एवं परामर्श पेश गर्ने र सरोकारवालासंग सम्पर्क स्थापित गर्ने ।

२) प्रेस सम्वन्धी कानुनमा गर्नु पर्ने संशोधन सम्वन्धमा सुझाव पेश गर्ने ।

३) प्रेस सम्वन्धी ऐन, नियम, कानुन र नीतिकाबारेमा छलफल कार्यक्रम सञ्चालन गर्ने ।

| ठ. | स्थानीय सञ्चार माध्यम प्रवर्द्धन उप–समितिः | |
|---|---|---|
| १. | श्री चन्द्रदेव कामती | संयोजक |
| २. | श्री महेन्द्र बिष्ट | सदस्य |
| ३ | श्री चन्द्रकिशोर झा | सदस्य |
| ४. | श्री नवलकिशोर यादव | सदस्य |
| ५ | श्री माधव शर्मा | सदस्य |
| ६. | श्री मुरलीप्रसाद यादव | सदस्य |
| ७. | | सचिव |

**कार्यक्षेत्र :**

१. स्थानीय तथा सानो लगानीमा राष्ट्रिय भाषामा प्रकाशित हुने पत्रपत्रिका, न्यू मिडिया, रेडियोको विकास र सम्वर्द्धनका उपायहरु पहिल्याई लागू गर्न पहल गर्ने ।

२. आचारसंहिता उल्लंघनका विषयमा काउन्सिलमा प्राप्त हुने उजुरीहरुको सुनुवाइ गर्ने ।

३. प्रेस जगतलाई समाजप्रति जिम्मेवार र स्वयंममा मर्यादित तुल्याउन सहायक हुने खालका गोष्ठी, सम्वाद र अन्तर्क्रियाहरु आयोजना गर्ने ।

परिच्छेद
२

# पुरस्कार तथा सम्मान

काउन्सिलले पत्रकारिता क्षेत्रमा योगदान दिने व्यक्ति र संस्थाहरुलाई प्रोत्साहन एवं सम्मान गर्न विभिन्न पुरस्कार स्थापना गरी वार्षिक उत्सवको अवसरमा ती पुरस्कार प्रदान गर्ने गरेको छ। ४५ औं वार्षिकोत्सवको अवसरमा २०७१ आश्विन ६ गते विभिन्न विधामा निम्न व्यक्ति/संस्थालाई पुरस्कृत गरिएको थियो ।

| सि.नं. | पुरस्कार | व्यक्ति/संस्था | रकम रु. |
|---|---|---|---|
| १. | प्रेस काउन्सिल गोपालदास पत्रकारिता पुरस्कार | रामकृष्ण रेग्मी | रु.एक लाख |

| सि.नं. | पुरस्कार | व्यक्ति/संस्था | रकम रु. |
|---|---|---|---|
| १ | प्रेस काउन्सिल आचारसंहिता पुरस्कार | सुकेश्वर पाठक | रु.३० हजार |
| २ | प्रेस काउन्सिल साहित्यिक पत्रकारिता पुरस्कार | ईश्वरचन्द्र ज्ञवाली (नयाँ यथार्थ साहित्यिक पत्रिका ) | रु.२० हजार |
| ३ | प्रेस काउन्सिल स्तम्भ लेखन पुरस्कार | श्यामसुन्दर शशी, धनुषा | रु.२० हजार |
| ४ | प्रेस काउन्सिल भाषागत पत्रकारिता पुरस्कार | मिथिला साप्ताहिक (स.जनआनन्द मिश्र, सप्तरी) | रु.१५ हजार |
| ५ | प्रेस काउन्सिल महिला सशक्तिकरण पुरस्कार | गृष्मा राजभण्डारी,काठमाण्डौ<br>सन्तोषी कार्की, दोलखा | रु.१५ हजार<br>रु.१५ हजार |
| ६ | प्रेस काउन्सिल सशक्त सञ्चारकर्मी पुरस्कार | विक्रम निरौला, मोरङ<br>राजेन्द्र नाथ, बैतडी | रु.१५ हजार<br>रु. १५ हजार |
| ७ | प्रेस काउन्सिल समावेशी पत्रकारिता पुरस्कार | प्रकाश माथेमा, काठमाण्डौ<br>ठाकुरसिंह थारु (बाँके)<br>सरिता श्रेष्ठ, धादिङ<br>मनोजकुमार माझी, सप्तरी<br>सञ्जु ब्लोन, काठमाण्डौ | रु.१५ हजार<br>रु.१५ हजार<br>रु.१५ हजार<br>रु.१५ हजार<br>रु.१५ हजार |
| ८ | प्रेस काउन्सिल युवा सशक्तिकरण पुरस्कार | ऋषिराम पौडेल, सिन्धुपाल्चोक<br>गोमा घिमिरे, कास्की<br>लक्ष्मण यादव, धनुषा | रु.१५ हजार<br>रु.१५ हजार<br>रु.१५ हजार |
| ९ | प्रेस काउन्सिल सशक्त लेखन पत्रकारिता पुरस्कार | गया यादव, पर्सा<br>लोकराज ढकाल, झापा<br>रामकुमार एलन, मकवानपुर | रु.१५ हजार<br>रु.१५ हजार<br>रु.१५ हजार |
| १० | प्रेस काउन्सिल क्रियाशील पत्रकारिता पुरस्कार | शरद अधिकारी, दाङ<br>रमेश लम्साल, काठमाण्डौ<br>नेत्र शाही, जुम्ला | रु.१५ हजार<br>रु.१५ हजार<br>रु.१५ हजार |

सो अवसरमा वर्ष कर्मचारी पुरस्कारबाट बरिष्ठ प्रशासकीय अधिकृत जगदीशप्रसाद पौडेल (रु. २० हजार) र कार्यालय सहयोगी श्री प्रल्हाद बस्नेत (रु. १५ हजार)लाई पुरस्कृत गरिएको थियो ।

४६ औं वार्षिकोत्सवको अवसरमा २०७२ आश्विन ६ गते निम्नानुसार विधामा निम्न व्यक्ति/संस्थालाई पुरस्कृत गर्ने निर्णय भएको छ ।

| सि.नं. | पुरस्कार | रकम | व्यक्ति/संस्था |
|---|---|---|---|
| १. | प्रेस काउन्सिल गोपालदास पत्रकारिता पुरस्कार | रु.एक लाख | श्री कौशल चेम्जोङ, उदयपुर |

| सि.नं. | पुरस्कार | रकम रु. | व्यक्ति/संस्था |
|---|---|---|---|
| १ | प्रेस काउन्सिल आचारसंहिता पुरस्कार | रु.२५ हजार | रेडियो नेपाल, काठमाडौ |
| २ | प्रेस काउन्सिल साहित्यिक पत्रकारिता पुरस्कार | रु.१० हजार<br>रु.१० हजार | दायित्व द्वैमासिक, काठमाडौ<br>दोभान त्रैमासिक, काठमाडौ |
| ३ | प्रेस काउन्सिल स्तम्भ लेखन पुरस्कार | रु.१० हजार<br>रु.१० हजार<br>रु.१० हजार<br>रु.१० हजार | शारदारमण नेपाल, काठमाडौ<br>चक्रपाणी नेपाल, काठमाडौ<br>भारती उपाध्याय, मोरङ<br>राम सञ्जेल, काठमाडौ |
| ४ | प्रेस काउन्सिल भाषागत पत्रकारिता पुरस्कार | रु.१० हजार | छारगोङ्मा मासिक, ललीतपुर |
| ५ | प्रेस काउन्सिल महिला सशक्तिकरण पुरस्कार | रु.१० हजार<br>रु.१० हजार<br>रु.१० हजार<br>रु.१० हजार | शुभेच्छाविन्दु तुलाधर, काठमाडौ<br>माला कर्ण, सप्तरी<br>कल्पना आचार्य, काठमाडौ<br>मधु शाही, काठमाडौ |
| ६ | प्रेस काउन्सिल सशक्त सञ्चारकर्मी पुरस्कार | रु.१० हजार<br>रु.१० हजार<br>रु.१० हजार<br>रु.१० हजार | अरुण बराल, काठमाडौ<br>प्रेमचन्द्र झा, रौतहट<br>मोहम्मद हारुन,बाँके<br>सत्यनारायण चौधरी, सिराहा |
| ७ | प्रेस काउन्सिल समावेशी पत्रकारिता पुरस्कार | रु.१० हजार<br>रु.१० हजार<br>रु.१० हजार<br>रु.१० हजार<br>रु.१० हजार | विजयसन्तोषी राई, धनकुटा<br>सुनिता रेग्मी, गोरखा<br>दिनेश यादव, सप्तरी<br>नेपोलियन चेपाङ, काठमाडौ<br>भारती चौधरी, धनुषा |
| ८ | प्रेस काउन्सिल युवा सशक्तिकरण पुरस्कार | रु.१० हजार<br>रु.१० हजार<br>रु.१० हजार<br>रु.१० हजार | अमन कोइराला, सर्लाही<br>लक्ष्मण खड्का, दोलखा<br>योगेश पोखरेल, काठमाडौ<br>त्रिभुवन पौडेल,कास्की |

| | | | |
|---|---|---|---|
| ९ | प्रेस काउन्सिल सशक्त लेखन पत्रकारिता पुरस्कार | रु.१० हजार<br>रु.१० हजार<br>रु.१० हजार<br>रु.१० हजार | मुकेशचन्द्र राजभण्डारी, वाग्लुङ<br>शत्रुघ्न नेपाल, पर्सा<br>राजबहादुर कुँवर, जुम्ला<br>वासु क्षितिज, काठमाडौ |
| १० | प्रेस काउन्सिल क्रियाशील पत्रकारिता पुरस्कार | रु.१० हजार<br>रु.१० हजार<br>रु.१० हजार<br>रु.१० हजार<br>रु.१० हजार | रत्न आचार्य, सुनसरी<br>दुर्गा अधिकारी, कास्की<br>टंक कुँवर, कैलाली<br>शिवदयाल यादव, सिराहा<br>इन्द्र पौडेल, कास्की |
| ११ | बर्ष कर्मचारी पुरस्कार | रु.२० हजार<br>रु.२० हजार<br>**ग्रेड पुरस्कार** | मानबहादुर लामिछाने, उप प्र.अ.<br>रामप्रसाद पोखरेल, वि.स.अ.<br>ब.स.विष्णु शर्मा लम्साल, ३ ग्रेड<br>ब.स.बसन्तप्रसाद दाहाल, २ ग्रेड<br>ले.पा.सविता पराजुली, १ ग्रेड<br>स.क.अ.अर्जुनकुमार राउत, १ ग्रेड<br>प्र.स.महेन्द्रराज सिंह, १ ग्रेड |

काउन्सिलको ४६ औं बार्षिकोत्सवको अवसरमा २०७२ असोज ६ गते देहायअनुसारका पत्रकारिता क्षेत्रमा लामो समय सम्म महत्वपूर्ण योगदान गर्ने पत्रकारहरुलाई सम्मान गर्ने निर्णय समेत गरिएको छ ।

| सि.नं. | सम्मानित व्यक्तित्व |
|---|---|
| १ | श्री मणीराज उपाध्याय, काठमाडौं |
| २ | श्री मदनमणी दीक्षित, काठमाडौं |
| ३ | श्री पन्नालाल गुप्ता, बाँके |
| ४ | श्री कमल कोइराला, काठमाडौं |
| ५ | श्री हिरण्यलाल श्रेष्ठ, काठमाडौं |
| ६ | श्री इन्दुकान्त मिश्र, काठमाडौं |
| ७ | श्री प्रेमकुमारी पन्त, काठमाडौं |
| ८ | श्री कृष्णा ताम्राकार, काठमाडौं |
| ९ | श्री राजेश्वर नेपाली, धनुषा |
| १० | श्री शिशु प्रसाद देवकोटा, सप्तरी |
| ११ | अमृता लम्साल, काठमाडौं |

परिच्छेद
३

# बार्षिक कार्यक्रम तथा प्रगति

## १. पत्रकार आचारसंहिता जागरण कार्यक्रमः

### क. रारा सञ्चार सम्मेलन २०७१

प्रेस काउन्सिल नेपाल, न्यूनतम पारिश्रमिक निर्धारण समिति तथा नेपाल पत्रकार महासंघ कर्णाली समन्वय समितिको आयोजनामा नेपाल पत्रकार महासंघ, मुगु शाखाको संयोजनमा २०७१।८।२५ गतेदेखि २६ गतेसम्म 'रारा मिडिया समिट' कर्णालीको प्रसिद्ध रारा तालको किनारमा सम्पन्न भयो । उक्त समिटमा प्रेस काउन्सिल नेपालको निमन्त्रणामा नेपाल सरकारका माननीय सूचना तथा सञ्चार मन्त्री डा. मिनेन्द्र रिजाल, प्रेस काउन्सिलका अध्यक्ष बरिष्ठ अधिवक्ता बोर्णबहादुर कार्की, नेपाल पत्रकार महासंघका अध्यक्ष डा. महेन्द्र बिष्ट, न्यूनतम पारिश्रमिक निर्धारण समितिका अध्यक्ष खेम भण्डारी, प्रेस काउन्सिल नेपालका सदस्यत्रय किशोर श्रेष्ठ, मनऋषि धिताल,र सुदर्शन आचार्य र सूचना विभागका महानिर्देशक लक्ष्मीविलास कोइरालाको उपस्थिति रह्यो । प्रमुख अतिथि माननीय सूचना तथा सञ्चार मन्त्री डा. मिनेन्द्र रिजालले समिटको उद्घाटन गर्दै उक्त समिट कर्णालीका मिडियाको समस्या समाधान गर्न निकै उपयोगी

भएको बताउँदै समिटका निर्णयहरु लागू गर्न सरकारका तर्फबाट पहल गर्ने बताउनु भयो ।

प्रेस काउन्सिल नेपालका अध्यक्ष वरिष्ठ अधिवक्ता बोर्णबहादुर कार्कीले प्रेस काउन्सिल नेपालले आचारसंहिता जागरण अभियानको सुरुवात कर्णालीबाटै गरेर कर्णालीको पत्रकारिताको विकासमा काउन्सिलले निकै चासो लिएको बताउनुभयो । त्यस्तै नेपाल पत्रकार महासंघका अध्यक्ष डा. महेन्द्र बिष्टले नेपाल पत्रकार महासंघ देशभर पत्रकारको क्षमता अभिबृद्धी गर्न तथा पत्रकारका हक अधिकार संरक्षण गर्न क्रियाशील रहने बताउनुभयो । न्यूनतम पारिश्रमिक निर्धारण समितिका अध्यक्ष खेम भण्डारीले पत्रकारको न्यूनतम पारिश्रमिक निर्धारण गरिएता पनि त्यो अझै लागू नभएको विचार व्यक्त गर्दै पत्रकारका हकमा झन समस्याहरु रहेका बताउनुभयो ।

प्रेस काउन्सिलका सदस्यत्रय किशोर श्रेष्ठ, मनऋषि धिताल, र सुदर्शन आचार्यले आफूहरु देशभरका सञ्चार माध्यम तथा सञ्चारकर्मीहरुका समस्या समाधान गर्न लागि पर्ने बताउनुभयो । सूचना विभागका महानिर्देशक लक्ष्मीविलास कोइरालाले सूचना विभाग दुर्गम जिल्लाका पत्रकारलाई प्रेस कार्ड सजिलै उपलब्ध गराउन तत्पर रहेको विचार व्यक्त गर्नुभयो । नेपाल पत्रकार महासंघ कर्णाली संयोजक नवराज महतराको सभापतित्वमा भएको समिट उद्घाटन सत्रपछि भएको बन्द सत्रमा कर्णालीको पत्रकारिताको अवस्थाका बारेमा विनोद मल्ल (मुगु), कृष्णमाया उपाध्याय (जुम्ला), नृपेन्द्र मल्ल (मुगु), धना केसी (मुगु), छयाल लामा (हुम्ला), नन्दबहादुर रोकाया (मुगु), अंगराज बुढा (मुगु), वरम महत (जुम्ला), जीवन सेजुवाल (मुगु), दानबहादुर बुढा (मुगु),लोनाथ योगी (मुगु) खगेन्द्र मल्ल (जुम्ला) नरेन्द्रनाथ योगी(जुम्ला), विष्णुलाल बुढा (डोल्पा), कर्ण भण्डारी (जुम्ला), एलपी देवकोटा (जुम्ला), रमेश अछामी (जुम्ला), वीरबहादुर पुन (मुग), रमेश ऐरी (हुम्ला), राजन रावत (हुम्ला), नृप हमाल (हुम्ला), मोहन मल्ल (मुगु), सुमन मल्ल (मुगु),कालीबहादुर मल्ल (कालीकोट), भीमबहादुर रावल(कालीकोट), खगेन्द्र भट्टराई (कालीकोट) लगायतका पत्रकारहरुले आ-आफ्ना धारणाहरु राखेका थिए ।

बन्द सत्रमा प्रेस काउन्सिलका अध्यक्ष बोर्णबहादुर कार्कीले प्रेस काउन्सिलले नेपालका आम सञ्चारमाध्यम तथा आम सञ्चारकर्मीहरुको पेशागत आचरणलाई समृद्ध बनाउन पहल गर्ने बताउनुभयो । प्रेस काउन्सिल नेपालका सदस्यहरु किशोर श्रेष्ठ, मनऋषि धिताल र सुदर्शन आचार्यले आआफ्ना अलग अलग प्रस्तुतीहरु गर्दै समग्र देशको पत्रकारिताको विकासमा काउन्सिलले पुरयाउन खोजेको योगदानको बारेमा चर्चा गर्नु भयो । रारा समिटले पहिचान गरेका समग्र समस्या तथा समाधानका लागि गर्नुपर्ने पहलहरुलाई समेटेर २०७१।८।२६ गते बिहान निम्नानुसार १३ बुँदे रारा घोषणा पत्र जारी गरेको थियो ।

१) नेपालको पत्रकारिताले कर्णालीको सम्पन्नतालाई भन्दा कर्णालीका विषयलाई दयामुखी लिडबाट मात्रै समावेश गर्ने गरेका कारण कर्णालीको वास्तविकता भन्दा दयामुखी विम्बले समग्र कर्णालीवासीलाई हिनताबोध गराएको वास्तविकतालाई आत्मसाथ गर्दै राष्ट्रिय तथा अन्तराष्ट्रिय सञ्चारमाध्यमलाई कर्णालीको बिम्ब परिवर्तनका समाचार सामग्री प्रकाशन तथा प्रशारण गर्न यो सम्मेलन आग्रह गर्दछ ।

२) नेपाल पत्रकार महासंघमा कर्णालीबाट प्रतिनिधित्व गर्ने प्रथम केन्द्रीय सदस्य स्वार्गिय गौरी कठायतको संझना स्वरुप कर्णालीबाट पत्रकारिता गर्ने पत्रकारलाई पुरस्कृत गर्ने ध्येयले नेपाल पत्रकार महासंघ कर्णाली अञ्चल क्षेत्रीय समन्वय समितिले तयार पारेको गौरी कठायत राष्ट्रिय पत्रकारिता पुरस्कार सञ्चालन कार्यविधि-२०७१ अनुसार

सञ्चालन गर्ने गरी रु २,००,०००।- (दुईलाख)को अक्षयकोष स्थापनाको घोषणा गर्दछ ।

३) राज्यका सबै सरकारी सञ्चार संयन्त्रमा कर्णालीको अनिवार्य प्रतिनिधित्व हुने गरी शुरुमा सरकारी सञ्चारमाध्यमबाट कर्णाली क्षेत्रको बिट (क्षेत्रगत) रिपोर्टिङ तत्काल शुरु गर्न यो सम्मेलन नेपाल सरकार, सूचना तथा सञ्चार मन्त्रालयलगायतका निकायलाई आग्रह गर्दछ ।

४) कर्णालीमा कार्यरत पत्रकारहरुका सबै प्रकारका क्षमता विकासको लागि बिशेष कार्यक्रमको व्यवस्था स्रोतसहितको अधिकारसम्पन्न कर्णाली सञ्चार प्रशिक्षण प्रतिष्ठान गठन गर्न नेपाल सरकार र सम्बद्ध निकायसँग यो सम्मेलन जोडदार माग गर्दछ ।

५) कर्णाली र विकासका हिसाबले पछि रहेका जिल्लाको पत्रकारिताको विकासलाई जोड दिनका लागि अनुदानमुखी पत्रकारिताको अवधारणा अनुसार राज्यले स्थानीय स्तरका सञ्चारमाध्यम र सञ्चारकर्मीको पेशागत दक्षता वृद्धि, उत्थान, विकास तथा संरक्षण सहित पत्रकारिताको व्यावसायिकरणका लागी मिडिया विकास कोष मार्फत प्रदान गर्ने सेवा सुविधामा बढोत्तरी गर्दै विद्यमान १० प्रतिशत ब्याजको सहुलियतलाई सतप्रतिशत बृद्धि गर्न आग्रहगर्दै कर्णालीबाट प्रकाशित पत्रिकाहरुले प्रयोग गर्ने न्युज प्रिन्टको खरिदमा ५० प्रतिशत तथा पेपर खरिदमा लाग्ने भन्सार छुट गर्दै स्थानीय रेडियो तथा पत्रपत्रिकाको हकमा सूचना बिभागले उपलब्ध गराउने लोक कल्याणकारी विज्ञापनलाई ५० प्रतिशत बृद्धि गर्न यो सम्मेलन माग गर्दछ ।

६) कर्णालीबाट सरकारी तथा निजीस्तरमा रहेका सञ्चार गृहमा काम गर्ने सञ्चारकर्मीले पाउने गरेको पारिश्रमिक अन्त्यन्तै कम हुनुका साथै कर्णालीजस्ता हिमाली जिल्लाका लागि औपचारिकतामा मात्रै समावेश गर्ने स्ट्रिन्जरले कर्णालीको पत्रकारिताको व्यावसायिक विकास हुन नसक्ने अवस्थालाई मध्यजनर गर्दै स्ट्रिन्जरको सट्टा पूर्णकालिन रिपोर्टर नियुक्त गरी उनीहरुले प्राप्त गर्ने पारिश्रमिक वृद्धिका लागि पहल गर्न जोडदार माग गर्दछ ।

७) कर्णालीलाई कार्यक्षेत्र बनाई कामगर्ने सञ्चारकर्मीको व्यावसायिक पहुँच वृद्धि गर्नका लागि अनुदानमुखी पत्रकारिताको सिद्धान्तअनुसार पत्रकारका लागि आवश्यक पर्ने सञ्चार सुविधाहरु जस्तैः इमेल, इन्टरनेट, फोन, फ्याक्स, यातायात सुविधा (हवाई र यातायात)मा कम्तीमा ५० प्रतिशतको सहुलियत प्रदान गरिनुका साथै स्वास्थ्य उपचारका लागि निजी तथा सरकारी अस्पतालमा उपचार गर्दा ५० प्रतिशतले सहुलियतको उपलब्ध गराउन सम्बन्धित निकायलाई आग्रह गर्दछ ।

८) कर्णालीमा स्थापित सञ्चारमाध्यममा प्रयोग हुने सञ्चार सामग्री (प्रेस, ट्रान्समिटर, मिक्स्चर, क्यामरा, रेकर्डर, कम्प्युटर, टावर जस्तासामग्री) को खरिदमा सतप्रतिशत भन्सार छुट तथा खरिदमा समेत पत्रकार महासंघको सिफारिसमा ५० प्रतिशत सहुलियतको व्यवस्थालाई नीतिगत रुपमा व्यवस्था गर्न यो सम्मेलन आग्रह गर्दछ ।

९) आउँदो आर्थिक वर्षमा निर्माण कार्य सम्पन्न हुने गरी कर्णालीका पाँचवटै जिल्लामा पत्रकार महासंघ जिल्ला शाखाका भवन निर्माणार्थ सरकारी तहबाट आवश्यक बजेट बिनियोजनका लागि सम्बन्धित निकायलाई यो सम्मेलन आग्रह गर्दछ ।

१०) सूचना विभागबाट प्रदान गरिने प्रेस पास, पत्रपत्रिका दर्ता तथा स्थानान्तरण, रेडियो लाइसेन्स नवीकरण, रोयल्टी बुझाउने कार्यलाई अबदेखि सम्बन्धित जिल्लाबाटै सहज रुपमा गर्न कानुनी व्यवस्थाका लागि जोडदार माग गर्दछ ।

११) नेपालको सञ्चार क्षेत्रका विभिन्न निकाय (सूचना विभाग, प्रेस काउन्सिल, राष्ट्रिय सूचना आयोगलगायतका निकाय) का क्षेत्रीय कार्यालय कर्णालीमा स्थापना गर्दै कर्णाली मैत्री सञ्चार नीतिका लागि नेपाल सरकार र सम्वद्ध निकायलाई आग्रह गर्दछ ।

१२) कर्णालीको समुन्नतिकै आधारका रुपमा रहेको रारालगायत पर्यटकीय संभावना बोकेका ऐतिहासिक, साँस्कृतिक तथा पर्यटकीय क्षेत्रको विकासका लागि राज्यले दीर्घकालिन गुरुयोजना निर्माण गरी त्यसको प्रभावकारी कार्यान्वयन गर्दै मुगुको ताल्चा विमानस्थललाई यथासक्य कालोपत्र गर्न, स्थलगत मार्गबाट रारा आउने आन्तरिक तथा बाह्य पर्यटकको सहज पहुँचका लागि कर्णाली राजमार्गलाई समेत कालोपत्रे गर्न नेपाल सरकारलगायत दातृ निकायलाई यो सम्मेलन हार्दिक आग्रह गर्दछ ।

१३) कर्णालीको पत्रकारिताको समीक्षात्मक बहससहितको व्यावसायिक पत्रकारिताका संभावनाको खोजी गर्नका लागि नेपाल पत्रकार महासंघ कर्णाली अञ्चल क्षेत्रिय समन्वय समितिको आयोजनामा सम्पन्न रारा सञ्चार सम्मेलन-२०७१ (Rara Media Submit 2014) मा गौरवमय सहभागिता जनाउनु हुने नेपाल सरकारका प्रवक्ता मा. सूचना तथा सञ्चार मन्त्री डा. मीनेन्द्र रिजाल, प्रेस काउन्सिलका अध्यक्ष बोर्णबहादुर कार्की, नेपाल पत्रकार महासंघका केन्द्रीय अध्यक्ष डा. महेन्द्र बिष्ट, न्यूनतम पारिश्रमिक निर्धारण समितिका अध्यक्ष खेम भण्डारी, प्रेस काउन्सिल नेपालका सदस्य किशोर श्रेष्ठ, सुदर्शन आचार्य, मनऋषि धिताल, सूचना विभागका महानिर्देशक लक्ष्मीविलास कोइरालाप्रति आभार व्यक्त गर्दै कार्यक्रमको आयोजनाका लागि सहयोग गर्ने मुगु जिल्ला विकास समिति, सम्पूर्ण राजनीतिक दल, सरकारी तथा गैरसरकारी कार्यालय, डाँफे होटेल रारा, गोमा एयर, रारा राष्ट्रिय निकुञ्ज, दुर्गा भञ्जन गुल्म रारा, कार्यक्रमलाई सहयोग गर्ने सम्पूर्ण निकायसहित नेपाल पत्रकार महासंघका पाँचवटै जिल्लाका जिल्ला शाखा र कार्यक्रमको सफल व्यवस्थापन गर्ने मुगु शाखालाई हार्दिक धन्यवाद ज्ञापन गर्दै प्रेस काउन्सिल नेपालले सञ्चालन गर्न लागेको आचारसंहिता जागरण राष्ट्रिय अभियानको शुरुवातसमेत रारा सञ्चार सम्मेलन बाटै गरेकोले प्रेस काउन्सिल नेपालप्रति विशेष आभार व्यक्त गर्दछ ।

## कार्यदल गठन

प्रेस काउन्सिलले रारा मिडिया समिटको घोषणपत्र र काउन्सिलले गर्नुपर्ने कार्य सम्बन्धमा सुझाव पेश गर्न काउन्सिलका सदस्य श्री मनऋषि धिताल र सदस्य श्री चन्द्रकिशोर झा रहेको कार्यदल गठन गरेको छ। उक्त कार्यदलले २०७१ माघ ११ गते माननीय सूचना तथा सञ्चारमन्त्री श्री मीनेन्द्र रिजालको प्रमुख आतिथ्यमा सूचना विभागको सभाकक्षमा कर्णाली क्षेत्रका पत्रकारहरु समेतको सहभागितामा **कर्णालीको पत्रकारिता चुनौती र अवसर विषयक अन्तरक्रिया** कार्यक्रम

सम्पन्न गरेको छ । यस क्षेत्रका विभिन्न व्यक्तित्वहरु संग र पत्रकारिता क्षेत्रका विभिन्न संघ संगठनहरुहंग समेत छलफल गरी ठोस प्रस्ताव काउन्सिलमा पेश गर्ने कार्यदलको योजना रहेको छ ।

## ख. चितवनः

देशभरका पत्रकार एवं नागरिक समाजलाई पत्रकार आचारसंहिताबारे जानकारी गराउने, स्वस्थ, मर्यादित, जवाफदेही पत्रकारिताको विकास गर्ने पत्रकार जागरण अभियानको प्रमुख लक्ष्य हो । ०७१ मंसिर अन्तिमसाता मुगुको रारामा कर्णालीका पत्रकार तथा नागरिक अगुवाहरुको भेलाबाट शुरु गरिएको आचारसंहिता जागरण अभियान चितवनको भरतपुरमा ०७१ माघ २६ गते सम्पन्न भएको छ । भरतपुरमा आयोजित अन्तरक्रियामा बोल्दै प्रेस काउन्सिल नेपालका अध्यक्ष बोर्णबहादुर कार्कीले प्रेसलाई नियन्त्रण होइन थप स्वस्थ बनाउने लक्ष्य रहेको धारणा व्यक्त गर्नुभयो । आचारसंहितालाई परिष्कृत गर्न सहयोग मिल्ने साथै दण्ड दिने होइन सुधार गर्ने प्रयासका रुपमा अभियान सञ्चालन गरिएको र राज्यले प्रेस जगतलाई समयानुकूल व्यवस्थित गर्दै लैजाने विशेष नीति बनाउनु जरुरी भएको बताउनुभयो । कार्यक्रममा कार्यपत्र प्रस्तुत गर्दै नेपाल पत्रकार महासंघका केन्द्रीय अध्यक्ष डा.महेन्द्र बिष्टले कुनै पनि समाचार प्रकाशन/प्रशारण गर्नुपूर्व कसैले पूर्व प्रतिबन्ध लगाउन नपाइने तर गलत देखिएमा जो कोहीले उजुरी गर्न सकिने बताउनुभयो । जारी पत्रकार आचारसंहिता–०६०(परिमार्जित तथा संशोधित– ०६४) को व्याख्या गर्दै बिष्टले पत्रकारितालाई शक्तिको रुपमा लिइएको, मालिक र पत्रकारबीच टक्राव रहेको, मिडियामा संवेदनशीलता नहुँदा मिडिया हाउस बन्द हुन पुगेका जस्ता समस्यामूलक उदाहरण दिनुभएको थियो ।

नेपाली काँग्रेस चितवनका सचिव श्री जितनारायण श्रेष्ठले अधिकांश श्रमजीवी पत्रकारले ज्याला नपाएको अवस्था छ, राजनीतिक संगठनका भातृ संगठनको रुपमा रहेका पत्रकार संगठनहरु भन्दा पत्रकारहरुको एक मात्र "पत्रकार महासंघ" लाई साझा बनाउनु पर्ने धारणा राख्नुभयो । नेकपा एमाले चितवनका अरुण भण्डारीले राजनीतिक गरिबी नै नेपाली जनताको दुश्मन भएको औंल्याउँदै पत्रकारिताको राजनीतिक बिट सुधार्नुपर्ने धारणा राख्नुभयो । राप्रपा नेपालका अध्यक्ष वद्री तिमिल्सेनाले पत्रकारितालाई राजनीतिबाट टाढा राख्नुपर्ने धारणा राख्नुभयो । आचारसंहिता हनन्का केशमा जिल्लामा उजुरी गर्ने ठाउँ नभएको, उजुरी काठमाडौंमा सिमित तर प्रभावकारी नभएको उहाँको दावी थियो । उद्योग वाणिज्य संघ चितवनका उपाध्यक्ष सहनलाल प्रधानले हालै सम्पन्न चितवन महोत्सवबारे प्रकाशित समाचार तथ्यपूर्ण र सन्तुलित नभएको प्रसंग राख्नुभयो ।

प्रेस चौतारी नेपाल चितवनका अध्यक्ष तिर्थ नेपालले पत्रकार बचाऊ अभियान अनिवार्य भैसकेको बेला आचारसंहिता जागरण अभियान सार्थक रहेको धारणा व्यक्त गर्नुभयो । युएनडीपी विकास परियोजना चितवनकी इन्दिरा आलेले आचारसंहिता अत्यावश्यक तर, धेरै छलफल हुन बाँकी रहेको बताउनुभयो । सोही अवसरमा सूचना विभागका महानिर्देशक लक्ष्मीविलास कोइरालाले हुलाक मार्फत काउन्सिलसम्म उजुरी पुऱ्याई प्रभावकारी कार्यान्वयनका निम्ति आवश्यक व्यवस्था गर्ने धारणा राख्नुभयो । नेपाल पत्रकार महासंघ चितवन शाखाका अध्यक्ष हरिप्रसाद पोखरेलको अध्यक्षतामा सम्पन्न कार्यक्रमको सञ्चालन शाखा सचिव कृष्णचन्द्र भट्टराईले गर्नुभएको थियो । कार्यक्रममा सशस्त्र सीमा सुरक्षा कार्यालय भरतपुरका एसपी शम्भु उप्रेती, राष्ट्रिय अनुसन्धान विभाग चितवनका माधव तिमिल्सिना, जिल्ला प्रहरी कार्यालय चितवनका डिएसपी राजन

अधिकारी, स्थानीय विकास अधिकारी भरत पाण्डे, नेपाल बार एशोशियसनका अध्यक्ष चुडामणी सापकोटालगायत ८० जनाको सहभागिता थियो ।

## ग. मकवानपुर

२०७१ माघ २८ मा मकवानपुरको हेटौंडामा पत्रकार आचारसंहिता जागरण अभियान सम्पन्न भएको छ । प्रेस काउन्सिल नेपालका अध्यक्ष श्री बोर्णबहादुर कार्कीले कार्यक्रमको उद्देश्यमाथि प्रकाश पार्नुहुँदै पत्रकार आचारसंहितावारे जानकारी गराउनुभएको थियो । स्वस्थ, मर्यादित, जवाफदेही पत्रकारिताको विकासको लागि पत्रकार आचारसंहिता जागरण अभियान सञ्चालन गरिएको र मोफसलको पत्रकारितालाई सवल, सक्षम बनाई देखिएका समस्याहरुको समाधानका लागि काउन्सिल तदारुकताका साथ अघि वढ्ने धारणा राख्नुभएको थियो । आमधारणा वुझ्न, आचारसंहितालाई परिस्कृत गर्न र सवैले मर्यादित पत्रकारिता गरुन् भन्ने कार्यक्रमको अपेक्षा रहेको समेत अध्यक्ष कार्कीले वताउनुभएको थियो । ०७१ मंसिर २५ र २६ गते मुगुको रारामा कर्णालीका पत्रकार तथा नागरिक अगुवाहरुको भेला गरेर सुरु गरिएको आचारसंहिता जागरण अभियान देशभरका अधिकांश स्थानमा पत्रकार, नागरिक समाज, व्यापारीलगायतलाई आचारसंहिताको जनचेतना फैलाउँदै अघि बढेको छ । आयोजित अन्तरक्रियामा बोल्दै काउन्सिल अध्यक्ष कार्कीले प्रेसलाई नियन्त्रण होइन् थप स्वस्थ र सशक्त बनाउन आवश्यक रहेको धारणा व्यक्त गर्नुभयो ।

कार्यक्रममा नेपाल पत्रकार महासंघका केन्द्रीय अध्यक्ष डा.महेन्द्र बिष्टले प्रेस स्वतन्त्रता र आचारसंहितासम्वन्धी कार्यपत्र प्रस्तुत गर्नुभएको थियो । सवै पत्रकारहरुले समस्यालाई सकारात्मक कोणवाट हेरेमा धेरै समस्या स्वतः समाधान हुन्छन, निराश नै भईहाल्नुपर्ने केही नभएको र देशभर पत्रकार शुद्धिकरण अभियानमा केन्द्रवाट विशेष पहल भईरहेको अध्यक्ष बिष्टले वताउनुभएको थियो । उक्त कार्यक्रममा बोल्नुहुँदै अध्यक्ष बिष्टले कुनै पनि समाचार प्रकाशन/प्रशारण गर्नुपूर्व कसैले पूर्व प्रतिबन्ध लगाउन नपाइने तर गलत देखिएमा जो कोहीले उजुरी गर्न सकिने बताउनुभयो । जारी पत्रकार आचारसंहिता, ०६०(संशोधित तथा परिमार्जित–०६४) मा रहेका पत्रकारले गर्न हुने र नहुने बुँदाहरु माथि प्रष्ट पार्नु भएको थियो । कार्यक्रममा राजनीतिक दल, सुरक्षानिकायका प्रमुख, पत्रकार तथा मिडियाका उद्यमीहरुको उपस्थिति रहेको थियो । पत्रकार लगायतका अन्य महानुभावहरुमा विद्यमान पत्रकार आचारसंहिताको अवस्था र प्रभाववारे अनुसन्धान समेत भएको थियो ।

***कार्यक्रममा उठेका सवालहरु निम्नानुसार रहेका छन् ।***

- » पत्रकारहरुको तलवमान समयसापेक्ष हुन नसकेका र राज्यले तोकेको न्युनतम् पारिश्रामिक पाउन नसकेको ।
- » मिडिया उद्यमीको विचारमा दक्ष जनशक्तिको अभाव रहेकोले मिडिया सशक्त हुन नसकेकोले गुणात्मक विकास नभएको ।
- » मिडियाका लगानीकर्ताहरुले समेत पत्रकारिताको सिद्धान्त र मर्म वुझ्न आवश्यक ।
- » सुरक्षा र आचारसंहितासम्वन्धि तालिम आवश्यक ।
- » पत्रकारितामा प्रवेश गर्नुपूर्व खास योग्यता र जाँच हुनुपर्ने ।
- » विज्ञापन नीति प्रभावकारी कार्यान्वयन हुनुपर्ने ।
- » हरेक मिडियाले आ-आफ्नो आचारसंहिता तथा निर्देशिका बनाई लागु गर्नुपर्ने ।
- » समयसापेक्ष आचारसंहिताको परिमार्जन आवश्यक ।
- » कलम निष्पक्ष र सन्तुलित नभएकोले धम्की आउनु स्वभाविक ।

» संरक्षण गर्ने निकाय नै क्रियाशील नभएको अवस्थामा काम गर्ने पत्रकार पनि सुरक्षित नहुने कुनै गुट-उपगुटमा लागेर ओत वस्ने र पत्रकारिता गर्ने गरिएको ।
» एक सञ्चारमाध्यममा आएको समाचारवारे, अर्को मिडियामा विज्ञप्ती तथा खण्डन हुने गरेको ।
» केही पत्रकारहरु वार्गेनिङ् गर्ने,कुरो मिल्दासम्म ठीक र नमिलेपछि वेठीक हुने । पीत पत्रकारितामा लाग्ने गरेको ।
» पत्रकारिता जस्तो संवेदनशील क्षेत्रमा राष्ट्रिय निर्णयमा पत्रकारहरु दुई खेमामा रहँदै आएका ।
» एक पत्रकारवाटै अर्को पत्रकारमाथि धाकधम्की आईरहेको ।
» एउटै पत्रकार दुई वा सो भन्दा वढी देश वा मिडियामा संलग्न हुँदा द्वन्द्व सृजना हुने । समाचार र विज्ञापनमा अस्वस्थ प्रतिस्पर्धा ।
» राज्यले सञ्चारमाध्यमको प्रभावकारी अनुगमन गर्ने निकायलाई सशक्त वनाउन नसकेको ।
» सञ्चारमाध्यमहरुमा विभिन्न शक्ति केन्द्रले अपारदर्शी लगानी गरेर आफ्नो अनुकूल कार्य गर्ने गरेको । सम्पादकीय स्वतन्त्रतामा सेन्सरसीप रहेको ।
» पत्रकारहरुद्वारा ABC सिद्धान्तअनुरुप समाचार नलेखिएको ।
» विज्ञापनमा अस्वस्थ प्रतिस्पर्धा रहेको र स्थानीय विज्ञापनदाताले दिनेमध्ये ५ प्रतिशत विज्ञापन स्थानीय पत्रपत्रिका ,रेडियोले प्राप्त नगरेको ।
» एउटै व्यक्ति धेरै जिम्मेवारी वहन गरेको ।
» पत्रकारहरु दलगत गुट-उपगुटमा विभक्त रही सीमित वर्गको स्वार्थका निम्ति लागेको । मिशन पत्रकारितामा लागेको ।
» तराईमा अहिले पनि भूमिगत समूहवाट धम्की । केही मिडिया सूचनालाई अतिरञ्जित पारेर सद्भाव फैलाउनमा व्यस्त ।

## घ. बाँके (नेपालगञ्ज)

२०७१ फागुन ७ गते प्रजातन्त्र दिवसको अवसर पारेर बाँकेको नेपालगञ्जमा पत्रकार आचारसंहिता जागरण अभियान सम्पन्न भएको छ । उक्त कार्यक्रममा पत्रकार आचारसंहिता र अभियानबारे प्रष्ट पारिएको थियो । पत्रकार आचारसंहिता पत्रकारिता पेशालाई मर्यादित र अनुशासित बनाउन पत्रकारले पालना गर्नुपर्ने नैतिक नियम रहेको र पत्रकार तथा नागरिकलाई पत्रकार आचारसंहिताबारे जानकारी गराउने साथै पत्रकारिता क्षेत्रलाई मर्यादित, जवाफदेही र निष्पक्ष बनाउन उक्त पत्रकार आचारसंहिता जागरण अभियान सञ्चालन गरिएको थियो । पत्रकार महासंघ बाँकेको संयोजन र प्रेस काउन्सिल नेपालको आयोजनामा सन्पन्न उक्त कार्यक्रममा सञ्चारमाध्यम, नागरिक समाज, राजनीतिक दल, पत्रकार, स्थानीय संघसंस्थाका प्रतिनिधि र जिल्लास्थित सरकारी कार्यालयका प्रतिनिधिहरुको सहभागिता थियो ।

पत्रकार महासंघ बाँकेका सभापति रुद्र सुवेदीको सभापतित्वमा नेपालगञ्जमा भएको कार्यक्रममा बोल्दै प्रेस काउन्सिल नेपालका अध्यक्ष बोर्णबहादुर कार्कीले पत्रकारको पनि कानुन व्यवसायीसरह लाइसेन्स आवश्यक रहेकोले काउन्सिलले 'प्रेस परीक्षा' सम्बन्धी छलफल चलाएको र पत्रकारिता व्यवसायमा निश्चित मापदण्ड नभएकोले गुणस्तर घट्दै गएको बताउनुभयो । छापा माध्यमले भन्दा बढी अनलाइन पत्रिकाहरुले आचारसंहिताको उल्लंघन गरेकोले छापा माध्यम र

विद्युतीय सञ्चार माध्यम अनुगमनको लागि छुट्टा छुट्टै शाखाहरु गठन गर्ने तयारी काउन्सिलले गरेको बताउनुभयो । नागरिक दैनिक पत्रिकामा प्रकाशित 'दिलशोभा' प्रकरणमा काउन्सिलले गरेको अनुगमन र चालेको कदम स्मरण गराउँदै कार्कीले राजनैतिक आस्था नभई पत्रकारिताको मूल्य र मान्यताको आधारमा पत्रकारिता गर्नुपर्ने कुरामा जोड दिनुभयो ।

उक्त कार्यक्रममा प्रेस काउन्सिल नेपालका सदस्य श्री मनऋषि धितालले पत्रकार आचारसंहिताको बारेमा जानकारी दिँदै पत्रकार र सञ्चार माध्यमले निर्वाह गर्नुपर्ने कर्तव्य तथा पत्रकार र सञ्चार माध्यमहरुले गर्न नहुने कार्यहरुको बारेमा बताउनुभएको थियो ।

सोही कार्यक्रममा कार्यपत्र प्रस्तुत गर्नुहुँदै प्रेस काउन्सिल नेपालका मुख्य अधिकृत झविन्द्र भुसालले उजुरी र तत्सम्बन्धी कार्यबिधि प्रक्रिया बारेमा विश्लेषण गर्नुभएको थियो । उजुरी बिना पनि प्रेस काउन्सिल नेपालले अनुगमन गर्न सक्ने भन्दै आचारसंहिता उल्लंघन गर्ने पत्रिकाहरुलाई कारवाही गरिएको उदाहरण प्रस्तुत गर्नुभएको थियो ।

नेपाल बार एशोसिएशनका केन्द्रीय उपाध्यक्ष टीकाराम भट्टराईले पत्रकार आचारसंहिता परिमार्जन गरेर शुद्धिकरण अभियान चलाएमा मात्र पत्रकारिता व्यवसाय मर्यादित हुने धारणा व्यक्त गर्नुभयो । प्रेस काउन्सिल नेपालको आचारसंहिता अनुगमन उपसमितिमा काउन्सिलका पदाधिकारीहरु रहँदासम्म अनुशासनको काम प्रभावकारी हुन नसक्ने विचार ब्यक्त गर्दै बार काउन्सिलको अनुगमन समितिको संरचनाबारे चर्चा गर्नुभएको थियो ।

अवधारणापत्रमाथि जिज्ञाशा राख्ने क्रममा कालपृष्ठ दैनिकका सम्पादक हेमन्त कर्माचार्यले आचारसंहिता पालना नगर्नेमा अनलाइनहरु नै धेरै भएको जानकारी दिनुभयो । काउन्सिलले वर्गीकरण गर्दा सम्पादकीयलाई विशेष रुपले हेर्नुपर्ने उहाँको सुझाव थियो ।

साप्ताहिक पाक्षिक सञ्जालकी अक्षरी पोखरेलले पत्रिकाहरुमा विज्ञापन र समाचारको अनुपात नमिलेको, आचारसंहिता स्थानीय पत्रिकालाई मात्रै लागेको गुनासो राख्नुभयो ।

साप्ताहिक सञ्जालका अजय गुप्ताले बर्गीकरण फाराम भर्दा भ्याटको बिल पेश गर्नुपर्ने हुँदा दोहोरो करको मारमा पर्ने समस्याका कारण त्यसतर्फ ध्यान दिनुपर्ने कुरामा जोड दिनुभयो ।

एबिसी टेलिभिजनका शरण कर्माचार्यले पत्रकारिता क्षेत्रलाई स्वच्छ राख्न राजनीतिबाट टाढा राख्नुपर्ने, रेडियो र टेलिभिजनमा बजेका समाचारलाई रेकर्ड गरेर राख्नसक्ने संयन्त्र काउन्सिलमा हुनुपर्ने कुरामा विशेष जोड दिनुभयो ।

दैनिक नेपालका विनय दिक्षितले काउन्सिलमा परेका उजुरीहरुको कारवाहीसम्बन्धी प्रकृया त्यति प्रभावकारी हुन नसकेको गुनासो राख्नुभयो । सञ्चारिका समूहकी रुपा गहतराजले पत्रकार बन्न आवश्यक मापदण्ड नभएकोले पत्रकारिता व्यावसायिक हुन नसकेको दावी गर्नुभयो । साथै बाँके जिल्लामा कुन कुन पत्रिकाहरुमा उजुरी परेका छन् ? त्यसको जानकारी कार्यपत्रको साथमा आएमा सुनमा सुगन्ध हुने विचार राख्नुभयो ।

उद्योग बाणिज्य संघ बाँकेका कृष्णप्रसाद श्रेष्ठले प्रेस काउन्सिलको आचार संहिता जागरण अभियान कार्यक्रमले पत्रकारितालाई मर्यादित र व्यावसायिक बनाउन प्रभावकारी भूमिका खेलेको अवधारणा व्यक्त गर्नुभयो । काउन्सिलले दिलशोभा प्रकरणमा नागरिक दैनिकमाथि गरेको कारवाहीको प्रशंसा पनि गर्नुभयो । पत्रकार पन्नालाल गुप्ताले राजनीति पञ्चायत, लोकतन्त्र र आजको गणतन्त्रको अवस्थामा आइपुग्दा पत्रकारितामा उत्साह नबढेको जानकारी दिनुभयो । सञ्चार केन्द्र नेपालका प्रमुख रुपा वि.क.ले पनि आफ्नो भनाई राख्नुभएको थियो । पत्रकार झलक गैरेले पत्रकार आचारसंहिताको कानुनी दायरा बढाउन आवश्यक रहेको विचार व्यक्त गर्नुभयो ।

पत्रकारले उठाएका प्रश्नहरुको जवाफ दिने क्रममा काउन्सिल अध्यक्षले पत्रकार र सञ्चार माध्यमको अभिभावक प्रेस काउन्सिल नेपाल भएतापनि असल अभिभावकत्वको भूमिका निर्वाह गर्न नसकेको स्वीकार गर्दै असल पत्रकारिता गर्ने पत्रकारलाई प्रोत्साहित गर्न, गलत गर्नेलाई मर्यादित र व्यवस्थित गराउन काउन्सिल लागिपरेको जानकारी दिनुभयो । पत्रकारले राजनैतिक आस्थाको आधारमा नभई पत्रकारिताको मूल्य र मान्यताको आधारमा पत्रकारिता गर्नुपर्नेमा जोड दिनुभयो ।

दिलशोभा प्रकरणमा काउन्सिलले सक्रियतापूर्वक नागरिकको विरुद्धमा कारवाही प्रक्रिया अगाडि बढाएको दोहोर्‍याउँदै आचारसंहिता पालनामा सजग रहन निर्देशन दिनुभयो । काउन्सिलको आचारसंहिता संशोधन प्रकृया अगाडि बढिरहेको पनि जानकारी दिनुभयो ।

## ङ. कञ्चनपुर, महेन्द्रनगर

२०७१ फागुन ८ गते कञ्चनपुरको महेन्द्रनगरमा पत्रकार आचारसंहिता जागरण अभियान सम्पन्न भएको छ । काउन्सिलका अध्यक्षबाट पत्रकार आचारसंहिता जागरण अभियान र काउन्सिलको काम कारवाहीबारे प्रस्तुती राख्दै यसप्रकारका कार्यक्रमले नयाँ साथीहरुलाई थप सहयोग पुग्ने, यस्ता कार्यक्रमको निरन्तरता हुन आवश्यक रहेको आपसी समन्वय र रायसुझाव आदानप्रदानवाट केही न केही प्रगति भै पत्रकारिता क्षेत्रमा सुधार हुने धारणा व्यक्त गर्नुभयो । कार्यक्रममा पत्रकार आचारसंहिता र प्रेस काउन्सिल विषयक कार्यपत्र प्रस्तुत गर्दै काउन्सिलका सदस्य मनऋषि धिताल र मुख्य अधिकृत झविन्द्र भुसालले पत्रकारले गर्न हुने र नहुने कार्य, उजुरी सम्बन्धी कार्यविधि प्रष्ट पार्नुभयो । कार्यक्रममा निम्नानुसार व्यक्तिहरुले धारणा राख्नु भएको थियो ।

**कृष्णकुमार क्षेत्री, नेपाली काँग्रेस प्रतिनिधिः** बलात्कृत महिलाको नाम नभएपनि गाउँ, ठाउँ, बाबुको नाम उल्लेख हुनुले आचारसंहिता प्रतिकूल समाचार आइरहेका छन् । ऐन नियम संशोधन गरी कडा दण्ड सजायको व्यवस्था राख्नुपर्छ । पार्टी नजिक रहेकोले हाम्रो समाचार प्रकाशित गरेका छन् भनेर आचारसंहिता पालनामा नजरअन्दाज गर्न मिल्दैन ।

**गगन सिंह, एमाओवादी प्रतिनिधिः** कार्यपत्रमा धेरै समेटिएको छ । काउन्सिल र पत्रकार त्यसप्रति इमानदार हुनु जरुरी देखिन्छ ।

**पूर्व सदस्य ऋषिराज लुम्सालीः** राजनीतिक छायाँबाट मुक्त हुनुपर्छ । काउन्सिल संविधानमा आयोगको रुपमा हुनुपर्ने । विकेन्द्रीकरण हुनु आवश्यक, नियमसँगै नियत परिवर्तन, मिडिया सरकारका के हुन् - प्रतिस्पर्धी वा परिपूरक, शत्रु होइनौं । नेता विरामी हुँदा करोडौंको खर्च, ८०० पत्रिकालाई १२ करोड दिँदा टाउको दुःखाई किन?

**ने.नि.म.संघ अध्यक्ष, गौराज ब. लिम्वुः** समाचार लेख्दा यथार्थ, सत्य, पुष्टि हुने हुनुपर्छ । सूचना माग्दा शालिन व्यवहार गर्नुपर्छ ।

**प्रजिअ, कृष्णचन्द्र घिमिरे** : राज्यको चौथो अंग पत्रकारिता, हामीले सोहीअनुरुप सरकार र जनतावीचमा पुलको काम गर्नुपर्ने, सञ्चारकर्मीको दक्षतामा वृद्धि आवश्यक, समाचारले मनोवल गिर्ने काम गर्नुभएन । काउन्सिलले सक्रियता बढाउनुपर्ने, दण्ड पुरस्कार तथा खवरदारी हुनुपर्‍यो ।

**वरिष्ठ अधिवक्ता, थानेश्वर भट्ट** : आस्थाका आधारमा मिडियाले पाठकलाई न्याय नगर्ने, प्रेस काउन्सिल नेपाल टाढा छ , खण्डन हुँदैन र भएपनि सानो हरफमा लुकेको खण्डनले काम गर्दैन । नैतिकताको खडेरी परेको अवस्थामा कसरी नैतिक बन्धनले बाँध्ने ? आचारसंहितालाई

सशक्त बनाउनुपर्ने, कसले कति छाप्यो भन्दा पनि आचरण पालना गऱ्यो, गरेन हेर्नुपर्दछ ।

**लीलाध्वज बस्नेत** : खण्डनले क्षतिपूर्ति नहुने गरी बेईज्जत गर्ने, भारतका सहसचिव, उपसचिव आउँदा समाचार बन्छ, सूचना भारत पुऱ्याउने हामी, राष्ट्रियताका ठूला कुरा गर्ने ?

**मोहन बिष्ट, जनक्रान्ति दैनिक**: ठेकेदारीपन, एकपटक वर्गीकरणमा परेकालाई सुविधा दिनेमा किन समस्या, समाधान खोजिनु पर्छ ।

**रनि विवस**: काउन्सिलमा समेत अनेक समस्या छन् । पत्रकार वर्षौं काम गर्ने तर दलका कार्यकर्ताले जागीर खाने, पत्रकारको धरातल नहुनेहरु बुरुक्क उफ्रने, पार्टीका मुखपत्र वर्गीकरणमा राख्ने, काउन्सिलले अनुगमन गर्न आफैं सच्चिनुपऱ्यो ।

**ज्ञानेन्द्र महता** : पत्रकारको सुरक्षामा के गरेको छ ? रेडियो, टिभी, अनलाइनलाई लोकल्याणकारी विज्ञापन र भुक्तानी के गर्छ ?

**बलदेव अवस्थी, जिल्ला हुलाक कार्यालय प्रतिनिधि**: सञ्चारगृह र हुलाकलाई समेत सोधेर पत्रिकाको अंक प्रतिवेदन छाप्नुपर्छ । पत्रिका पठाउँदा हुलाकबाट सहयोग हुनुपऱ्यो ।

**राजेन्द्र अवस्थी** : काउन्सिल सरकारी निकाय हो, फोन उठ्दैन, काम कारवाही प्रभावकारी छैन ।

**इश्वर बडु**: पत्रकारको पारिश्रमिक न्यून, त्यो पनि उपलव्ध नहुँदा विस्थापित हुनुपर्छ । सहुलियतमा ब्याज /ऋण पाउन के गर्नु पर्ने हो ? अनुगमन तथा कारवाही प्रभावकारी भएको छैन । विज्ञापन ६०/४० होइन २०/८० छ । कारवाही भएमात्र सुधार हुन्छ । पत्रकारिताका भातृसंगठन खारेज हुनुपर्छ ।

**हरिप्रसाद जोशी, सार्थक साप्ताहिक**: पत्रिका पहिले अंक पुगेन, हाल हुबहु । सबै रेडियोले काठमाडौंका समाचार बजाएका छन्, के हुन्छ ? साना लगानीका पत्रपत्रिकालाई काउन्सिलले रेटेको छ । काठमाडौं र मोफसल हेर्ने दूरी फरक हुनुपर्दछ । आर्थिक दण्ड नभएसम्म आचारसंहिता पालना हुँदैन । ४२ वर्षको उमेरमा विष्णु अवस्थीको मृत्यु भएको तर पश्चिम नेपाल पत्रिकाले ९१ बर्ष उल्लेख गरी छापेको छ ।

**कृष्ण पन्त, महाकाली एफएम**: पत्रकारहरु राजनीतिक झण्डा बोकी आन्दोलन गर्ने र टाउको फुटाउँदा पत्रकारको समाचार प्रमुख रुपमा आउने, त्यसको संरक्षण सबैले गर्ने प्रथाको अन्त्य कहिले हुने ?

**श्याम भट्ट** : स्थानीय समिति प्रभावकारी भएन, पत्रकार महासंघमा चुनाव जित्नको लागि सदस्यता जसलाई पनि दिइन्छ, त्यसको, शुद्धिकरण हुनु पर्छ । सूचना अधिकारी राख्दा पत्रकारिता अध्ययन गरेकोलाई राख्नुपर्छ ।

**माधवसिंह धामी** : नीतिनियम मापदण्ड अस्थिर छन, मनलाग्दी पछि बनाउँछन् । त्यसले हामीलाई मर्का पर्छ । २ बर्ष वर्गीकरणमा परे पछिमात्र सुविधा दिने नियम किन आयो ?

**कर्णदेव भट्ट, फारवेस्ट दैनिक**: आचारसंहिता उल्लंघन गर्नेलाई कारवाही गरेमात्र सुधार हुने स्थिति छ । विसंगतिविरुद्ध कठोर हुने हो भने पालना हुन्छ ।

नेपाल पत्रकार महासंघ कञ्चनपुरका सचिव केशव साउदले सञ्चालन गर्नुभएको उक्त कार्यक्रमको अध्यक्षता पत्रकार महासंघ कञ्चनपुरका अध्यक्ष लक्ष्मण तिवारीले गर्नु भएको थियो ।

## च. कैलाली, धनगढी

२०७१ फागुन ९ गते कैलालीको धनगढीमा पत्रकार आचारसंहिता जागरण अभियान सम्पन्न भएको छ । आचारसंहिता जागरण कार्यक्रमको उद्देश्यमाथि स्पष्ट गर्दै काउन्सिल सदस्य श्री मनऋषि धितालले देशभर जागरण अभियान सञ्चालन गर्न लागिएको जानकारी गराउनुभयो ।

काउन्सिलका अध्यक्ष श्री बोर्णबहादुर कार्कीले पत्रकार आचारसंहिता जागरण अभियान र काउन्सिलको काम कारवाहीबारे प्रस्तुत गर्दै सञ्चारमाध्यममा आएका विषयमाथि जनता, प्रेस काउन्सिल र न्यायलयबाट मात्र प्रश्न उठाउन सकिने, मोफसलको पत्रकारिताको विकासमा जोड दिनु पर्ने, पत्रकारिता क्षेत्रलाई व्यवस्थित गर्न प्रेस परीक्षा सञ्चालन गर्नुपर्ने, यस क्षेत्रमा महिला पत्रकार आकर्षण र विकासको लागि ध्यान दिनुपर्ने, स्थानीय मिडियाले स्थानीय समाचार सम्प्रेणमा जोड दिनुपर्ने र पत्रकार आचारसंहिताको पालनामा सजग रहनुपर्ने धारणा राख्नु भएको थियो । कार्यक्रममा काउन्सिलका सदस्य मनऋषि धितालले मोफसलका पत्रकारलाई मिडिया विकास कोषबाट सहयोग उपलब्ध हुँदै आएको जानकारी दिनुभयो ।

उक्त कार्यक्रममा काउन्सिलका मुख्य अधिकृत श्री भविन्द्र भुसालले पत्रकार आचारसंहिता र प्रेस काउन्सिलको भूमिका विषयक कार्यपत्र पेश गर्नु भएको थियो । कार्यपत्र र काउन्सिलको अभियानबारेमा निम्नानुसार व्यक्तिहरुले भनाई राख्नु भएको थियो ।

१. **हरिदेव रेग्मी, उपभोक्ता मञ्चः** पत्रकारिता गुणात्मक रुपले जान सकेको छैन, खण्डन पठाउँदा अंक यतिमा अन्यथा भएकोले सच्याइएको छ भनिन्छ, यो भएन, चरित्रहत्या भएपछि खण्डन छापेर क्षतिपूर्ति हुँदैन । यसर्थ समाचारको गाम्भिर्यता, छाप्न मिल्ने नमिल्ने, असर प्रभाव मूल्यांकन गरेर छाप्नुपर्छ । काउन्सिलले आचारसंहिता कडाइपूर्वक लागु गरोस् । मोफसलको पत्रकारिताको सेवा सुविधामा कञ्जुस्याइँ नगर्ने र आचारसंहिता पालनामा पनि कडाई गर्नुपर्छ । ५ क्षेत्रमा काउन्सिल स्थापना हुनु पर्छ साथै नियमन क्षमता बृद्धि गर्नुपर्छ ।

२. **अधिवक्ता श्री गम्भीरसिंह ऐरः** राष्ट्रिय मिडियाले के कत्तिको आचारसंहिता पालना गरेका छन् विवरण आउनुपर्छ । बलात्कार प्रकरणमा पूजा बोहराको नाम सहित कान्तिपुरमा समचार छापिएको छ । के त्यो सही हो ? काउन्सिलले दण्डसहित सेवा सुविधा र क्षमता बृद्धिमा ध्यान दिनुपर्छ ।

३. **हेमन्तराज पन्त, सचिव नेपाल बार कैलालीः** जिम्मेवार भएर पत्रकारले समाचार दिनुपर्छ। काउन्सिल वाच डग हो । पत्रकारको लागि मापदण्ड, परीक्षा र लाइसेन्सको व्यवस्था हुनु पर्छ । आचारसंहिता अपुरो छ, के कारवाही भएको छ खुलाउनु पर्छ ।

४. **प्रमुख, जिल्ला हुलाक कार्यालयः** पत्रपत्रिका समाचारमूलक हुनुपर्ने, हुलाक दाखिला प्रकाशन भएको भोलिपल्ट हुनुपर्ने । वार्षिक रुपमा एकमुष्ट पुऱ्याउँदा अप्ठ्यारो छ । आचारसंहिताको जनकारीको लागि प्रचार प्रसार हुनुपर्छ ।

५. **कृणमाया थापा, प्रमुख सञ्चार केन्द्रः** पत्रपत्रिका कैलालीबाट ७ दिन र १५ दिनमा आउँछ, त्यो बाहेकका जिल्लाबाट पत्रिका आउन १५ दिन र बढी लाग्छ । काउन्सिलले जिल्लामा स्थानीय समितिको व्यवस्था गरेको छ तर आचारसंहिता हेर्ने अधिकार छैन, समिति प्रभावकारी भएन । पत्रिका धेरै छन् तर सबैमा एउटै समाचार हुन्छ ।

६. **विक्रम चन्द, प्र.ना.उ.:** श्रीमद भागवतमा सवै पत्रकार जानु भएको छ तर यहाँ कम उपस्थिति छ । यो पत्रकारको लागि भागवत भन्दा ठूलो हो । सत्य कहिल्यै मर्दैन तर दुःख पाउँछ ।

हाम्रो हतियार लाठी, बन्दुक, पत्रकारको हतियार कलम । प्रहरीले लाठी हानेको सञ्चो हुन्छ । पत्रकारले पूर्वाग्रही भएर लेखेको विषय कहिल्यै सञ्चो हुँदैन । यसर्थ जिम्मेवार हुनु पर्दछ ।

७. **उदयबहादुर सिंह, सहायक प्रमुख जिल्ला अधिकारी**: पत्रिका दर्ता जिल्ला प्रशासनमा हुन्छन् तर कति कहिले प्रकाशन हुन्छन् हुँदैनन् जानकारी हुँदैन । क्षेत्रीय स्तरमा काउन्सिल हुनुपर्छ ।

८. **कर्ण शाह, पूर्व केन्द्रीय सदस्य नेपाल पत्रकार महासंघ**: यदाकदा हामी माथि छौं भन्ने भावना पत्रकारमा रहेको, छुट्टै पत्रकारको लागि मात्र कार्यक्रम गर्नु आवश्यक छ । मिडिया कति आवश्यक हो छलफल गर्ने कि, राष्ट्रिय मिडियामा आचारसंहिता पालनाको अवस्था के छ ? प्लेन दुर्घटनामा काउन्सिलले राम्रो भूमिका निभाएको छ, यस्तै उदाहरणको रुपमा आउनुपर्छ ।

९. **मोहन जोशी, पत्रकार**: पत्रकार आचारसंहिताको प्रचार प्रसार व्यापक हुनु पर्छ र कार्यान्वयनमा जोड दिनु पर्छ ।

१०. **सुनिल आउदी**: श्रमजीवी पत्रकारभन्दा मिडियाका साहुहरुलाई आचारसंहिता पढाउनु पर्छ ।

११. **ऋषिराज लुम्साली, पूर्व सदस्य, प्रेस काउन्सिल**: रेडियो नवीकरण हुने, अन्य पत्रिका नहुने ? विभेदकारी नियममा सुधार हुनुपर्छ । काउन्सिलले प्रभावकारी रुपमा अनुगमन गर्नुपर्छ ।

नेपाल पत्रकार महासंघ कैलालीका युवराज न्यौपानेले सञ्चालन गर्नुभएको उक्त कार्यक्रमको अध्यक्षता पत्रकार महासंघ कैलालीका अध्यक्ष भरत शाहले गर्नुभएको थियो ।

## छ. विर्तामोड, झापा

२०७१ फागुन २१ गते 'स्वस्थ, जिम्मेवार र व्यावसायिक पत्रकारिताका लागि आचारसंहिता पालना गरौं' भन्ने नाराका साथ झापा जिल्लाको बिर्तामोडमा पत्रकार आचारसंहिता जागरण अभियान-२०७१ आयोजना गरियो । कार्यक्रममा काउन्सिल अध्यक्ष बोर्णबहादुर कार्कीले सङ्क्रमणकालमा पत्रकार र मिडियाको निकै महत्वपूर्ण भूमिका हुने भएकाले देशभरि नै पत्रकार आचारसंहिता जागरण अभियान आयोजना गरिएको जानकारी दिनुभयो ।

काउन्सिल पत्रकार र मिडियाको अभिभावक समेत भएकाले प्रेस स्वतन्त्रताको पक्षमा पनि आवाज उठाउँदै आएको बताउँदै उहाँले पत्रकार र मिडियाले सकारात्मक सोचका साथ कलम चलाउनुपर्नेमा जोड दिनुभयो ।

काउन्सिल सदस्य चन्द्रदेव कामतीले आगो, पानी, हावाले आफ्नो धर्म नभुलेजस्तै पत्रकारले पनि आफ्नो धर्म बिर्सन नहुने विचार राख्नुभयो ।

काउन्सिल सदस्य मुरलीप्रसाद यादवले कार्यपत्र प्रस्तुत गर्नुभएको सो कार्यक्रममा अर्का सदस्य सुदर्शन आचार्यले स्वागत मन्तव्य राख्ने क्रममा पत्रकार आचारसंहिता जागरण अभियान मुगुदेखि सुरु गरिएको जानकारी दिनुभएको थियो भने काउन्सिलका तर्फबाट कार्यक्रमको संयोजन उपप्रशासकीय अधिकृत दीपक खनालले गर्नुभएको थियो ।

कार्यक्रमको अध्यक्षता गर्दै नेपाल पत्रकार महासंघ झापाका अध्यक्ष भीम नेम्वाङ्गले आफूहरू पत्रकार आचारसंहिता पालनामा सजग रहेको र कमी-कमजोरी भए सुधार्ने प्रतिवद्धता जनाउनुभएको थियो ।

सबै क्षेत्रका प्रतिनिधिहरूलाई समेट्ने प्रयास गरिएको सो कार्यक्रममा बोल्ने अन्य क्षेत्रका प्रतिनिधिहरूले प्रत्यक्षरूपमा पत्रकारका कमजोरी औँल्याएका थिए भने पत्रकारहरूले राजनीतिक

पार्टी, उद्योगी-व्यापारी, एनजिओ-आइएनजिओहरूले आफूहरूलाई कसरी डर देखाउने, लोभ्याउने गर्दछन् भन्ने दृष्टान्त प्रस्तुत गरेका थिए । यस्तै केही पत्रकारहरूले नै झापाका धेरैजसो पत्रकारमा 'खाम' नदिने पक्षको समाचार नै नलेख्ने प्रवृत्ति विकास हुँदै गएको भनी आलोचना गरेका थिए ।

पत्रकारका समस्या, स्थानीय पत्रकारिताका दुःख, मिडयाको महिलाप्रतिको दृष्टिकोण, पत्रपत्रिका वर्गीकरण, प्रेस परीक्षा पत्रकारमा मौलाउँदै गएका विभिन्न विकृतिहरू जस्ता विषय पनि उठेको उक्त कार्यक्रममा वरिष्ठ पत्रकार मदन ढकाल, नेपाल पत्रकार महसङ्घका पूर्वसदस्य मोहनकाजी न्यौपाने, पत्रकार महसङ्घ झापाका उपाध्यक्ष तारामणि सापकोटा र सचिव एकराज गिरी, उद्योग बाणिज्य सङ्घका प्रतिनिधि उमेश डाल्विया, प्रमुख जिल्ला अधिकारी तेजप्रसाद पौडेल, राप्रपा नेपालका केन्द्रीय सदस्य राजकुमार पोखरेल, एकीकृत नेकपा(माओवादी)का जिल्ला उपाध्यक्ष राजु आचार्य, नेपाली काँग्रेसका जिल्ला सभापति उद्धवबहादुर थापा, बानका केन्द्रीय उपाध्यक्ष कुमार भट्टराई, महिला अधिकारकर्मी कविता शर्मा, राजनीतिकर्मी संगीता रौ नियार, नारी सञ्चार गृह झापाकी साबित्रा दाहाल, बिर्ता लेडिज जेसिसकी सदस्य पार्वता बिमली, उपभोक्तावादी राजेन्द्र घिमिरे, पत्रकारबाट पीडित विष्णुप्रसाद अधिकारी, रेडियो सरगमका ज्ञानेन्द्र निरौला, पूर्वाञ्चल दैनिकका चन्द्रकान्त ढकाल र चेतन अधिकारीले विभिन्न विचार राख्नुभएको थियो । कार्यक्रममा विभिन्न सहभागीको सङ्ख्या १०७ थियो ।

## ज. धनुषा

२०७१ चैत १९गते धनुषाको जनकपुरमा पत्रकार आचारसंहिता जागरण अभियान कार्यक्रम भयो । प्रेस काउन्सिलको आयोजना र नेपाल पत्रकार महासंघ धनुषा शाखाको संयोजनमा सप्न्न उक्त कार्यक्रममा नवलकिशोर यादवको स्वागत मन्तव्य राख्नु भएको थियो । कार्यक्रमका प्रमुख अतिथि प्रेस काउन्सिल नेपालका अध्यक्ष तथा वरिष्ठ अधिवक्ता बोर्णबहादुर कार्कीले ट्राफिक नियम उल्लंघन हुँदा दुर्घटना बढेजस्तै जिम्मेवार र उत्तरदायी पत्रकारिताको आचार पालनाले पत्रकार जगतकै प्रतिष्ठामा थप बल पुग्ने बताउनु भयो ।

क्षेत्र, क्षेत्रका जनता, धर्म र सँस्कृतीबीच द्वन्द्व बढ्ने कार्य पत्रकारिता क्षेत्रबाट कदापी ग्राह्य नहुने हुँदा पत्रकार महासंघ र काउन्सिलबाट जारी पत्रकार आचारसंहिता पालनाको जिम्मेवारीपूर्ण भूमिका पत्रकार जगतबाट निर्वाह हुनासाथ धेरै समस्या निदान हुने धारणा राख्नु भयो ।

सानो र दुब्लो पत्रकारिता जगतले खराव मानिसलाई निरुत्साहित गर्न अहं भूमिका खेलेको र आर्थिक रुपमा कमजोर रहेको हुँदा सवल बन्न स्थानीय सञ्चार माध्यमले सशक्त भई अघि बढ्ने अपेक्षा राख्नु स्वभाविकै हो । तसर्थ असल पत्रकारितालाई प्रोत्साहन र खरावलाई निरुत्साहित गर्न जीवनपर्यन्त यस पेशालाई अंगाल्ने पत्रकार जगतलाई पेन्सन सुविधाको निम्ति काउन्सिल प्रतिवद्ध छ- अध्यक्षले भन्नुभयो ।

सदस्य मुरलीप्रसाद यादवले सोध्नुभयो विज्ञापनमा पनि आचारसंहिता खोज्ने कि समाचारमा मात्रै अल्झिने भन्दै सामाजिक रुपमा लैङ्गिक रुपमा घोचपेच गर्ने, महिलालाई विज्ञापनमा सोपिसका रुपमा प्रस्तुत गर्नेजस्ता कियाकलापले पित पत्रकारिता हुने हुँदा त्यस्ता कियाकलापलाई निरुत्साहित गर्दै धनुषाका पत्रकार अघि बढ्ने विश्वास व्यक्त गर्नुभयो ।

आचार संहिताको नैतिक बन्धनले मात्रै पत्रकारितालाई मर्यादित बनाउन नसकिरहेको सन्दर्भ उल्लेख गर्दै यादवले यसकालागि कानुनी उपचारतर्फ पनि अघि बढ्ने कि नबढ्ने भन्ने विषयमा समेत गहन छलफल र मन्थन हुनु जरुरी भएको बताउनु भयो ।

प्रमुख जिल्ला अधिकारी कृष्णप्रसाद ढुंगानाले धर्म र आचारसंहिता पालनाजस्ता क्रियाकलापहरुको पत्रकारिता जगतबाटै आत्मसमीक्षा गरिनु स्वयंमा सच्चिनु हो र आम नागरिकप्रति जिम्मेवारीबोध गराउनु हो भन्नुभयो ।

सद्भावना पार्टीका जिल्ला अध्यक्ष सञ्जय सिंहले पत्रकारहरुले पालना गर्नुपर्ने आचारसंहितालाई हरेक संघ, संगठन र राजनीतिक दलहरुले पनि फलो गरेमा पार्टीमा पनि नैतिक आचार जागरणमा थप टेवा पुग्ने बताउनु भयो ।

पत्रकार रामभरोस कापडी भ्रमरले कठिन परिस्थितिबाट गुज्रिरहेका पत्रपत्रिकालाई मजबुत बनाउन पत्रपत्रिका मूल्यांकनका क्रममा उदारतापूर्वक हेरिनुपर्ने उल्लेख गर्नुभयो ।

प्रहरी उपरीक्षक गणेशबहादुर थापा, नेपाल पत्रकार महासंघका केन्द्रीय सदस्य अजय अनुरागी, पत्रकार मदनलाल श्रेष्ठ, हिमांशु चौधरी, नेपाल पत्रकार महासंघ धनुषा शाखाका पूर्व अध्यक्ष उमेश साह, साहित्यकार एवं पत्रकार अशोक दत्त, उद्योग वाणिज्य संघका अध्यक्ष शिवशंकर साहलगायत प्रेस काउन्सिल नेपालका वितरण सम्परीक्षण अधिकृत रामप्रसाद पोखरेल गरी विभिन्न राजनैतिक दलका प्रतिनिधि, बुद्धिजीवी, प्रवुद्ध नागरिक र विद्यार्थी नेतालगायतको उपस्थिति रहेको सो कार्यक्रम नेपाल पत्रकार महासंघ धनुषा शाखाका अध्यक्ष अनिल मिश्रको अध्यक्षतामा सम्पन्न भएको थियो ।

## ज. सिराहा:

सिरहामा पत्रकार आचारसंहिता जागरण अभियान २०७१ चैत २० गते आयोजना गरियो। काउन्सिल अध्यक्ष बोर्णबहादुर कार्कीले पत्रकार आचारसंहिता पालना नहुँदा भौतिक आक्रमण हुने गरेकाले सोतर्फ सजग हुनुपर्ने बताउनु भयो । उहाँले पत्रकारिता पेशाबाटै जीविकोपार्जन गर्ने वातावरण बनाउन र यसको इज्जत र प्रतिष्ठालाई अक्षुणराख्न यस्ता कार्यक्रमबाट थप जागरण आउने उल्लेख गर्नुभयो ।

सदस्य चन्द्रदेव कामतीले पत्रकारिताको मूल धर्म र कवच पत्रकार आचारसंहिता भएकाले यसको पालना भएमा पत्रकारहरुकै प्रतिष्ठा बृद्धि हुने धारणा राख्नु भयो ।

पत्रकार मनबहादुर विश्वकर्माले सञ्चालन गर्नुभएको कार्यक्रममा मधेश मिडिया मिशन फाउण्डेशनका केन्द्रीय अध्यक्ष दिनेश्वरप्रसाद गुप्ता, इन्द्रेणी समाजका निर्देशक नवराज लामा, नेकपा माओवादीका जिल्ला इञ्चार्ज हरिनारायण चौधरी, प्रेस युनियनका रामबाबु यादव, नगरप्रमुख राजकुमार, स्थानीय विकास अधिकारी गोपाल अधिकारी र प्रेस काउन्सिल नेपालका सदस्य मुरलीप्रसाद यादव, प्रमुख जिल्ला अधिकारी, विभिन्न राजनैतिक दलका नेताहरुले बोल्नु भएको थियो ।

## ञ. दाङ

२०७२ जेठ १३ गते बुधबारका दिन नेपाल पत्रकार महासंघ दाङ शाखाको हलमा "पत्रकार आचारसंहिता जागरण अभियान २०७२" सम्पन्न भयो ।

नेपाल पत्रकार महासंघ दाङ शाखाका अध्यक्ष श्री सुदिप गौतमको अध्यक्षता, प्रेस काउन्सिल नेपालका अध्यक्ष श्री बोर्ण बहादुर कार्कीज्युको प्रमुख आतिथ्य तथा प्रेस काउन्सिल नेपालका सदस्यज्यूहरु क्रमश: खिल बहादुर भण्डारी, मनऋषि धिताल तथा प्रेस काउन्सिल नेपालका पुर्व अध्यक्ष श्री नारायणप्रसाद शर्माको उपस्थितिमा कार्यक्रम सम्पन्न भएको थियो ।

प्रेस काउन्सिल नेपालका पुर्ब सदस्य श्री गोबिन्द आचार्यले पत्रकार आचारसंहिता विषयक कार्यपत्र पेश गर्नुभयो । कार्यपत्रमाथि छलफलका क्रममा नागरिक समाज दाङका संयोजक श्री टीकाराम रेग्मीले कार्यपत्रको प्रसंशा गर्दै, Avenues TV को लाइसेन्स खारेजी बिषय उठाउदै अबका दिनमा श्रीपेच लगायर कोहिपनि तानाशाह आउदैन तर यस्तै आवरणधारी मिडिया आउने बताउनु भयो । यसैगरी नेपाल बार एसोसियसन दाङ शाखाका अध्यक्ष श्री भुप बहादुर के सीले बिद्युतीय कारोबार ऐन बिषयमा बोलेको, आचारसंहिता आफुमा लागु नगर्ने तर तल्लो निकायले आचारसंहिता लागु गरोस भन्ने चाहना राख्नु गलत प्रबृती भएको धारणा राख्नु भयो ।

एनेकपा माओबादीका जिल्ला अध्यक्ष श्री कुबेर वली तथा नेपाली काँग्रेस जिल्ला कार्यसमितिका सचिव श्री शंकर डाँगीले पनि कार्यपत्रको प्रसंशा गर्नुभयो । नयाँ पत्रिका दैनिकका जिल्ला प्रतिनिधि प्रदिप पाण्डेले काउन्सिलले पत्रकारलाई दिने सुबिधा जिल्ला जिल्लामा कसरी पुऱ्याउने बारेमा सोच्नुपर्नेमा जोड दिनुभयो । यसैगरी नयाँ युगबोध दैनिकका सम्पादक प्रताप रेग्मीले दाङमा हुने गरेका आचारसंहिता उल्लंघनका घटना बढिरहेका छन । प्रेस काउन्सिल नेपालको पुनर्संरचना गर्नुपर्ने अबस्था रहेको, काउन्सिलकै जिम्मेवार व्यक्ति, पदाधिकारीले आचारसंहिता उल्लंघन गर्नु दुर्भाग्य भएको कुरा बताउनुभयो । कान्तिपुर दैनिकका जिल्ला प्रतिनिधि सुदर्शन रिजालले  आचारसंहिता उल्लंघन गरेका कारण  स्वयं पत्रकारहरु नै असुरक्षित हुने गरेको बताउनुभयो । यसैगरी प्रेस काउन्सिल नेपालका पूर्व सदस्य बिपुल पोखरेलले आचारसंहिता उल्लंघनमा कारबाही गरे यसले कानुनको श्रृजना भई अभिव्यक्ति स्वतन्त्रताको हनन हुने भएकोले के गर्दा पत्रकार आक्रमणमा पर्छन्, पर्दैनन्, सो अनुसार आचारसंहिता बनाउनुपर्ने बताउनु भयो ।

कार्यक्रममा देहायअनुसार अतिथिहरुले बोल्नु भएको थियो:

१. **श्री नारायणप्रसाद शर्मा (पूर्व अध्यक्ष, प्रेस काउन्सिल नेपाल)**: संसारमा पत्रकारिता दृष्टीकोणका आधारमा चलेका हुन्छन । सभ्य, सुसंस्कृत समाजमा फरक दृष्टीकोण हुन्छ । आर्थिक व्यवस्थाले पनि आचारसंहिता निर्माण हुने गर्दछ । द्वैध नीति हुने गर्दछ, ठूला राष्ट्रले आफुमा कठोर र अन्य राष्ट्रमा अति स्वतन्त्र नीति बनाउन खोज्ने हुन्छ । जागरण अभियान गरेर भन्दा स्थानीय संयन्त्र बनाउदा राम्रो हुने धारणा राख्नुभयो ।

२. **श्री खिल बहादुर भण्डारी (सदस्य, प्रेस काउन्सिल नेपाला)**: काउन्सिलले पत्रकार आचारसंहिता अनुगमन निरन्तर गरिरहेको छ । महाभुकम्पको समयमा पनि  आतंकित गरि समाचार सम्प्रेसन गर्ने मिडियालाई पत्र काटेको छ ।

३.  **श्री बोर्ण बहादुर कार्की (अध्यक्ष, प्रेस काउन्सिल नेपाल)**: बि.स. २०४६ पछि बढेको क्षेत्र भनेको राजनीति र पत्रकारिता हो । पत्रकार आचारसंहिता पत्रकारितालाई बचाउने, गाईड गर्ने चिज हो । पत्रकारिता शासन गर्ने नभइ सेवा गर्ने क्षेत्र हो । दिलशोभा प्रकरणको उदाहरण दिँदै पत्रिका र सञ्चारमाध्यमले आचारसंहिता उल्लंघन गरे उजुरी दिन नडराउन भन्नुभयो । विकृतिहरु बिरुद्द कडा रुपमा प्रस्तुत हुनुपर्ने समेत बताउनुभयो ।

४. **श्री सुदिप गौतम (अध्यक्ष, नेपाल पत्रकार महासंघ दाङ शाखा)**: पत्रकार महासंघ, प्रेस काउन्सिलले छुट्टाछुट्टै पत्रकार आचारसंहिता बनाएको इतिहास छ । बि.स. २०६० सालपछि मात्र संयुक्त रुपमा पत्रकार आचारसंहिता आएको अबस्थामा सहकार्य अनिबार्य भएको कुरा जोड दिँदै उपस्थित सबैलाई धन्यबाद प्रदान गर्नुभयो ।

## २. मिडिया संवादः

### क. कपिलवस्तुः

२०७१ माघ २२ गते कपिलवस्तुको तौलिहवामा सामाजिक सदभावको लागि मिडियाको भूमिका विषयक मिडिया सम्वाद कार्यक्रम आयोजना गरियो । उक्त कार्यक्रममा निम्नानुसार सहभागीले विचार व्यक्त गर्नुभएको थियो ।

➲ **किरणमान बज्राचार्य, का.वा. अध्यक्ष नेपाल पत्रकार महासंघ कपिलवस्तु** : कपिलवस्तु महासंघमा १०५ जना पत्रकार आवद्ध छन् । यहाँ ८ वटा एफएम र ७/८ वटा साप्ताहिक पत्रिका छन् । २०६४ सालमा एउटा घटना भयो । त्यसबाट सदियौंदेखिको सामाजिक सद्भावमा प्रतिकूल असर पर्‍यो । सो घटनामा केही मानवीय क्षति भएपनि सवैको साझा प्रयासले पुनः सामाजिक सद्भाव कायम गर्न सकियो ।

➲ **चन्द्रकिशोर झाः** जसरी पहाडीक्षेत्रमा कुनै चालकबाट अलिकति पनि आँखा झिमिक्क भयो भने गाडी दुर्घटना हुन सक्छ, त्यसैगरी समाजको गतिशीलता र विकासक्रममा मिडियाबाट अलिकति पनि त्रुटी भयो भने परिणाम भयावह हुन सक्छ । समुदाय विशेषसँग जोडिएका र समाज- समाजवीचको सम्बन्धका कुरामा अलिकति पनि भूलचुक भयो भने त्यसले पार्ने प्रभावको क्षतिपूर्ति तत्काल हुनै सक्दैन ।

हामी सामाजिक सद्भावको एकोहोरो कुरा गरिराखेका छैनौं । सामाजिक न्यायको पनि कुरा गरिराखेका छौं । सामाजिक न्याय र सामाजिक सद्भाव एउटा रथका दुई पांग्रा हुन् । अरुबेला सानोतिनो त्रुटी भयो भने त्यसलाई सच्याउन सकिन्छ । तर, सामाजिक तनाव र समाजमा ध्रुवीकरण भइराखेको बेला सानो त्रुटीले भयावह स्थिति निम्त्याउन सक्छ । मानिसलाई वस्ती जलाउन उत्प्रेरित गर्न सक्छ, भागाभागको स्थिति उत्पन्न हुनसक्छ, कैयौं मानिस विस्थापित हुन सक्छन् ।

पत्रकार आफू जुनसुकै पृष्ठभूमि र जुनसुकै समुदाय विशेषबाट आएको भएपनि संयमित र सन्तुलित रुपमा सूचना सम्प्रेषण गर्न सकेन भने उसको सानोभन्दा सानो त्रुटीले ठूलो जोखिम निम्त्याउन सक्छ । त्यसकारण दुर्घटना हुनुभन्दा पहिले नै सतर्क भइराख्नु पर्छ भनेर प्रेस काउन्सिलले यो कार्यक्रम आयोजना गरेको हो । एफएममा सबैको पहुँच सहज र सरल छ । खेतमा काम गर्नेले एफएम सुनिरहेका हुन्छन्, घरमा खाना पकाउनेले पनि सुनिरहेका हुन्छन् । एफएम सहज उपलब्ध छ । पत्रिकाहरु सवै ठाउँमा नपुग्न सक्छन्, सुविधाजनक ढंगले सवैले किनेर पढ्न सक्ने क्षमता नहुन सक्छ । तर स-सानो मोबाइलमा पनि एफएम सुन्न सकिन्छ । नकारात्मक वा सकारात्मक रुपमा सामाजिक सद्भावका निम्ति एफएमको ठूलो महत्व हुन्छ । विगतमा यही क्षेत्रमा विभिन्न एफएमहरुको स-सानो त्रुटीले ठूलो तनाव उत्पन्न भयो ।

सूचना संप्रेषणका क्रममा कहिलेकाहिं पत्रकारले आफूलाई असुरक्षित महसुस गर्दछन् । पत्रकारको सुरक्षा पाठक, समुदाय र जनताबाट हुने हो । निश्चित रुपमा कानूनका केही सीमा छन्, त्योभित्र रहेर राज्यले पत्रकारितालाई सुरक्षा दिने हो । त्यो पर्याप्त हुँदैन । साँचो अर्थमा पत्रकारको सुरक्षा जनता, दर्शक र स्रोताले दिने हो । सुरक्षा त्यतिबेला दिन सक्छन्- जव उनीहरुलाई यसले मेरो स्वरलाई प्रक्षेपित र मुखरित गरिराखेको छ भन्ने अनुभूति हुन्छ । स्थानीय

मिडिया वा समग्र पत्रकारिता क्षेत्रमा काम गरिराख्नु भएका साथीहरु समुदायको ढुकढुकी बन्न सक्नु भएको छ कि छैन ?

तराईका केही जिल्लामा नहरको डिलैडिल सिसौको रुख रोपियो । कालान्तरमा धेरै ठाउँ सिसौको रुख सुकेर गयो । यसको प्राकृतिक सन्देश के हो भने एउटै प्रजातिका रुखहरु रोप्न खोज्यौं भने लामो समयसम्म टिक्न सक्दैन । जंगल यसकारणले मंगल भएको छ, त्यहाँ विभिन्न प्रजातिका रुख, बिरुवाहरु छन् । प्रकृतिको यो सन्देशले हाम्रो सामाजिक परिवेशसंग तादात्म्यता राख्दछ । विभिन्न समुदायकाहरु, पहिचान भएकाहरु, सरोकार र पृष्ठभमि भएकाहरु सँगसँगै हुर्किन सक्ने परिवेश नेपालको विशेषता हो । नेपालीहरुबीचको सम्बन्ध नै राष्ट्रियताको जग हो । त्यसअर्थमा नेपालका मिडियाले जनताको आवाज बोल्न सक्नुपर्छ ।

जतिखेर कपिलवस्तुमा आगो बलेको थियो त्यतिबेला वीरगञ्जका अखवारहरुमा पनि त्यो समाचार आयो । त्यसले बीरगञ्जको समाजिक सन्तुलनमा प्रतिकूल असर पुऱ्याउने निश्चित थियो । तर, त्यहाँको नागरिक समाज, मिडिया अग्रजहरु र प्रशासन मिलेर तत्काल त्यसमा हस्तक्षेप गर्ने काम भयो । स्थितिलाई काबुभन्दा बाहिर जान दिइएन । एउटा जिल्ला विशेषको मिडियाले बालेको चुल्होले अर्को जिल्लामा पनि आगो सल्किन सक्छ ।

➲ **प्रमुख जिल्ला अधिकारी, विनोदप्रकाश सिंहः** केही समयअगाडि राष्ट्रिय स्तरको ठूलो मिडियामा पूर्वको सनसनीखेज समाचार आयो, धरानको हो सायद । कुनै महिलाले बसमा छुटेको कसैको ९३ लाख रुपैयाँ फेला पारेर सम्बन्धित व्यक्तिलाई फिर्ता गरेको । त्यसले देशैभरि एउटा तरंग फैल(ायो । यस्ताखालका मानिस पनि समाजमा छन् भनी राष्ट्रपतिले समेत शुभकामना र बधाई दिए । तर केही दिनपछि समाचार मिथ्या प्रमाणित भयो । ग्राहक अथवा पाठक संख्या बढाउनलाई मात्र कतिपय अवस्थामा समाचारलाई बढाइचढाई गरेर प्रस्तुत गर्ने प्रचलन पनि नभएका होइनन् । तर यस्तो कुराबाट मिडियाले बच्न आवश्यक छ ।

मिडियाका फ्रन्टपेजमा राजनीतिक न्यूज बढी राख्ने प्रचलन छ । राजनीतिक न्यूज सँगसँगै गिट्टी कुटेर २ नावालक सन्तान दुःखसाथ भरणपोषण गरिरहेको महिलाको स्टोरी राख्यौं भने ८० प्रतिशत बढीले त्यसलाई प्राथमिकता दिएर पढ्छन् । राजनीतिक कुराहरु हरेक दिन हुन्छन् । तर जुनबेला मानवीय संवेदना, मानवीय अप्ठेरा र संघर्षका कुरा आउँछन्, त्यो वेला सम्पूर्ण समाज, सम्प्रदाय र सवै वर्ग एक हुन्छन् । मिडियामा आएको समाचारकै प्रभावबाट यतिजनाको पठनपाठनको जोहो भयो, गाँसवास र रोजगारीको व्यवस्था भयो भन्ने हामीले सुन्दै आएका छौं ।

कुनै पनि सरकारी वा सार्वजनिक निकाय, राजनैतिक दल आदिले गरेका काम र खर्चहरु सवै पारदर्शी हुनुपर्छ । ती निकायले गर्नुपर्ने काम, तिनले दिने सेवाहरुका बारेमा कुनै गुनासा, अप्ठ्यारा, व्यक्तिगत तथा संस्थागत रुपमा भएका बेथिति, भ्रष्टाचारलगायतका कुरा छन् भने धक फुकाएर मिडियामा ल्याइदिनुस् । त्यसमा सुधार गर्न र त्यस्ता क्रियाकलापमा संलग्न कर्मचारीलाई विभागीयलगायतका कारवाही गर्न तत्पर हुने छौं । यो जिल्लामा कहिल्यै नआएका मानिसहरुले यस बारे ३/४ वटा भ्रम राख्छन् । पहिलो मुस्लिम र हिन्दुहरुबीच दंगा छ, दोस्रो मधेशी र पहाडेबीच द्वन्द्व छ, अर्को जनजातिहरुको द्वन्द्व छ । मलाई के लाग्छ भने- यति समतापूर्ण र सौहार्द्रतापूर्ण वातावरणमा मिलेर बसेको जिल्ला सायदै नेपालमा कुनै होला । तर हामी ६४ सालको कुरालाई कोट्याएर मान्छेलाई भ्mस्काई दिने र त्यही कुरा दोहोऱ्याई रहने गर्छौं । सचेत हुनुपर्छ, त्यो आफ्नो ठाउँमा छ । तर त्यहि कुरा कोट्याएर हिन्दु र मुस्लिमको घर जलेको

थियो भनिरहन आवश्यक छैन । अव अगाडि कसरी बढ्ने, सम्प्रदाय, क्षेत्र, विभिन्न जातजाति र लैंगिकरुपमा कसरी सद्भाव बढाउने भन्ने कुराहरुमा जोड दिनुपर्छ ।

➲ **दीपक पाण्डे, मधेशी जनअधिकार फोरम नेपाल, युवा नेताः** हामी पत्रकारलाई स्वतन्त्र भन्छौं । तर यहाँका मिडियाले सरकारको भाषा बढि बोल्छन् । छिमेकी देश भारतका मिडियाले विपक्षीको कुरा बढी छाप्छन्, बोल्छन् । यसको एकमात्र कारण हो, यहाँ दलगत मिडियाका छाता संगठनहरु छन् । यसकारण हामीबीच मतभेद छन् । यहाँ १०५ जना पत्रकार साथीहरु हुनुहुन्छ । खेतमा काम गर्ने श्रमिकको लागि राज्यले दैनिक ५०० ज्याला निर्धारण गरिदिएको छ । तर श्रमजीवी पत्रकारको लागि राज्यले पारिश्रमिक तोकेको छ कि छैन ? मलाई लाग्छ- यहाँका मिडियाहरु पार्टीगत सहयोग, सरकारी कार्यालय वा गाविसको भरमा चलेका छन् । सत्ता पक्षका नेताहरु जिल्ला आ( उँदा उनीहरुको समाचार यहाँका सवै मिडियामा पहिलो पेजमा छापिन्छन् । हामी विपक्षीले गर्ने विकास निर्माणको काम, प्रशासनको विरोध वा आन्दोलनका समाचारले प्राथमिकता पाउन गाह्रो छ, किन ? आचारसंहिताको ९ नं. बुँदामा भनिएको छ, 'उत्तजेना फैलाउन सक्ने तस्वीर प्रकाशन गर्नु हुँदैन ।' तर यहाँ विज्ञापनको नाममा ब्युटिसियनहरुको नग्न तस्वीर प्रकाशन भइरहेका छन् । यसले समाजमा नकारात्मक प्रभाव पारिराखेको छ ।

➲ **भक्तिराम पन्थी, नागरिक समाज अध्यक्षः** समाजले जहिले पनि सकारात्मक समाचार सुन्न चाहन्छ । तर अहिलेको सन्दर्भमा सकारात्मक भन्दा नकारात्मक सन्देश सुन्ने बानी बसिसक्यो । भोजपुरमा एउटा पुल बन्यो, ३ किमी बाटो जनताको सक्रिय सहभागितामा निर्माण भयो, यो समाचार हुन सकेन । बस दुर्घटना हुँदा ३० जनाको मृत्यु, १५ जना घाइते, र समाजमा द्वन्द्व तथा लडाँइको अवस्था आदि राम्रो समाचार बन्यो । मट्टीतेलमा सलाईको एउटा काँटी कोरेर फालिदिंदा जसरी ठूलो आगजनी हुन्छ । मिडियाले दमकलको रुपमा काम गर्नुपर्छ ।

➲ **सुरेन्द्र लम्साल, अध्यक्ष, स्वतन्त्र पत्रकार संघः** हामी (पत्रकारहरु) जिल्लाको दक्षिणी भेगमा पुग्न सकेका छैनौं । त्यहाँका सूचना वा समाचारलाई अपेक्षित रुपमा ल्याउन सकिएको छैन । सडकको घुम्तीमा अश्लिल खालका विज्ञापन प्रचार प्रसारका निम्ति राखिएका हुन्छन् । सवारी चालकको आँखा त्यसमा पर्दा दुर्घटना हुने गरेको हो जस्तो लाग्छ । टेलिभिजनमा विभिन्न रक्सीका बोतल राखेर प्रचारप्रसार गरिन्छ । दृष्यमा देशको प्रधानमन्त्रीले केही बोली राखेको हुन्छ, तलपट्टी मदिराको प्रचार भैराखेको हुन्छ । यस्ता सामाग्रीको प्रचारप्रसारले सामाजिक सद्भावमा असर पुऱ्याउँदैन र !

➲ **विनोद चौधरी, जिल्ला सचिवालय सदस्य, नेकपा माओवादीः** एउटा एफएममा सुनें, 'आज दशैंका दिन नेपालका सम्पूर्ण हिन्दुहरुले जमरा लगाउँदैछन्' अचम्मै परें । म पनि हिन्दु, मैले त जमरा लगाइराखेको थिइन । यस्तो कुरा भन्नु हुँदैन मिडियाले । हामीले पटक पटक सुन्ने गरेको शव्द छ- नेपाली र मधेशी । यो पनि विभेदपूर्ण शब्द भयो । त्यस्तो कुरा मिडियाका मित्रहरुले गर्नु हुँदैन ।

कपिलवस्तुको ४ नम्वरमा औद्योगिक मेला भइरहेको छ । यहीं पकडीमा पनि धार्मिक कार्यक्रम जारी छ । दुवै स्थानमा गएँ । भीड उस्तै छ । लगानी पनि लगभग उस्तै । तर कपिलवस्तुका ८ वटा एफएमबाट प्रसारण हुने सूचना वा समाचारमा औद्योगिक मेलाले जति स्थान पाइराखेको छ, त्यति धार्मिक कार्यक्रमले पाइराखेको छैन । किन यस्तो ? यो पनि विभेदको एउटा जल्दोवल्दो उदाहरण हो ।

➲ **हिमलाल वाग्ले, जिल्ला सदस्य, प्रगतिशील पत्रकार संघः** अहिलेको समाजमा स्वतन्त्र पत्रकारिता भन्ने हुँदैहुँदैन । हामी सञ्चारकर्मीहरु जसले धर्मको वकालत गर्छौं, कसरी स्वतन्त्र हुन सक्यौं ? हिजो राजाहरुको शासन छउञ्जेलसम्म उनीहरुको गाना गाउने पत्रकारहरु कसरी जनताका पक्षमा भए ? अमेरिकाले इराकमाथि आक्रमण गऱ्यो, अमेरिकाको गुनगान गाउने पत्रकार र मिडियाहरु कसरी जनपक्षीय हुनसके ? जुन दिनबाट यो समाज वर्गमा विभाजित भयो, जुन दिनसम्म विभाजन रहन्छ, त्यो दिनसम्म स्वतन्त्र पत्रकारिता हुनै सक्दैन ।

➲ **राजन कुमार श्रीवास्तव, जिल्ला अध्यक्ष, नेपाल परिवार दलः** आचारसंहिताको ५ नं मा भनिएको छ- भेदभाव हुनेगरी सूचना संप्रेषण गर्न हुदैन । म परिवारको दलको अध्यक्षको साथै ४/ ५ वटा साहित्यिक संस्थासँग आवद्ध छु । साहित्यिक विधामा कलम चलाउँछु । यहाँ भवानी भिक्षुज्यूबारे एउटा कार्यक्रम भएको थियो, मैले आयोजना गरेको । पत्रिकामा समाचार आयो । मेरो फोटो पनि छापियो तर रामको हो कि- श्यामको हो थाहा छैन, कसैको नाम छैन । अध्यक्षता मेरो थियो, त्यो छैन । कसले कार्यक्रम सञ्चालन गऱ्यो, त्यो छैन । तर अन्य मित्रहरुको नाम थियो । पत्रकार मित्रहरुले त्यसरी समाचार ल्याइदिनु भएन ।

➲ कपिलवस्तु घटना हुँदा प्रत्येक दिन भारतीय पत्रिकाले 'सैकडौं मधेशी मारदिए गए' भनेर लेख्थ्यो भने नेपाली पत्रिकाले पहाडी समुदायका यति मरे भनेर लेखिदिन्थ्यो । मारिने त मान्छे हो, पहाडी र मधेशी भनेर मारिने होइन । मधेशीले पहाडी माऱ्यो, पहाडीले मधेशी माऱ्यो भन्ने पनि होइन । मार्ने त अपराधीले हो । यस्ता कुरालाई ख्याल नगरेर भावावेशमा लेख्दा विगतमा सामाजिक सद्भाव खल्बलिएको थियो । अहिले पनि काठमाडौं या पूर्वका जिल्लामा पत्रकार मित्रहरुको गाडी तोडिन्छ, पत्रिका जलाइन्छ । त्यो अवस्था कपिलवस्तुमा छैन ।

➲ **राजेन्द्र दाहाल, स्टेशन मेनेजर, रेडियो समानताः** कपिलवस्तुमा पत्रकारको संख्या १०५ पुगेको छ तर क्रियाशिल २५/३० जना मात्र छन् । बाँकी पत्रकारले गरेको कामको अपजस क्रियाशिल पत्रकारहरुले व्यहोर्नु परेको छ । पत्रकार शुद्धिकरण अभियान आवश्यक छ ।

➲ **मनोजः** यहाँ विभिन्न व्यक्तिले पत्रकारको सदस्यता लिएका छन् । म महासंघको पार्षद छु तर पनि जिल्लाको महासंघले के गरिराखेको छ, मलाई थाहा हुँदैन । कृष्णनगर क्षेत्रबाट ८/१० वर्षदेखि पत्रकारिता गरिराखेको छु । मैले क्रान्ति गरेर सदस्यता लिएको हुँ । भनिन्छ- महासंघमा भागबण्डा हुँदैन तर भागबण्डामा सदस्यता वितरण गरिएको छ । म मधेशी पत्रकार संघको अध्यक्ष पनि बनेको छु किनकि भागबन्डा भयो भने मेरो भागमा पनि केही आउँछ कि ! मैले पनि एउटा पत्रिका चलाएको छु । पत्रिका चलाउनुभन्दा पहिला मलाई पत्रकार नै होइन जस्तो व्यवहार गर्थे साथीहरुले ।

➲ **नवराज कुँवर, प्रबन्ध निर्देशक, बुटवल टुडे**

विज्ञापन भनेको पत्रिका चलाउने तेल हो । त्यही विज्ञापनले पत्रिकालाई चलाउँछ, त्यसैले त्यसलाई जलाउँछ । अर्को अर्थमा भन्ने हो भने विज्ञापन पनि सूचना हो । उपचारको क्रममा कहिँ जानु भयो भने अमुक रोगको उपचार अमुक ठाउँमा हुन्छ वा फलानो औषधी फलानो ठाउँमा पाइन्छ भन्ने थाहा पाउँदा भौंतारिनु पर्दैन । इन्टरनेटले नेपालका ३५ प्रतिशत मानिसलाई सूचना दिएको छ । कुनै मुद्दा स्थानीय मिडियाले उठायो भने स्थानीय प्रशासनले सामान्य रुपमा हेर्छ । त्यही मुद्दा राष्ट्रिय मिडियाले उठायो भने गम्भीर रुपमा लिन्छ ।

➲ **नारायण पौडेल, संस्थापक अध्यक्ष, नेपाल पत्रकार महासंघ कपिलवस्तुः** म बाहुन परें, कम्तिमा १० वर्षसम्म दलित, जनजातिको प्रहारको निशाना वा तारो हुनुपर्छ, हुन्छु भन्ने जान्दछु । दोस्रो पुरुष परें, महिलाको प्रहार सुन्नु पर्छ भन्ने बुझेर गएपछि सजिलो । तेस्रो पहाडिया परें, मधेशमा बस्दा मैले विहानदेखि वेलुकासम्म गाली सुन्नुपर्छ भनेर आफैं तयार भएपछि बोल्नु पर्ने जरुरत नै पर्दैन । बोल्यो कि पोल्यो बनाउने काम कमोवेशी रुपमा हाम्रा मिडिया, हाम्रो कलम, हाम्रो पक्षधरताले गरेको छ ।

आफू बसुञ्जेल राम्रो, गएपछि नराम्रो भन्ने कल्चरको विकास गर्‍यौं । यसबाट महासंघ पनि अछुतो रहन सकेन । राजनीतिक असफलता, संविधान बन्यो बनेन, बनाउने र नबनाउनेबीचमा द्वन्द्व चर्काउने वा नचर्काउनेमा पनि मिडियाको हात छ । समाजलाई द्वन्द्वतिर धकेल्न र असन्तोष प्रकट गर्नमा हामीले सहयोग गर्‍यौं, तर त्यसलाई समन्वय गर्न सकेनौं । नेताहरुलाई खुइल्याउन सक्यौं तर उनीहरुको संरक्षण र सम्बर्द्धन गर्न सकेनौं । पार्टीहरुप्रति द्वन्द्व चर्काउन कलम चलायौं तर समन्वय गर्नेतिर चलाएनौं । अब आफैंलाई हेर्ने हो कि ?

➲ **श्री खिलबहादुर भण्डारीः** अघि एक जना सञ्चारकर्मी साथीले व्यक्त गरेको सानो वाक्यले हामीलाई कति उत्तेजित र उथलपुथल बनाइदियो । पत्रकारले शव्द चयनमा ध्यान पुर्‍याउन सकेन भने कति धेरै भड्काव जन्माई दिन्छ भन्ने उदाहरण हो त्यो । अघि प्रमुख जिल्ला अधिकारीले अनुजा काण्डको प्रसंग उठाउनु भयो । पत्रिकामा आएको त्यो समाचारमा सत्यता थिएन । तर त्यस विषयमा पत्रिकाले क्षमायाचना समेत गरेन भन्नुभयो । यस्ता कुराले मानिसलाई एकैछिनमा धेरै तरंगित बनाइदिन्छ । दीर्घकालिन असर बारे ख्याल गर्न सकेनौं भने त्यसले समाजलाई समृद्धितिर होइन कि भड्कावतिर लैजाने खतरा रहिरहन्छ ।

## ख. नवलपरासीः

२०७१ माघ २३ गते सामाजिक सदभावको लागि मिडियाको भूमिका विषयक मिडिया सम्वाद सम्पन्न भयो । उक्त कार्यक्रममा देहायानुसार व्यक्तिहरुले धारणा राख्नु भएको थियो ।

➲ **श्री चन्द्र किशोर झा, सदस्य प्रेस काउन्सिल नेपालः** तराईतिर जाडो महिनामा घुर तापिन्छ । चारैतिर टोल छिमेकका मानिसहरु बसेर जाडो छल्ने माध्यम पनि हो त्यो । घुर ताप्नेक्रममा आज कसको भैंसी ब्यायो, कसको भैंसीले कसको बाली खायो, कसको खेतीपाती राम्रो भयो, कसको नराम्रो भयो, कसको बुहारी माइत जाँदैछ , कसको नानीलाई स्कूलमा भर्ना गर्नुपर्ने छ, आज को सदरमुकाम गयो ? आदि गतिविधि र सूचना बारे छलफल हुन्छ । यसरी समाजका अप्ठ्यारा, गुनासा बारे छलफल गरी असमझदारीको व्यवस्थापन गरिन्छ ।

जवसम्म समुदायले मिडियालाई स्वीकार गर्दैन, मिडियाको विश्वसनीयता पनि हुन सक्दैन । जसरी एउटा बिरामीको डाक्टरप्रति भरोसा हुन्छ । तर उसलाई डाक्टर कुन पृष्ठभूमिको हो, कुन जातिको हो, कुन धर्मको हो, त्यसको कुनै अर्थ हुँदैन । आफूलाई लागेको रोगका बारेमा ऊसँग साझेदारी गर्छ । पत्रकारले आम मानिसलाई भन्न सक्नुपर्छ - मलाई विश्वास गर, म पत्रकार हुँ । कुनै पृष्ठभूमिका वा कुनै सरोकार राख्नेहरुले मिडियालाई आफ्ना कुरा निर्धक्कसंग भन्न सक्नुपर्छ । मिडिया सबैको साझा चौतारी हुन सक्नुपर्छ । राजनीतिज्ञ र राजनैतिक पार्टीहरुको जनमत छ छैन भनेर बेलाबेलामा निर्वाचनका आधारमा परीक्षण हुन्छ । तर, पत्रकारिता र सञ्चारमाध्यमहरुले प्रत्येक दिन जनताको परीक्षणबाट गुज्रिराख्नु पर्छ । अखबारमा पाठकको

(जनता) प्रतिकृया आइराखेको हुन्छ, एफएममा (रेडियो) श्रोताको प्रतिक्रिया आइरहेको हुन्छ, टेलिभिजनमा दर्शकको प्रतिक्रिया आइराखेको हुन्छ । यो नै सञ्चारमाध्यमको परीक्षण हो ।

समाजमा तनाव वा ध्रुवीकरण भएको बेला मिडियामा शब्दको सानो त्रुटी भयो भने पनि त्यसले ठूलो अप्ठ्यारो पार्न सक्छ । कतिपय अवस्थामा गाउँका-गाउँ विस्थापित हुने स्थिति हुन्छ । नेपालकै सन्दर्भमा एफएमबाट आएको सूचनाको प्रभावले मानिस विस्थापित भएका उदाहरण पनि हाम्रासामु छन् ।

समझदारी र सद्भावको लागि ३ 'स' को आवश्यकता पर्छ । सूचना, संवाद र समझदारी । जुन प्रकारको सूचना प्रवाह गरिन्छ त्यहीअनुसार संवादको खुट्किलो अगाडि बढाउन सकिन्छ । यदि पूर्वाग्रही सूचना आयो, सूचना लुकाउने काम भयो, नियतवस सूचना पस्किने काम भयो भने त्यसले संवादको स्थिति ल्याउँदैन । जवसम्म सार्थक संवाद हुंदैन तवसम्म समझदारी पनि हुन सक्दैन । ३ 'स' मध्ये सबभन्दा प्रभावशाली भनेको सूचना हो ।

आज हामीले SMS चलाई राखेका छौं । सामाजिक दंगा भइरहँदा SMS ले मानिसलाई तुरुन्तै तरंगित र उत्तेजित बनाइदिन सक्छ । फेसबुक, ट्वीटरजस्ता सोसल मिडियाहरुको प्रभाव बढ्दै गएको छ । अरु मिडियाको तुलनामा सोसल मिडियाबाट प्रवाह हुने सूचनाको गति तीब्र र बृहद हुने भएकोले यसले समाजमा पार्ने सकारात्मक वा नकारात्मक प्रभावको आँकलन दुरुह बनेको छ । त्यसैले यसलाई निगरानीमा राख्न बहश शुरु भैसकेको छ । तथापि, कमसेकम पत्रकार र पत्रकारिताबाट यस्तो अवस्थामा निश्चितरुपमा पूर्वाग्रह राख्नु हुँदैन । तर, यो पक्षरहित हुन सक्दैन । मिडिया समाज परिवर्तनको अहिंश्रक माध्यम हो । मिडियालाई जति प्रभावकारी, उपयोगी र समाज केन्द्रित बनाउन सक्छौं त्यति नै मिडियाप्रति भरोसा हुन्छ । राज्यले मात्र मिडियालाई सुरक्षा दिन सक्दैन । सुरक्षा दिने समुदाय र समाजले हो । समाजले त्यतिखेर सुरक्षा दिन सक्छ जब उसलाई लाग्छ- यो मिडियामा मेरो अनुहार देखिएको छ । मेरो स्वर सुनिएको छ ।

➲ **कृष्णाराज पन्त** : पत्रकार कल्पना भट्टराईले हाम्रो कार्यालयमा आएर बालबालिकासंग सम्बन्धित केसहरु अध्ययन गरी स्थानीय पत्रिकामा एउटा समाचार प्रकाशित गर्नुभएको थियो । सञ्चारकर्मीले न्याय क्षेत्रका कानुनी प्रक्रिया बारे समेटेर समाचार बनाएको कमै देखिएको छ । मिडियाको परिभाषाभित्र पत्रपत्रिका मात्र नभएर एफएम, टेलिभिजन समेत पर्दछन् । मिडियाले आयोजना गर्ने कार्यक्रममा पनि न्याय क्षेत्रमा काम गर्ने संघसंस्थालाई सहभागी गराएको पाइँदैन ।

➲ **मनोजकुमार हरिजन** : सञ्चारले जनताको कुरा उठाउँदा जनताले बुझ्ने हुनुपर्छ । कतिपय महत्वपूर्ण कुराहरु सञ्चारमाध्यमले उठाउँछन् तर भाषाको समस्याले गर्दा जनताले बुझ्न सक्दैनन् । जनताले नबुझेपछि त्यो जतिसुकै महत्वपूर्ण भएपनि कुनै अर्थ रहँदैन । राष्ट्रिय मिडियामा कुनै समाचार प्रकाशित भयो भने त्यो सरोकारको विषय बन्छ । तर, त्यही सूचना वा समाचार स्थानीय मिडियामा प्रकाशित भयो भने त्यसलाई वास्ता गरिंदैन ।

➲ **रवि गौतम, बाल अधिकार अधिकृत, जिल्ला वाल कल्याण समिति**: मेरो बारेमा समाचार लेखिएको हुन्छ, तर मलाई थाहा हुँदैन । पुष्टिका निम्ति मसंग प्रतिक्रिया लिएको हुँदैन । गत २० गते एसएलसीको तयारी गर्दै रहेका भाइ बाहीनीमाथि केही दुर्व्यवहार भएको छ । मैले त्यसको स्थलगत अनुगमन गरें । मिडियामा समाचार प्रिन्सिपलले बलात्कारको प्रयास गर्नुभयो भनेर आयो । जुन कुरालाई बालबालिकाले पनि अस्वीकार गरेका छन् - भएको दुर्व्यवहार हो, बलात्कारको प्रयास होइन भनेर । कहिलेकाहिं शब्दले, सारले असाध्यै ठूलो असर पुऱ्याएको हुन्छ ।

बालबालिकाको विषयमा कलम चलाउँदा बढी संवेदनशील भइदिनुहुन अनुरोध गर्दछु ।

➲ **के.वी. राना, केन्द्रिय सचिव, नेपाल प्रेस युनियन** : यहाँ ८ वटा एफएम सञ्चालनमा छन्  र अरु ३ वटा लाइामा छन् । ३ वटा स्थानीय टेलिभिजन चलिसकेको अवस्था छ भने अरु केही चल्ने क्रममा छन् । केही साप्ताहिक पत्रपत्रिका पनि छन् । यी मिडियाले सामाजिक सद्भाव कायम गर्नका लागि आफ्नो धर्म निर्वाह गरेका छन् कि छैनन् भन्ने विषयमा सरकारी निकायबाट पनि अनुगमन हुन जरुरी छ ।

जिल्लामा सुरुवातदेखि नै हरेक जातजातिको मुख्य पर्वलाई विशेष कार्यक्रम बनाएर प्रसारण गर्दै आएका छौं । यदाकदा सुन्ने गरिन्छ- एउटा जात विशेषको मिडिया हाउस, पार्टी विशेषको मिडिया हाउस । मुलुक संघीय संरचनामा गएपछि विभिन्न भूगोल र जातजातिका कुरा उठाउन १० पटक सोच्नु पर्ने अवस्था छ । एक पक्षको समाचार बनाउँदा अर्को पक्षले केही भन्ला कि भन्ने डर छ ।

एउटा दलितले गलत काम गऱ्यो, त्यसको समाचार बनायौं भने, हामी दलितलाई मिडियाले खेद्न थाल्यो भनिन्छ । त्यस्तै, जनजातिको विषयमा कुनै समाचार आयो भने, मिडियामा हाम्रो पहुँच छैन त्यसैले हामीलाई खेद्न थाल्यो भनिन्छ । त्यसकारण यस्ता विषयमा लेखेर किन टाउको दुखाउने भन्ने हदसम्म पत्रकार साथीहरु पुगेको मैले आभाष पाएको छु । प्रमुख जिल्ला अधिकारी यहीं हुनुहुन्छ । विशेष आग्रह गर्दछु- मिडिया दर्ता गर्ने बेलामा त्यसले के प्रयोजनका लागि दर्ता गराउँदै छ भन्ने विषयमा सोच-विचार गरेर मात्र अनुमतिको सिफारिश गरिदिन अनुरोध गर्दछु ।

➲ **टिकाराम गैरे, पूर्व सभापति महासंघ** : जहाँ विभेद हुन्छ, त्यहाँ सद्भाव जरुरी हुन्छ । एक-आपसमा साक्षातकार हुँदा सद्भाव प्रकट गर्छौं । अनुपस्थितिमा विभेदका कुरा गर्छौं । हामीमा कमिकमजोरीहरु धेरै छन्, सच्चिन जरुरी छ । कुनैबेला समुदायबीच जुन सून्यता थियो त्यसलाई हटाउने काम मिडियाले गरेका छन् ।

➲ **खिलबहादुर भण्डारी** : महिला हिंसा, राजनैतिक पार्टीको द्वन्दलगायत अन्य विषयका कुराहरु आए तर मुख्य विषयवस्तुमा साथीहरु केन्द्रित हुन सक्नु भएन । समाजको बनोट कस्तो छ ? वल्लो घर मुस्लिमको छ त पल्लो हिन्दुको, तल्लो घर मधेशीको छ त माथिल्लो पहाडीको, वल्लो घर जनजातिको छ भने पल्लो घर दलितको । सबैका एक-आपसमा आँगन जोडिएका छन् । नवलपरासीको समाज विभिन्न धर्माबलम्बी, जातजाति, भाषाभाषीको बसोबास भएको मिश्रित समाज हो । यस्तो समाजमा कसरी सद्भाव कायम गर्न सकिन्छ ? यसमा मिडियाको भूमिका के हुन सक्छ ? भनेर यो संवाद कार्यक्रम आयोजना गरिएको हो । सामाजिक सद्भाव छैन, भोलि नै सामाजिक सद्भाव खल्बलिन्छ, उत्पात मच्चिन्छ भनेर गरिएको होइन । यो सद्भावलाई कसरी दीर्घकालीन बनाउने, यहाँको समाजलाई कसरी उन्नत र समृद्धिशाली बनाउने, यसका लागि सञ्चारकर्मीको भूमिका के हुनुपर्छ भन्ने विषयमा छलफल गरेका हौं ।

अहिले पत्रकार महासंघको उपाध्यक्ष छु । मैले पत्रकारिता सुरु गरेको चितवनबाट हो । मोफसलका साना साना अखवारमा समाचारदाताको रुपमा काम गरेको अनुभव छ । त्यसकारण मोफसलको पीडा राम्रोसँग थाहा छ । साना अखवारको सम्वर्धनका निम्ति के के गर्न सकिन्छ अध्ययन गरी प्रतिवेदन पेश गर्न नेपाल पत्रकार महासंघमा एउटा उपसमिति छ । त्यसको संयोजक छु । कष्ट गरेर मोफसलबाट निस्किने कुनै अखवारलाई 'घ' बाट 'ग', 'ग' बाट 'ख' मा लान सकियो भने वर्ग बढ्दाको पैसाले उनीहरु कोठा भाडा तिर्न सक्छन् । एउटा कर्मचारीलाई

तलब दिन पुग्छ भन्ने थाहा छ । एकमुष्ट पत्रिका काउन्सिलमा बुझाउने, वर्गीकरणमा पार्ने र सरकारी सुविधा उपभोग गर्ने प्रवृति बढ्दै गएको छ । मिहिनेत गर्नु पर्दैन, न्यूज खोज्न भौंतारिन पर्दैन, अनलाइन खोल्यो न्यूज तान्यो, पत्रिकामा भऱ्यो, ५/१० कपी छाप्यो, काउन्सिलमा बुझायो, वर्गीकरणमा पाऱ्यो अनि घरमा बसी बसी सरकारी सुविधा उपभोग गऱ्यो । कति सजिलो पत्रकारिता ? यसलाई हामी कपिपेष्ट अर्थात् हुबहु पत्रकारिता भन्छौं । हो, यस्तो विकृति रोक्न खोजेको छ काउन्सिलले ।

यस्तो विकृतिका कारण गरिखाने पत्रकारहरु मारमा परेका छन् । गतसाल एकजना मित्रको पत्रिका हुबहुमा परेछ । साथी रिसले आगो हुँदै काउन्सिलमा आएर भन्नु भयो- 'मेरो पत्रिकालाई हुबहुमा पार्ने ? त्यति मिहिनेत गरेर निकालेको पत्रिका कसरी हुबहुमा पर्छ ? यो तपाईहरुको पूर्वाग्रह हो ।' उहाँकै अगाडि पत्रिका मगाएर हेरियो । माष्टहेडबाहेक सबै राससका न्यूजले भरिएको रहेछ । मौलिकता शुन्य । पत्रिका राससको ग्राहक बनेको पनि रहेनछ । उहाँ केही नबोली फर्कनुभयो । राससले आफ्नो न्यूज चोरी भएको उजुरी गरेको छ काउन्सिलमा । काउन्सिलका पदाधिकारी वा कर्मचारीले पत्रिकै पढ्दैनन् । त्यसकारण कसरी छापियो भन्ने थाहा नै पाउँदैनन् भन्ने धेरै पत्रकार साथीमा भ्रम छ । त्यसैले उहाँहरु हुबहु पत्रकारिताको शिकार भैरहनु भएको छ । यस दिशातर्फ ध्यान दिनु भयो भने कोही कसैलाई अन्याय हुने छैन । हुबहु पत्रकारिता गरेर राज्यको सम्पत्ति दुरुपयोग गर्न पाइँदैन ।

## ग. बुटवल:

२०७१ माघ २५ गते सामाजिक सदभावको लागि मिडियाको भूमिका विषयक मिडिया संवाद सम्पन्न भयो । कार्यक्रममा देहायानुसार विचार व्यक्त भएका थिए ।

➲ अरुका समाचार बनाउने हामी अहिले आफै समाचार बनिरहेका छौं । एकातिर हाम्रा समाचारहरु सम्झौता अनुरुप बनिरहेका छन् भने अर्कोतर्फ हामीले सत्य कुरा दिन सकेका छैनौं । कोठामा बसेर आफूखुशी नाम कोट गरी समाचार बनाई राखेका छौं । पत्रकारितामा योग्यता पुगेको व्यक्ति नहुँदा पनि समस्या भएको छ ।

➲ **शम्भु थापा, सम्पादक, समय एक्सप्रेस अर्धसाप्ताहिक** : ४ नं. बुँदामा "निजी स्वार्थपूर्तिका लागि प्रयोग गर्नु हुँदैन" भनिएको छ । विहानदेखि साँझ अबेरसम्म काम गर्नुपर्ने भएकोले सबैभन्दा ठूलो समाजसेवी त पत्रकार नै होला । समाचारको लागि दिनभर यताउता भौंतारिँदा मोटरसाइकलमा तेल हाल्नु पऱ्यो ! मिडिया हाउसले दिंदैन, त्यसकारण अलिअलि निजी स्वार्थ हेर्न बाध्य छन् यहाँका पत्रकारहरु । मानौं कसैको अन्तर्वार्ता छाप्नु पऱ्यो, उसले अन्तर्वार्ताका क्रममा हिन्दु, मुस्लिम, क्रिश्चियन आदिलाई बेसरी गाली गऱ्यो, जस्ताको तस्तै नछापौं त यातायात खर्च पनि नदेला भन्ने डर, छापौं सामाजिक सद्भाव खल्बलिन्छ । व्यालेन्स गरौं न त भन्यो भने मिडिया हाउसको प्रेसर हुन्छ ।

➲ **टेकबहादुर मास्की राना, आदिवासी जनजाति पत्रकार** : म यहाँ धेरै कुरा राख्न चाहान्न । केही सुझाव दिऊँ । अहिले संविधान बन्नेक्रममा मुलुकमा एकखालको द्वन्द्व निम्त्याइएको छ अथवा द्वन्द हुने अवस्थामा मुलुक पुगेको छ । सत्ताधारीहरु पेलेर जाने पक्षमा छन् भने अधिकारबाट बंचितहुनेहरु आन्दोलनमा जाने परिस्थिति सिर्जना भएको छ । आदिवासी जनजातिहरुको आ(न्दोलनलाई मैले नजिकबाट हेरिराखेको छु । उनीहरुले आन्दोलनको तयारी गररहेको अवस्था छ ।

उनीहरुले उठाएका मुद्दा वा मागलाई बंग्याएर आदिवासी जनजातिहरुले जातिय राज्य मागेका छन्, देश टुक्रयाउन खोजिदै छ भनेर ठूला मिडिया हाउसबाट भ्रम फैलाउने काम भइरहेको छ । यसमा उनीहरुको ठूलो आक्रोस रहेको आभाष हामीले पाएका छौं । उनीहरुले जातिय राज्य मागिरहेका छैनन् । जातिय सद्भाव खलबनाउने आन्दोनलन गर्न खोजिरहेका छैनन् । केवल, आफ्नो अधिकारसंग सरोकार राख्ने विषयहरु संविधानमा लिपीवद्ध गरी सुनिश्चित गर्न खोजेका हुन् जस्तो लाग्छ । त्यसो भएकोले हामी मिडियामा काम गर्नेहरुले आदिवासी जनजातिले साच्चिकै खोजेको के हो त्यसलाई नकोट्याईकन जातिय राज्य मागी रहेकाछन् र सामाजिक सद्भाव खलबल्याउन उद्दत छन् भन्ने आरोप लगाउनु बान्छनीय हुँदैन । यथार्थपरक ढंगबाट प्रस्तुत नहुँदा कतै हामीले नै सामाजिक सद्भाव विथोल्न मद्दत पो पुऱ्याईरहेका छौं कि ? गंभीर भएर सोच्न म साथीहरुसँग आग्रह गर्दछु । यद्यपि आन्दोलनकोक्रममा सामाजिक सद्भाव खलबलाउने गतिविधी पनि हुन सक्छन् । त्यसलाई रोक्नको निम्ति हामी सबैले पहल गरौं । मुलुकलाई ठीकसँग डोऱ्याउन हामी सबैले सकारात्मक भूमिका निर्वाह गर्न सकौं । धन्यावाद !

➲ **ओमप्रकाश पंगेनी, भैरहवा साप्ताहिक** : पुरस्कारको लोभमा नराम्रा कुरा लुकाएर राम्रा कुरा मात्र लेख्ने प्रवृत्ति पनि छ हामीमा । पत्रकारिता हतारको साहित्य हो भनिन्छ । छिटोभन्दा छिटो, हतारमा समाचार दिनुपर्ने परिस्थिति हुन्छ । यस्तो अवस्थामा सानो शब्दको त्रुटीले पनि समाजमा ठूलो असर पुऱ्याउने भएकोले संवेदनशील हुन जरुरी छ ।

➲ **भवानीप्रसाद पाण्डे, बुटवल एफएमः** पीडक र पीडित दुबैका कुरा समाचारमा आउनुपर्छ भन्ने मान्यता छ । हामीले पढेको त्यही हो, सिकाउने पनि त्यही हो । तर ब्यवहारमा त्यसो भएको देखिंदैन । पीडितका कुरा लेखिरहँदा पीडक (जो आरोपित छ) का कुरा लेख्ने प्रयास गर्दैनौं । फेक आइडी खडा गर्ने, तथानाम गालीगलौजमा उत्रने प्रवृत्ति सञ्चारकर्मी साथीहरुमा देखिन्छ बेलाबेला । त्यसको शिकार कतिपय अवस्थामा म भएँ होला, कतिपय बेला अर्को पात्र भयो होला । पत्रकारले जे गर्नु हुँदैन भनेर आचारसंहितामा लेखिएको छ, तिनै कुरा गरिरहेको अवस्था छ । हामीले कसैको गुणगान गाइरहँदा अर्को पक्षको अपमान पो गरेका छौं कि ?

यहाँको पत्रकारितामा सिन्डिकेट शुरु भएको छ । पहिले कपिपेष्टको समस्या थियो । अहिले समाचारको ठेक्का प्रथा शुरु भएको छ । एउटाले समाचार लेख्यो, सबै मिडियामा हुबहु पठाइदियो काम खत्तम । एक ठाउँ समाचार बिग्रियो भने सबै मिडियामा बिग्रिन्छ ।

➲ **रुद्रहरि कुँवर, क्रान्तिकारी पत्रकार संघ, बुटवल दुडे दैनिकः** अहिले दुईचार सयको लागि कसैको समाचारलाई स्पेश राम्रो दिने र त्यसलाई बढाई चढाई गर्ने गरिन्छ । १० वर्षअघिको तुलनामा अहिलेको ट्रेन्ड बिग्रेको छ । यहाँ वितरित संहिता जर्नलमा पत्रकारलाई तथानाम गाली गरेको कटिङ पढें । हाम्रो  कमिकमजोरीकै कारण त्यस्तो प्रतिक्रिया आएको होला । संघीयताको सन्दर्भमा जातीय पहिचान र जातीय राज्यका विषयमा पत्रकारलाई यथार्थ ज्ञान नहुँदा समस्या आएको छ । यी विषयमा कलम चलाउँदा तथ्य बांगियो वा कुनै राजनैतिक दलको आस्थामा केन्द्रित रहियो भने सामाजिक सद्भाव बिथोलिन्छ । पछिल्लो समय व्यावसायिकताको नाममा पत्रकारितालाई पर्चाकारिता बनाउने काम भएको छ । विज्ञापनलाई समाचार र समाचारलाई विज्ञापन बनाउने काम भएको छ ।

➲ जसले कुनै समाचार लेखेको छैन, जसको पत्रकारितासंग कुनै साइनो नै छैन, जसलाई पत्रकारिता क्षेत्रमा कसैले पत्रकार भनेर चिनेको छैन, ती व्यक्ति अहिले एउटा पत्रिकाको प्रधान

सम्पादक हुनुहुन्छ । यतिमात्र होइन, जहाँ पत्रिका छापिन्छ त्यो छापाखानाको मालिक प्रधान सम्पादक भएको स्थिति पनि छ । एउटा सम्पादक हुन के कस्तो योग्यता र क्षमता चाहिने हो ? के व्यवसायी हुँदैमा वा छापाखाना चलाउँदैमा सम्पादक बन्न सकिने हो ?

एउटा भ्रष्ट व्यक्ति छ, लाखौं करोडौं भ्रष्टाचार गर्छ तर सामाजिक कार्यको लागि ५ हजार दिन्छ वा कुनै संस्थालाई १० हजार दिन्छ भने ऊ समाजसेवी बन्छ र हामी उसलाई समाजसेवी र सफल व्यक्तित्वको रुपमा चित्रण गर्छौं । म आफैले अनुभव गरेको छु, कुनै व्यक्तिले राम्रो काम गरेको देखेर उसको बारेमा समाचार लेखियो । पछि बुझ्दै जाँदा उसकैविरुद्ध समाचार लेख्न बाध्य भइयो ।

कस्तो पत्रिका राष्ट्रिय, क्षेत्रीय र स्थानीय हुन्छ ? अगाडि राष्ट्रिय जोड्दैमा त्यो पत्रिका ठूलो हुने हो कि ? राष्ट्रिय हुनका लागि के कस्ता शर्तहरु पूरा गर्नुपर्छ ? पत्रिका प्रकाशन गर्नेले आचारसंहिता, ऐन, नियम पढ्नु पर्छ कि पर्दैन ? २०७० सालको चुनावको विज्ञापनसहित २०७१ सालमा पत्रिका प्रकाशन हुन्छ । दशैंको विज्ञापन राखेर अहिले पत्रिका प्रकाशन हुन्छ । नयाँ वर्षको बैशाख आउँदै छ, नववर्षको शुभकामना राखेर असार महिनामा पत्रिका प्रकाशन गर्ने प्रवृति छ । यसो गर्नेहरु ठाउँ ठाउँमा पुगेका हुन्छन् । हरेक संस्थामा पुगेर पत्रकारिताको नाममा विज्ञापन मागिराखेका हुन्छन् । यसो भइरहँदा नियमित प्रकाशन हुने पत्रिका, समाजमा योगदान पुऱ्याइरहेका पत्रिकाहरु मारमा परेका छन् । व्यवसायी, विज्ञापनदाताहरु त्रसित छन्- कतिलाई विज्ञापन दिने भनेर ।

जसरी व्यवसायको श्रोत ग्राहक हुन्छ । विद्यालयको श्रोत विद्यार्थी हुन्छन् । त्यसरी नै पत्रिकाको श्रोत विज्ञापन हो । यो यथार्थ पनि हो । तर, यसको फाइदा व्यावसायिक पत्रकारिता गर्नेले भन्दा मौसमी पत्रिकाले लिइराखेको अवस्था छ । कति संख्यामा पत्रिका प्रकाशन गर्नुपर्ने हो ? कहाँ-कहाँ पुऱ्याउनुपर्ने हो ? कुनै मतलब छैन । विज्ञापन पाउँदा निकाल्यो । विज्ञापन छैन, ननिकाले पनि भयो । आज अमुक पत्रिकाको वार्षिकोत्सव छ रे ! कार्यक्रममा जाऊँन भनेर अग्रज पत्रकारसामु अनुरोध गर्दा, त्यो पत्रिका निस्कन्छ र ? भनेर उहाँहरुले आश्चर्य प्रकट गरेको अवस्था पनि छ । बुटवल जस्तो ठाउँमा अग्रज पत्रकारले नामै नसुनेका पत्रिका पनि छन् ।

➲ २०६४ सालको संविधानसभा अवसान हुनु केही समयपूर्व अधिकार र राजनैतिक परिवर्तनका निमित्त संघर्ष गरिरहेका कतिपय समूह तथा राजनैतिक दलहरुले पत्रकारलाई निसाना बनाएको देखियो । काठमाडौंका ठुल्ठूला पत्रिकालाई पनि आक्रमणको निसाना बनाइयो । मानवअधिकारकर्मी अनुगमनमा जाँदा तपाइँहरु पत्रकार हो कि होइन भनेर सोधिन्थ्यो । मानवअधिकारकर्मी हौं, अनुगमन गर्न आएको भनेपछि तपाइँहरु जानुस् पत्रकारलाई चाहिँ छोडिन्न भनियो । के कारणले त्यो परिस्थिति सिर्जना भयो ?

➲ **पुनित परियार, सञ्चारकर्मी, रेडियो जागरण** : यहाँका पत्रकार को कस्तो छ, कुन पार्टी निकट छ भन्ने कुरा उसको फेसबुकको वाल हेर्दा प्रष्ट बुझिन्छ । पत्रकारले फेसबुकको सदुपयोग गर्ने कि दुरुपयोग ? नेतालाई गाली गर्नुपऱ्यो भने उसले पञ्चेबाजा बजाइरहेको, चुरापोते लगा( एको चरित्र बनाएर फेसबुकको वालमा पोष्ट गर्छौं । यस्ता क्रियाकलापले शान्ति, सद्भावमा खलल पुग्छ कि पुग्दैन ?

नवलपरासीमा ब्रह्म कुमारीबारे समाचार आयो, गाउँ एकातिर भयो र दुई महिलामात्र एकातिर भए । उनीहरु अदालत गए तर तिनको पक्षमा साक्षी बस्ने कोही भएनन् । अहिले

उनीहरु एक्लो परिरहेको अवस्था छ । जातीय छुवाछुतको कसुर र सजाय ऐनअनुसार राज्यले पीडकलाई कारवाही गर्न सक्नुपर्ने थियो । तर व्यवहारिक रुपमा समाज जवरजस्त अर्कोतिर उभिरहेको अवस्था छ । पत्रकारहरुले यस्ताखालका मुद्दामा कसरी संवेदनशीलता अपनाउने ? कतिपय जटिलता छन् ।

➲ **विश्वास ढकाल, बुटवल टुडे दैनिक** : हामी कसैको कार्यक्रममा जान्छौं, उबाट पैसा पाए समाचार बनाउँछौं नत्र बनाउँदैनौं । सञ्चार गृहले समयमा तलब दिंदैन, पत्रकारको साँझ विहानको छाक टर्ने अवस्था छैन त्यसकारण उसले (पत्रकार) त्यसो नगरेर के गर्ने ? भन्ने पनि छ ।

यहाँ २५-३० हजारदेखि १ लाखसम्म तलब खाने पत्रकार छौं, तर हामीलाई समाजले हेर्ने दृष्टिकोण नकारात्मक छ । किनकि समाजको अपेक्षाअनुसार हामीले काम गरिराखेका छैनौं । यहाँ आदिवासी जनजातिको आन्दोलन हुँदा केही साथीको मोटर साइकल तोडफोड भयो, कोही घाइते पनि हुनुभयो । अहिलेसम्म त्यसको क्षतिपूर्ति पाउन सकिएको छैन । अबका दिनमा उहाँहरुको समाचार संकलनका लागि हामी हिंड्ने कि नहिंड्ने ? कतिपय साथीहरु समाचार संकलनका लागि उहाँहरुले हिंड्नै दिनुहुन्न त कसरी लेख्ने ? भन्नुहुन्छ । हामी यत्तिका पत्रकार छौं, कुनै अमुक पार्टीको कार्यक्रम भयो भने एक-दुईजनाबाहेक सबैले त्यो समाचार ल्याउनै सक्दैनौं । किन ? किनभने त्यो समाचार छापिनासाथ फलानो त फलानो पार्टीको पत्रकार भनेर बिल्ला लगाइन्छ ।

मैले ड्यास माओवादी पार्टीको रिपोर्टिङ गर्न सक्ने कि नसक्ने ? नसक्ने, किनकि म त काँग्रेसको हुँ । म नेपाली काँग्रेसको सिद्धान्तप्रति आस्था राख्ने पत्रकार भएकोले बालकृष्ण खाँड कता बोल्दै छन्, खोज्दै हिंड्नुपर्छ । एमालेको सिद्धान्तप्रति आस्था राख्नेले विष्णु पौडेल कता बोल्दै छन्, खोज्दै हिंड्नुपर्छ । ड्यास माओवादीको समाचार नआएपछि उसले यहाँको पत्रकारिता वा पत्रिकालाई राम्रो मान्छ कि नराम्रो ? उता पार्टीको बुथ सभापति यता पत्रकार महासंघको अध्यक्ष, अनि कसरी हुन्छ निष्पक्ष र सन्तुलित पत्रकारिता ?

➲ **सिपी खनाल, दैनिक पत्र** : बुटवलको पत्रकारितामा समस्याको रुपमा रहेको दुःखद पक्ष भनेको समाचारको खण्डन विज्ञापनबाट गर्ने प्रवृत्ति हो । आज कुनै पत्रिकामा एउटा समाचार आउँछ, भोलि अर्को पत्रिकामा त्यसको खण्डन पढ्न पाइन्छ । 'अमुक पत्रिकाले लेखेको समाचार सतप्रतिशत गलत हो, त्यसको भ्रममा नपर्न अनुरोध छ' भनेर ५ हजारमा फ्रन्टपेजमा विज्ञापन छापिन्छ । बुटवलकै हस्पिटल लाइनको सटर काण्डका बारेमा कति पत्रिकामा समाचार आयो ? त्यो समाचार लेख्ने र प्रकाशित गर्ने हिम्मत कति सञ्चारमाध्यमले गरे ? केही पत्रिकामा समाचार आयो भने केहीमा खण्डन आयो । खण्डन छाप्ने पत्रिकामा त त्यो विषयको समाचार आउँदै आएन ।

➲ **अमृत गिरी, मेचीकाली दैनिक** : २०७० जेठ ७ र ८ गते देशैभरि भएको आदिवासी जनजाति आन्दोलनको कुरा हो- मेरो घर बुटवलदेखि १५ कि.मि.पश्चिम पर्छ । त्यसबेला नेपाल पत्रकार महासंघका तत्कालिन अध्यक्ष दीपक दाजु, मेचीकाली दैनिकका प्रधान सम्पादकलगायत आन्दोलनको (रुपन्देही) संयोजन गरिरहेका होम बलामीसमेतलाई फोन गरेर हिंड्न मिल्ने अवस्था हो, होइन बुझेर बुटवल आइरहेको थिएँ । बेलवासनिर बन्दकर्ताको एउटा समूह बसिराखेको रहेछ । एउटा सुँगुर काटेर त्यसलाई टोपी, जनै लगाई जातीय पहिचान विरोधीलाई यस्तो बनाइनेछ भन्ने प्लेकार्डसहित भोजभतेर चल्दै थियो । मैले महासंघ र मेचीकाली दैनिकको २ वटा कार्ड बोकेको थिएँ । प्रेस लेखेको ज्याकेट पनि लगाएको थिएँ । एकजना बन्दकर्ताले रोकेर कहाँ हिंडिस् भन्दै ठूलो

ढुङ्गाले पछाडिबाट प्रहार गरे । छलेर संयोगले बाँचें, मोटर साइकल क्षति भयो । यस्तै दुर्व्यवहार अरु पत्रकारमाथि पनि भयो । त्यसपछि पत्रकार महासंघ, प्रकाशन समाजलगात सबैको साझा बैठकले आज समाचार लेख्न आउनसक्ने अवस्था छैन । रिपोर्टिङ्ग गर्नसक्ने अवस्था पनि छैन भनेर एकदिनको लागि रोकेको हो, तर मिडिया नै बन्द गरेको होइन ।

चुच्चे नाकवाला आयो भने 'तँ बाहुन पत्रकार किन हिंडिस् हाम्रो बन्दमा' भनेर पिट्ने, 'यो त हाम्रो जनजाति पत्रकार हो यसलाई जान दिनुपर्छ' भनरे छोड्नेखालको विरोधाभाषपूर्ण व्यवहार नहोस् ।

➲ **भगवती पाण्डे, लुम्बिनी सामुदायिक रेडियो, सेतोपाटी अनलाइन** : उपचारका क्रममा अस्पतालमा कुनै विरामीको मृत्यु हुन्छ, हामी समाचार बनाउँछौं डाक्टरको लापरवाहीले मर्‍यो । मृत्युको वास्तविक कारण के हो बुझ्दैनौं, जान्न चाहँदैनौं । यदि डाक्टरको लापरवाहीले विरामीको मृत्यु भएकै हो भने पनि त्यो घटना बाहिर ल्याउँदा प्रभाव के हुन्छ ? विचार गर्दैनौं । पीडित पक्षको उत्तेजनाबाट हुने क्षतिको अनुमान गर्दैनौं । अहिले बुटवलका हरेक बोर्डिङ्ग स्कूलले सबै मिडिया कब्जा गरेको अवस्था छ । प्रत्येक शुक्रबार उनीहरुको साप्ताहिक कार्यक्रम हुँदोरहेछ । त्यो उनीहरुको नियमित कार्यक्रम हो । त्यसलाई हामीले खेलकुदलगायतका अनेक बहानामा समाचार बनाई रहेकाछौं । त्यसकारण पत्रकार महासंघ अथवा प्रेस काउन्सिलले कस्ता खालका विषयहरु समाचार हुन्छन् र कस्ता खालका विषय विज्ञापन हुन्छन् भनेर छुट्याइदिए राम्रो होला ।

यहाँ त हकर र मेशिनम्यानलाई समेत रिपोर्टर भनेर परिचयपत्र दिएको अवस्था छ । कस्तो क्षमता र योग्यता भएको व्यक्तिलाई रिपोर्टर र मिडियाकर्मी भनेर परिचयपत्र दिने हो ? पत्रकार महासंघको अधिवेशनताका नै यस्ता विषयमा ख्याल गरिनुपर्थ्यो । सदस्यताका निम्ति अयोग्य भनेर जिल्लाले रोकेका साथीहरुलाई केन्द्रले सिधै सदस्यता दिएको अवस्था छ । यसरी सदस्यता प्राप्त गरेका साथीहरुले संप्रेषण गरेको समाचारबाट समाजमा कस्तो खालको सद्भाव आउला ?

➲ **दीपक ज्ञवाली, सदस्य, न्यूनतम पारिश्रमिक निर्धारण समिति** : पत्रकारितामा मात्र आचारसंहिता लाग्छ, सामाजिक सञ्जालमा त लाग्दैन होला भन्ने आधारमा हामीले जथाभावी गर्नु हुँदैन । हामीले प्रयोग गर्ने शब्द, पोष्ट गर्ने स्टाटस, सेयर गर्ने तस्वीरहरु आपत्तिजक छन् जो हामी मिडियाकर्मीहरुले समेत महसुस गरिरहेका छौं । कतिपय अवस्थामा विभिन्न समुदाय, जातजाति( लाई होच्याउने खालका शब्दहरुको पनि प्रयोग भएको पाइन्छ ।

पत्रकार महासंघमा कार्यक्रम भएको थियो, तर त्यो महासंघको कार्यक्रम थिएन । सञ्चारकर्मीले पत्रकार महासंघको निर्णय भनेर मिडियामा लेखे । हामी यतिसम्म गैरजिम्मेवार छौं । पत्रकार महासंघको हलमा त जसले पनि कार्यक्रम गर्न सक्छ । यो देश टुक्रयाउनुपर्छ भनेर माग गर्नेहरु, आत्मननिर्णयको अधिकार चाहिन्छ भन्नेहरु र हामी वर्षौंदेखि ठगिएका छौं भन्ने अधिकारविहिन समूहरु पनि यही समाजभित्रै छन् । यस्तोबेला समन्वय गरिदिने, सत्य बोलिदिने र सबैकाबीच सद्भाव कायम गरिदिने सबैभन्दा बढि जिम्मेवारी मिडियाको हुन्छ । पत्रकार कुनै जातको भैदिनु हुँदैन । म जन्मिंदा कुन जातको भएर जन्मिएँ यसमा मेरो कुनै भूमिका छैन ।

मलाई पनि पहिला पत्रकारमाथि साह्रै बढी ज्यादती भएको छ भन्ने लाग्थ्यो । तर ज्यादती हुनलाई हामी आफैले अनुमति दिएका रहेछौं ! नियुक्तिपत्र माग्दैनौं । नियुक्तिपत्र नै छैन भने तलब पाइन भन्ने तपाईसँग कुनै कानुनी अधिकार रहन्न । पत्रकारलाई यथेष्ठ तलब दिनसक्ने मिडिया हाउस पनि छन् बुटवलमा । तर यस्ता मिडियामा काम गरिराखेका छौं, जहाँ हामीलाई दासको

रुपमा प्रयोग गर्छन् । एउटा पत्रिकाले सबभन्दा पहिला उसको आम्दानी कहाँ खर्च गर्छ ? बिजुली र टेलिफोनको पैसा तिर्छ । समयमा पैसा तिरिएन भने लाइन काटिन्छ भन्ने चिन्ता हुन्छ । कागज नभए पत्रिका छापिन्न भन्ने चिन्ता हुन्छ । हरेकदिन उसले बिजुलीको जरिवाना तिर्नुपर्छ कि भनेर चिन्ता व्यक्त गर्छ तर हामी पत्रकारलाई ६/६ महिनासम्म पनि पारिश्रमिक दिंदैन । मानिसलाई भन्दा भौतिक वस्तुलाई मिडिया सञ्चालकले महत्व दिन्छ । यदाकदा मिडिया मालिकले भनेको सुनिन्छ- 'पत्रकारलाई तलव दिन सकिंदैन, तलव दिने हो भने पत्रिका चलाउन सकिंदैन, बन्द हुन्छ ।' तलब दिंदा मिडिया बन्द हुन्छ भने किन चलाउने ? हामी सधैंभरी दास बनिरहन सक्दैनौं, काम गरेबापत उचित पारिश्रमिक र सुविधा पाउनुपर्छ भन्ने हाम्रो भनाई हो ।

➲ **बालकृष्ण चापागाई** : यहाँको एउटा शिक्षण संस्थाले हामीलाई वार्षिक ३ लाख जतिको विज्ञापन दिन्थ्यो । नियमित विज्ञापन आउने भएपछि उसको गतिविधिमा बारेमा समाचार त दिनु पर्‍यो भनेर एकजना पत्रकारलाई त्यस काममा खटाएँ । वर्षभरी नै त्यो संस्थाको समाचार पत्रिकामा आइरह्यो । रिपोर्टिङ्ग गर्ने पत्रकारलाई रु. ५०००।- नगदसहित संस्थाले सम्मान पनि गर्‍यो । अघिल्ला वर्ष ३ लाख हाराहारीमा विज्ञापन आउने गरेकोमा त्यो वर्ष विज्ञापन आएछ जम्मा २५ हजार । हाम्रो ३ लाखको विज्ञापन त चट ! न्यूज कति छपायो-छपायो ! पत्रकारलाई उसले किन्यो ५ हजार पुरस्कार दिएर, विज्ञापन आउने जति सबै न्यूज छपायो । लिनुपर्ने काम लिइसकेपछि अर्कोपटक त्यो संस्थाले अर्कै पत्रकारलाई पुरस्कार दियो, उसलाई हटाइ दियो । यस्तो छ यहाँको परिस्थिति र समस्या ।

यो देशमा प्रकाशकहरुको संघ नै भएन । मिडिया चलाउनु पर्ने प्रकाशकले, गाली खान्छ प्रकाशकले । तर प्रकाशकहरुको पीरमर्का बुझ्दिने कुनै संघसंस्था नै भएनन् । पत्रकारहरुको छाता संगठन नेपाल पत्रकार महासंघमा विभिन्न पृष्ठभूमिका साथीहरु जानु भएको छ । जसले वास्तवमा पत्रिकै चलाएर, सञ्चाकर्मीलाई मासिक तलब खुवाएर, लामो अनुभव हासिल गरेको छ- त्यस्ता व्यक्तिहरु त्यहाँ कति पुगे ? मैले उच्चस्तरीय मिडिया आयोगमा पनि काम गरें । आयोगको सुझावमा "**स्थानीय विज्ञापन जिल्ला विकास समितिमार्फत स्थानीय पत्रिकालाई उपलब्ध गराउने**" भन्ने एउटा वाक्य राख्न मलाई ५ पटक मिटिङ राख्नु पर्‍यो । बनाएर हिंड्छु, पछि अर्कै भएर आउँछ । अन्तिममा राधेश्याम अधिकारी र राजेन्द्र दाहाल मेरो कुरामा सहमत हुनुभयो । एकजना साथी त सकिन मैले भनेर मिटिङमै जानुभएन ।

सूचना विभाग होस् या माथिल्लो निकाय मिडियालाई संस्थागत गर्न चाहँदैनन् । हामीले यहाँका ३ वटा पत्रिकालाई 'मर्ज' मार्फत संस्थागत गर्‍यौं । प्रोत्साहन गर्नुपर्नेमा उल्टो दुःख दिनेबाहेक केही काम गरेका छैनन् प्रेस काउन्सिल र सूचना विभागले ।

## घ. लालवन्दी, सर्लाही ।

प्रेस काउन्सिल नेपालको आयोजना र नेपाल पत्रकार महासंघ, सर्लाही शाखाको सहयोगमा मिति २०७२ असार १६ गते सर्लाहीको लालबन्दीमा 'सामाजिक सद्भावका लागि मिडियाको भूमिका' बिषयमा मिडिया संवाद कार्यक्रम सम्पन्न भयो ।

कार्यक्रममा प्रेस काउन्सिलका सदस्य चन्द्रकिशोर झाले बिषय प्रवेश गर्नु भएको थियो । द्वन्द्वका बेला हल्लाले साम्राज्य जमाउने भएकाले सन्तुलित र सत्यतथ्य सूचना दिने पत्रकारको भूमिका महत्वपूर्ण हुने उहाँले बताउनु भयो । सही सूचनाले द्वन्द्व घटाएर सामाजिक सद्भाव

कायम राख्न सञ्चार माध्यमहरुको महन्वपूर्ण भूमिका रहेको कुरा उहाँले बताउनु भएको थियो । पत्रकारले आफ्नो कार्यक्षेत्रमा कार्य गर्दा चिकित्सक, न्यायाधिश, अधिवक्ताको जस्तो भूमिका निर्वाह गनुपर्ने भएकोले घटनाको सत्यतथ्य उजार गरेर मात्रै समाजमा सामाजिक सद्भाव स्थापना गर्न सकिने कुरामा जोड दिनु भएको थियो । चिकित्सकले रोग ठिक पारे जस्तो पत्रकारले पनि समुदायमा पक्षपात र आफ्नो र अर्काको समुदाय नहेरी समाजको रोग मात्रै हेर्नुपर्ने उहाँको भनाई थियो ।

कार्यक्रमका सदस्य चन्द्रकिशोर झाको विषयवस्तु प्रस्तुति पछि सहभागी पत्रकारहरुले आ-आफ्नो विचार व्यक्त गर्नु भएको थियो । प्रस्तुति माथि टिप्पणी गर्दै नेपाल पत्रकार महासंघ महोत्तरीका अध्यक्ष ईश्वरी पौडेलले जथाभावि पत्रिका दर्ता गर्ने र छ्यापछ्याप्ती एफएम खुलेकाहरुमा दक्ष पत्रकारको अभाव भएको कुरा बताउनु भयो । नेता बन्न पत्रिका र एफएम चलाउने प्रबृत्ति बढेको उल्लेख गर्दै उहाँले पत्रकारको क्षमता अभिबृद्धि गरेर सद्भावका लागि प्रयास गरिनुपर्ने बताउनु भयो ।

कार्यक्रममा नेपाल पत्रकार महासंघ रौतहट शाखाका उपाध्यक्ष जयप्रकाश यादवले पत्रकारिता पेशालाई मर्यादित र समाजिक दायित्वप्रति उत्तरदायित्व पूर्ण बनाउन पत्रकारहरु पनि स्वयम् जवाफदेही पत्रकारिता गर्नुपर्ने कुरा बताउनु भयो । पत्रकार चूडामणी वाग्लेले जिम्मेदार पत्रकारले नै समाजमा समाजिक सद्भाव सृजना गर्न सक्ने कुरा बताउनु भयो । अर्का पत्रकार शिल्पा कर्णले प्रेस काउन्सिल नेपालले गर्ने वर्गीकरणलाई पारदर्शी बनाउनु पर्नेमा जोड दिनु भएको थियो ।

प्रेस काउन्सिल नेपालका सदस्य तथा विश्व प्रेस काउन्सिलका उपाध्यक्ष किशोर श्रेष्ठले नेपालमा विगतको पत्रकारिताको इतिहासको समीक्षा गर्दै सद्भावका लागि मिडियाको भूमिकाबारे स्पष्ट पार्नु भएको थियो । विद्युतिय कारोवार ऐनले पत्रकारलाई कमजोर बनाएको कुरा उल्लेख गर्दै उहाँले योग्यता र दक्षता बढाएर समाजिक सद्भाव कामय गराउन मिडियाले ठूलो भूमिका खेल्न सक्ने कुरामा जोड दिनु भयो ।

नेपाल पत्रकार महासंघका केन्द्रीय उपाध्यक्ष तथा प्रेस काउन्सिल नेपालका सदस्य खिलबहादुर भण्डारीले सञ्चालन गर्नुभएको उक्त मिडिया सम्वाद कार्यक्रममा नेपाल पत्रकार महासंघ, सर्लाही शाखाका अध्यक्ष अमन कोइरालाको अध्यक्षमा भएको थियो । कार्यक्रममा महोत्तरी, रौतहट र सर्लाही जिल्लाका उल्लेख्य पत्रकारहरुको सहभागिता रहेको थियो ।

## ङ. अनलाइन पत्रकारिता र विपद्काल (काठमाडौं)

प्रेस काउन्सिल नेपाल मिडिया संवाद उपसमितिको आयोजनामा “अनलाइन पत्रकारिता र बिपद्काल” विषयक मिडिया सम्वाद कार्यक्रम २०७२ साल जेठ १८ काउन्सिलको सभाहलमा सम्पन्न भयो । कार्यक्रममा प्रेस काउन्सिल नेपालका अध्यक्ष बोर्णवहादुर कार्कीले अनलाइन मिडियालाई संरक्षण र सम्वद्धनको खाँचो रहेको, नयाँ रुपमा भर्खरै उदाएको अनलाइन मिडियालाई जवाफदेही र उत्तरदायी वनाउन काउन्सिल लागेको वताउँदै कार्यक्रमको उदेश्यमाथि प्रकाश पार्दै भन्नुभयो – “पत्रकारिता क्षेत्रको अनुगमन, नियमन गर्ने एकमात्र निकाय प्रेस काउन्सिल हो ।” समाचारको विषयलाई लिएर अनलाइन वन्द गरिएकोप्रति आपत्ति जनाउँदै काउन्सिललाई सशक्त बनाउन लागिपरेको र भुकम्पले जनताको मनोवल गिरेको अवस्थामा पुर्ननिर्माणका लागि

जिम्मेवारपूर्ण भई लाग्न आग्रह गर्नुभयो । औपचारिकरुपमा सञ्चालन गरिएको कार्यक्रम दिउँसो १ बजे सुरु भई साढे तीन वजे सम्पन्न भएको थियो ।

काउन्सिलका अध्यक्ष श्री बोर्णवहादुर कार्कीको अध्यक्षतामा सम्पन्न सो नेपाल पत्रकार महासंघका अध्यक्ष डा.महेन्द्र बिष्टले विषयवस्तुमा केन्द्रित रही अनलाइनका सम्पादक तथा रिपोर्टर हरुसंग बेला बेलामा छलफल गरेको ,अनलाइन माध्यम प्रभावकारी हुँदाहुँदै पनि थुप्रै गल्ती भेटिएको, अनलाइनमा आवद्ध व्यक्तिहरु पेशागत व्यवसायी बन्न नसकेको वताउनुभयो। पेशागत पत्रकारहरुलाई संरक्षण गर्ने उहाँको धारणा थियो। नेपाल पत्रकार महासंघका पूर्व अध्यक्ष शिव गाउँलेले मूलधारका अनलाइन गल्ती थाह पाउनासाथ सच्याउँछन्। विपद्को अवस्थामा समाचार पस्कने विषयमा बेदनाका खबर वढी पस्केर हामी चुकेको हो कि ? हामीले टेक्ने धर्ती हल्लिएको वेला कसैको सहयोगी बनेनौं कि ? यस्तो वेला राजनीतिक सौदावाजीका कुराले प्राथमिकता पाउने जस्ता विषय वहसको कुरो भएको वताउदै कार्यक्रम आयोजना गर्ने काउन्सिलप्रति आभार व्यक्त गर्नुभयो । नेपाल पत्रकार महासंघका उपाध्यक्ष एवं काउन्सिल सदस्य खिलवहादुर भण्डारीले मिडियाका कारण उपत्यका वाहिरका आम जनतामा मानसिकता वदलेको र काठमाडौं सवै खत्म भयो भन्ने सन्देश गएकोमा मिडिया चुकेको वताउनुभयो ।

त्यस्तै सूचना विभागका महानिर्देशक लक्ष्मीविलास कोईरालाले विपद्को वेलाको अनुभव सुनाउँदै व्यक्तिगत र सामुहिकरुपमा हतोत्साही पार्ने कुरा पत्रकारले गर्न नहुने धारणा राख्नुभयो ।

काउन्सिलका मुख्य अधिकृत झविन्द्र भुसालले हालसम्म १५२ (तर २०७२ असोजसम्म २२०) अनलाइन काउन्सिलमा दर्ता भैसकेको साथै अनलाइन लगायतका मिडियामा अनुगमन भैरहेको कुरा जानकारी गराउनुभयो। अधिवक्ता बावुराम अर्यालले अनलाइनको बिषयवस्तु सम्वन्धि हेर्ने कुरामा सार्वजनिक अपराध ऐन, गाली वेइज्जती ऐन अन्तर्गत प्रहरी निकायवाट निगरानीमा रहेको, पत्रकारिताको पाटोवाट नहेरिएको धारणा व्यक्त गर्नुभयो । अनलाइनलाई व्यवस्थित हुन जरुरी रहेको वताउनुभएको थियो। अनलाइन खवर डट कमका अरुण वरालले विपद्का वेला के, कसरी, कस्तो सूचना पस्कने भन्नेमा अल्मलिएको वताउँदै आर्थिक संकटका वेला हरेकका हात-हातमा रहेको दीगो माध्यमले अवका दिनमा प्रमुख प्रतिपक्षको भूमिका निभाउने अनलाइनलाई सचेत र स्तरवृद्धि गर्न काउन्सिलले ध्यान दिन जरुरी रहेको धारणा राख्नुभयो । साझापोष्ट डट कमका सुदर्शन खतिवडाले अनलाइनमा प्रहरी निगरानी र नियन्त्रण हावी भएको वताउनुभयो । एक्सप्रेस खवर डट कमका भवानी भण्डारीले असंख्य फैलिएका अनलाइनको व्यवस्थापन गर्न ढिलो भैसकेको धारणा राख्नुभयो ।

आजको खवर  डट कमका सम्पादक डिल्लीरमण सुवेदीले अनलाइनलाई व्यवस्थित बनाउन काउन्सिलले आवश्यक कानुन , संहिता र दर्ता प्रक्रियामा जोड दिनुपर्ने वताउनुभयो। नेपाल दुवई डट कमका सम्पादक दामोदर नेपालले विदेशमा रहेकाको लागि अनलाइन प्रभावकारी माध्यम बनेको वताउँदै कपीपेस्ट गर्ने संस्कारवाट उम्कन अनुगमन र तालिम आवश्यक रहेको धारणा राख्नुभएको थियो । सरोकार डट कमका सह सम्पादक पल्लभ पन्त, महिला न्यूज डट कमका दुर्गा लामिछाने लगायतको सहभागीहरुले विषयवस्तुमा संवेदनशील वन्नुपर्ने धारणा राखेका थिए। कार्यक्रममा विभिन्न अनलाइन सम्वद्ध पत्रकार, बरिष्ठ पत्रकार, कानुन विज्ञ लगायतका ३ दर्जनको सहभागिता रहेको थियो ।

कार्यक्रमको अन्त्यमा काउन्सिल अध्यक्ष कार्कीले media को content माथि अनुगमन

गर्ने काउन्सिलवाहेक अरु हुन नसक्ने भन्दै मनोवल बढाउने सामाग्री आउनुपर्ने भन्दै कार्यक्रमको समापन गर्नुभएको थियो ।

## च. विपद्कालमा साना लगानीका छापामाध्यमको अवस्था र भूमिका (काठमाडौं)

प्रेस काउन्सिल नेपाल मिडिया सम्वाद उप-समितिको आयोजनामा " बिपद्कालमा साना लगानीका मिडियाको अवस्था र भूमिका " बिषयक एक दिने मिडिया सम्वाद कार्यक्रम राजधानीमा २०७२ असार ४ गते सम्पन्न भयो ।

उक्त कार्यक्रममा प्रेस काउन्सिल नेपालका अध्यक्ष श्री बोर्णवहादुर कार्कीले कार्यक्रमको उदेश्यमाथि प्रकाश पार्दै अभिभावक संस्था काउन्सिलले साना मिडियामा देखिएका समस्याको पहिचान र समाधानका लागि आवश्यक रायसुझावको अपेक्षा राखेको बताउनुभयो । साना लगानीका छापासञ्चारमाध्यमलाई संरक्षण र सम्वद्धनको खाँचो रहेको , राहात र पुर्ननिर्माणमा राज्यको भूमिका फितलो देखिएकोले यसलाई प्रभावकारी वनाई विपत्तिवाट जनताको गिरेको मनोवल जोगाउन पत्रकारहरु सशक्त रुपमा लाग्न जोड दिनुभयो । साथै विद्वान वर्गको परामर्श लिई अघि वढ्नुपर्ने वेला आएको वताउनु हुँदै अध्यक्ष कार्कीले अन्य क्षेत्रजस्तै पत्रकार जगत्ले ठुलो क्षति व्यहोरेको र यस्तो कठीन परिस्थितिमा पनि पत्रकारहरुको भूमिका सराहनीय रहेको धारणा राख्नुभयो । पत्रकारिता क्षेत्रमा खासगरी छापामाध्यमको आफ्नै विशिष्ठ योगदान रहेको र केही कमीकमजोरीका कारण संवेदनशीलतालाई ध्यान नदिई जनमानसमा हुन गएको मानसिक पीडालाई कम गर्न , प्रेसलाई जिम्मेवार वनाउन , प्रेसको संरक्षण गर्न प्रेस काउन्सिलले छापा तथा विद्युतीय मिडियाको अनुगमन प्रक्रिया राजधानीवाट सुरु गरिसकेको र यथासक्य प्रेस परीक्षाको व्यवस्था गर्ने , पत्रकारको वर्गीकरण गर्ने कुरा प्रष्ट पार्नुभएको थियो ।

कार्यक्रममा मनोविद् परामर्शदाता प्रेमनारायण भुसालले भुकम्पीय असरवारे कार्यपत्र प्रस्तुत गर्नुभएको थियो । यसअघि यस्तो प्रकारको ठूलो विपत्ति हाम्रो पुस्ताले नव्यहोरेकोले पनि मिडियाको भूमिकामा केही मात्रामा कमी कमजोरी देखिएको तर मिडियाकै कारण राहात र उद्धार कार्य भएका प्रशस्तै उदाहरण रहेको वताउनुभयो । मनोविद् भुसालले विदेशी मिडियाले खेलेको भूमिका दुःखद रहेको , मानवीय संवेदनाको पक्ष ख्याल नगरेकै कारण भूकम्पले प्रभावित भएका व्यक्तिहरुमा मानसिक समस्या धेरै मात्रामा देखापरेको वताउनुभयो ।

नेपाल पत्रकार महासंघका अध्यक्ष डा.महेन्द्र बिष्टले समाज वहुलवादी विशेषतायुक्त रहेकोले स्थानीय मिडियाको आवश्यकता नकार्न नहुने वताउँदै इतिहासदेखि नै स्थानीयस्तरसम्म पुगेर स्थानीय मुद्धाको उठान गर्ने साना लगानीका मिडियाको भूमिका महत्वपूर्ण रहेको वताउनुभयो । अपवाद वाहेक नेपाली मिडियाको भूमिका सशक्त रहेको तर सार्वभौमसत्तामा खलल् पुग्ने गरी केही भारतीय मिडियाले नकारात्मक भूमिका खेलेको र विदेशी सेनाले मनपरी गरेको वताउनुभयो । समानुपातिक विज्ञापन नीति कार्यान्वयन ल्याउने प्रक्रियामा अदालतवाट रोकिएको वताउँदै महासंघले पत्रकारका हकहितका पक्षमा केही नगरेको भन्नु जायज नहुने धारणा राख्नुभयो ।

मिडिया संवाद उपसमिति संयोजक तथा नेपाल पत्रकार महासंघका केन्द्रीय उपाध्यक्ष खिलवहादुर भण्डारीले कार्यक्रमको संयोजन गर्दै, सवै एकजुट भई समन्वय गरी अघि वढ्ने वताउनुभएको थियो ।

प्रेस काउन्सिल नेपालका मुख्य अधिकृत झविन्द्र भुसालले विद्युतीय तथा पत्रपत्रिकाको अनुगमनको सुरुवात भइसकेको वताउनुभएको साथै आर्थिक वर्ष ०६९/०७० को वर्गीकरणको नतिजा यसै महिनाभित्र आउने, आगामी वर्ष यो कार्यलाई प्रभावकारी रुपमा अघि बढाइने, ग्याप नहुने धारणा राख्नुभएको थियो । नेपाल पत्रकार महासंघ काठमाडौं शाखाका अध्यक्ष गोविन्द चौँलागाईंले समस्याको पहिचान गरी सवैले समन्वय गर्दै सकारात्मक सोचका साथ अघि बढ्नुपर्ने र विपद्को अवस्थामा प्रेस बन्द भएकै कारण छिटफुट अंक पत्रिका प्रकाशन नहुँदा सरकारले लोककल्याणकारी विज्ञापनवापत दिने रकम कटौती गरेकोमा आपत्ति व्यक्त गर्दै घर भत्केकालाई राहतको व्यवस्था गर्न आग्रह गर्नुभएको थियो । अभियान साप्ताहिकका सम्पादक देवेन्द्र चुँडालले पत्रकारहरुको वर्गीकरण, समानुपातिक विज्ञापन नीति कार्यान्वयन र पत्रपत्रिकाको वर्गीकरण समयमै हुनुपर्ने  बताउनुभएको थियो ।

दैनिक पत्रिका राष्ट्रिय सञ्जालका अध्यक्ष जेपी गुप्ताले समानुपातिक विज्ञापन नीति कार्यान्वयन नहुँदा साना पत्रपत्रिका मारमा परेको बताउनुभएको थियो । डा. केशव देवकोटाले हाम्रा अभिभावक संस्थाहरु पञ्चायती संरचनाबाट मुक्त नभएको धारणा राख्नुभएको थियो । नेपाल पत्रकार महासंघका केन्द्रीय सदस्य इश्वरी वाग्ले, महासंघ ललितपुर शाखाका अध्यक्ष लेखनाथ न्यौपाने, सिटी पोष्ट दैनिकका नेत्रप्रसाद न्यौपाने, जनधारणा साप्ताहिकका निमकान्त पाण्डे लगायतले काउन्सिललाई अमूल्य सुझाव पेश गर्नुभएको थियो । कार्यक्रममा ४५ जना पत्रकारहरुको सहभागिता रहेको थियो । कार्यक्रममा साना लगानीका पत्रपत्रिकाको अवस्था दयनीय रहेको मूल्याङ्न गर्दै र यसको संरक्षण गर्नु निष्कर्ष भएको वताउनु हुँदै अध्यक्ष कार्कीले कार्यक्रमको समापन गर्नुभएको थियो ।

## छ. विपद्कालमा साना लगानीका सञ्चारमाध्यमको भूमिका (पोखरा)ः

प्रेस काउन्सिल नेपालको आयोजना तथा नेपाल पत्रकार महासंघ कास्की शाखाको सहयोगमा २०७२ असार १८ गते शुक्रबार पोखराको सिर्जनाचोकमा रहेको साइमन पार्टी प्यालेसमा ' विपतकालमा साना लगानीका सञ्चार माध्यमको भूमिका : समस्या र समाधान' विषयक मिडिया संवाद कार्यक्रम सम्पन्न भयो । प्रेस काउन्सिल नेपालका सदस्य, मिडिया सम्वाद समितिका संयोजक तथा नेपाल पत्रकार महासंघका केन्द्रीय उपाध्यक्ष खिलबहादुर भण्डारीको सभापतित्व तथा नेपाल पत्रकार महासंघ कास्की शाखाका सचिव त्रिभुवन पौडेलले सञ्चालन गरेको उक्त कार्यक्रममा स्वागत मन्तब्य प्रेस काउन्सिल नेपालका अधिकृत रहमतुल्ला मियाँले गर्नु भएको थियो ।

विभिन्न आन्दोलन तथा कालखण्डहरुमा शहीद हुनेहरुको सम्झनामा १ मिनेट मौनधारणपछि शुरु भएको औपचारिक कार्यक्रममा प्रेस काउन्सिल नेपालका सदस्य तथा वरिष्ठ पत्रकार माधव शर्माले 'विपदकालमा साना लगानीका सञ्चार माध्यम समस्या र समाधान' विषयक कार्यपत्र प्रस्तुत गर्नु भएको थियो । उहाँको कार्यपत्रमा साना लगानीका सञ्चार माध्यमहरु संकटमा रहेको, पत्रपत्रिकाहरु संख्यात्मक रुपमा बृद्धि भए पनि गुणात्मक हुन नसकेको, समानुपातिक विज्ञापन नीति अविलम्व कार्यान्नवन गुर्नपर्ने, रेडियोहरुलाई दिएको ७३ करोड रुपैयाँ थोरै भएको लगायतका विषयहरु समावेश गरिएको थियो ।

कार्यक्रममा पोखराका क्रियाशील ६५ पत्रकारहरुको उपस्थिति रहेको थियो । कार्यक्रमा

प्रस्तुत कार्यपत्रमाथि विभिन्न महानुभावहरुले टिप्पणी गनुभएको थियो ।

पत्रकार पुण्य पौडेलले कार्यपत्रमा प्रस्तुत भएको कमजोर लगानी भनेको के हो भनेर वुझाउन आग्रह गर्नु भएको थियो । पत्रकार कमल पौडेल अथकले गोष्ठीमा उठेका विषयहरु कत्तिको कार्यान्नवन नहुने र कार्यपत्रमा उठेका विषयवस्तुहरु कार्यान्वयन हुनु पर्ने कुरा बताउनु भयो । रेडियो सफलताका प्रवन्ध निर्देशक दुर्गा अधिकारीले पत्रकारहरुले आफ्नो सीप र दक्षतालाई अभिवृद्धि गर्नुपर्ने तथा गर्व गर्ने खालको कार्य पत्रकारहरुबाट गरिनुपर्ने सुझाव प्रस्तुत गर्नुभयो ।

पत्रकार नारायण भट्टराईले कार्यपत्रमा उल्लेख भएका सबै विषयहरुको समर्थन गर्दै साना र ठूला मिडिया कसलाई भनिएको बुझ्न नसकिएको टिप्पणी गर्नुभयो । उहाँले प्रेस काउन्सिल नेपालले गर्ने पत्रपत्रिकाको वर्गिकरणमा निष्पक्ष रुपमा गनुपर्ने कुरा बताउनु भयो ।

पत्रकार नवराज सुवेदीले साना मिडियालाई पर्ने समस्या बुँदागत रुपमा स्पष्टसँग कार्यपत्रमा उल्लेख भएको बताउनु भयो । उहाँले मिडियाहरु स्थापित नभएको स्थापनामात्र भएको कार्यपत्रमा उल्लेख भएका सुझावहरुलाई कसले कार्वान्वयन गर्ने हो भनेर प्रश्न गर्नु भएको थियो । सुवेदीले मोफसलका सञ्चारमाध्यम सधैं विपदकालमा रहेको धारणा राख्नु भएको थियो ।

नेपाल पत्रकार महासंघ कास्कीका सदस्य दीननाथ बरालले कुनै पनि सञ्चार माध्यम खोल्न निश्चित पुँजी तोकिनु पर्ने विचार व्यक्त गर्नुभयो । नेपाल प्रेस युनियनका केन्द्रीय सदस्य ऋषिकान्त पौडेलले पत्रपत्रिका तथा सञ्चार माध्यमहरुको मर्जर नीति सम्भव नरहेको विचार व्यक्त गर्नुभएको थियो । पत्रकार माधव पनेरुले सञ्चार माध्यमका नाममा सञ्चालन गरिने यस्ता सम्वाद कार्यक्रमहरु परिणाममुखी हुनुपर्ने कुरामा जोड दिनु भएको थियो । दक्ष पत्रकार कसलाई भन्ने भनेर पनि छलफल गुर्नपर्ने उहाँको सुझाव रहेको थियो ।

हिमचुली एफएमका दिलीप राईले साना मिडियामा विपतकाल मात्र नभई आपतकालनै भएको बताउनु भयो । उहाँले एफएमहरुमा लोडसेडिङ नहुने व्यवस्था गरिनुपर्ने मागसमेत गर्नुभयो । राईले सञ्चार माध्यम चलाउने व्यक्ति पत्रकार हो कि होइन ? भनेर बुझेर मात्र लाइसेन्स दिनुपर्ने बताउनु भयो । पत्रकार दीपक श्रेष्ठले कार्यपत्रमा कुनै गुनासो नरहेको भन्दै सूचना विभागबाट वितरण गरिने लोक कल्याणकारी विज्ञापनको सही सदुपयोग नभएको बताउनुभयो । उहाँले लोक कल्याणकारी बिज्ञापनको आसमा मात्रै पत्रिका दर्ता गर्ने परिपाटी बढेको भन्दै लोककल्याणकारी विज्ञापनमा रोक लगाएर मात्रै व्यावसायिक पत्रकारिता फस्टाउने धारणा राख्नुभयो ।

पत्रकार प्रल्हादचन्द्र घिमिरेले लोक कल्याणकारी विज्ञापन अनलाइन मिडियालाई पनि वितरण गर्नुपर्ने धारणा राख्नु भएको थियो । यसैगरी नेपाल पत्रकार महासंघ कास्कीका सचिव त्रिभुवन पौडेलले पत्रिका तथा सञ्चार माध्यम चलाई सकेपछि पत्रकारलाई मासिक तलव दिनै पर्ने नसके कन्द गर्नुपर्ने कताउनुभयो । पौडेलले प्रेस काउन्सिल नेपालको कार्यक्रम किन असारको मसान्तमै हुन लागेको हो भनेर प्रश्न गर्नु भएको थियो ।

कार्यपत्र प्रस्तोता माधव शर्माले सहभागीहरुले उठाएका विविध प्रश्नहरुको जबाफ दिँदै छलफल तथा अन्तरक्रियाबाट नै मोफसलका पत्रपत्रिका तथा सञ्चारमाध्यमको समस्याहरु पत्ता लाग्ने बताउनुभयो । यस्ता किसिमका कार्यक्रमहरुले मोफसलका मिडियाको समस्या समाधान गर्न सरोकारवालाको ध्यान जाने कुरामा आफू विश्वस्त रहेको कुरा बताउनु भएको थियो ।

नेपाल पत्रकार महासंघ कास्कीका सभापति रामकृष्ण ज्ञवालीले कास्कीमा कार्यरत सबै पत्रकारले तलब पाएको र तलव नपाएको भनेर अहिलेसम्म महासंघमा कुनै उजुरी नपरेको

बताउनुभयो । तलब नपाएको भए महासंघमा उजुरी गर्न आग्रह गर्दै महासंघले समस्या समाधान गर्न पहल गर्ने बताउनुभयो । उहाँले सञ्चारमा लगानीलाई कालो धन भन्न नमिल्ने धारण राख्दै पत्रकार आफैं पनि जिम्मेवार बन्नुपर्ने र प्रेस काउन्सिल नेपाल पनि जिम्मेवार रुपमा प्रस्तुत हुनुपर्ने कुरा बनाउनु भयो ।

प्रेस काउन्सिल नेपालका सदस्य तथा विश्व प्रेस काउन्सिलका उपाध्यक्ष किशोर श्रेष्ठले साना लगानीका मिडिया विपतकाल मात्र नभएर अनिकालमै रहेको टिप्पणी गर्नुभयो । प्रेस काउन्सिल नेपालले गर्ने वर्गीकरणमा ८ सय ७५ पत्रिका मध्ये ८० प्रतिशतभन्दा वढि साना लगानीका रहेको कुरा बताउनु भयो । मिडियामा पनि विज्ञापन लिन अस्वस्थ प्रतिस्पर्धा भएको कुरा बताउँदै उहाँले साना लगानीका मिडियाहरु क्रमशः मर्दै गइरहेको भनाई राख्नुभएको थियो । सर्वोच्च अदालतले सरकारलाई समानुपातिक विज्ञापन नीति कार्वान्नवन गर्ने आदेश दिईसक्दा पनि सरकारले कार्वान्नवन नगरेर सरकारले पत्रकारको पेट मारेको भन्दै वर्तमान सरकार समानुपातिक विज्ञापन नीति लागु गर्न बाधक बनेको बताउनु भयो । उहाँले मुलुकमा चोरी पत्रकारिता बढेको र कपी पेष्टको समस्या ज्यादा रहेको भनाई राख्नु भयो । उहाँले पत्रकारिता क्षेत्रमा प्रवेश गर्न पनि निश्चित तहको परीक्षा पास गर्नुपर्ने प्रावधान हुनुपर्ने कुरा बताउनु भयो ।

कार्यक्रमका अध्यक्ष तथा मिडिया संवाद कार्यक्रमका संयोजक खिलबहादुर भण्डारीले काउन्सिलले कपी पेष्टको समस्यालाई क्रमिक रुपमा सुधार गर्दै लगेको र आ.व. ०६९/०७० को वर्गीकरणमा समेत १ सय भन्दा वढि पत्रिका हुबहुमा परेका बताउनु भएको थियो । पत्रकार महासंघले महिनामा १ हप्ता पनि पत्रकारिता नगर्नेलाई महासंघको सदस्यता नवीकरण नगर्ने स्पष्ट पार्नुभएको थियो । उहाँले महिनामा ३/४ पटक मन्त्रालयमा पुगेर मन्त्रीलाई पत्रकारको समस्याका बारेमा अवगत गराएको कुरा बताउनुभयो । सम्वाद कार्यक्रमको महत्वमाथि प्रकाश पार्दै उहाँले यस्ता कार्यक्रमहरुले पत्रकारहरुको चेतना अभिवृद्धि गर्न महत्वपूर्ण भूमिका निर्वाह गर्ने कुरा बताउनु भएको थियो ।

## ३. पत्रकार आचारसंहिता पुनरावलोकनः

पत्रकार आचारसंहिता - २०६० (संशोधित तथा परिमार्जित - २०६४) को कानुनी अवस्थाको मूल्याङ्कन एवं समयसापेक्ष परिमार्जनको लागि आचारसंहिता अनुगमन उपसमितिको बैठकबाट देहायनुसार स्टेरिङ कमिटी गठन भएको छ ।

| | |
|---|---|
| संयोजक | श्री बोर्णबहादुर कार्की |
| सदस्य | डा.श्री महेन्द्र बिष्ट |
| सदस्य | श्री किशोर श्रेष्ठ |
| सदस्य | लक्ष्मीविलास कोइराला |
| सदस्य | अनिता विन्दू |
| सदस्य | उजिर मगर |

पत्रकार आचारसंहिता पुनरावलोकनको लागि पोखरा, काठमाडौं, विराटनगरमा कार्यशाला गोष्ठी गरी सुझव लिन युनेस्को काठमाडौं कार्यालयसँग प्रस्ताव पेश भै सम्झौता गरी कार्य

सम्पन्न गरिएको छ । उक्त कार्यक्रम विराटनगरमा २०७१ फागुन २०, काठमाडौंमा २०७१ चैत ०९ गते र पोखरामा २०७१ चैत २७ गते सम्पन्न गरिएको छ ।

## क. विराटनगरः

प्रेस काउन्सिल नेपालको आयोजनामा पत्रकार आचारसंहिता पुनरावलोकनसम्वन्धी एकदिने क्षेत्रीय परामर्श बैठक फागुन २० गते मोरङको विराटनगरमा सम्पन्न भएको छ । प्रेस काउन्सिल नेपाल, युनेस्को र आइएमएसको संयुक्त आयोजनामा मोरङ जिल्लाको विराटनगरमा पत्रकार आचारसंहिता पुनरवलोकन परामर्श बैठक सम्पन्न गरियो ।

काउन्सिल सदस्य सुदर्शन आचार्यले सञ्चालन गर्नुभएको सो कार्यक्रममा काउन्सिल अध्यक्ष बोर्णबहादुर कार्की, काउन्सिल सदस्यद्वय चन्द्रदेव कामती र मुरलीप्रसाद यादव, काउन्सिल सदस्य एवम् नेपाल पत्रकार महासङ्घका अध्यक्ष डा.महेन्द्र बिष्ट, काउन्सिलका उपप्रशासकीय अधिकृत दीपक खनाल र सहायक कम्प्युटर अपरेटर अर्जुनकुमार राउत, युनेस्कोका लक्ष्मणदत्त पन्तलगायतको उपस्थिति रहेको थियो ।

विषय-विज्ञहरू काशीराज दाहाल, विनोद भट्टराई, विनोद ढुङ्गेलले विषयसँग सम्बन्धित रहेर कार्यपत्र प्रस्तुत गर्नुभएको थियो ।

सो कार्यपत्रमा आधारित रहेर विनयराज पाण्डे, विराटनगर, नेपाल पत्रकार महासङ्घ सप्तरीका प्रकाश खतिवडा, बाबुराम तिमल्सेना, प्राध्यापक विराटनगर, कौशल चेम्जोङ, उदयपुर, रोहितचन्द्र भट्टराई, अध्यक्ष नेपाल पत्रकार महासङ्घ इलाम, कुशलबाबु बस्नेत, उदयपुर, केशव घिमिरे, धरान, मोहन भण्डारी, विराटनगर, उमाकान्त खनाल, झापा (बीबीसी, नेपाली सेवा), सोम अधिकारी, कार्यकारी सचिव, उद्योग सङ्गठन, तारामणि सापकोटा, उपाध्यक्ष झापा, ललिता भट्टराई, सम्पादक फेवा साप्ताहिक, गणेश लम्साल, केन्द्रीय सदस्य महासङ्घ, सोमनाथ सुसेली, इलाम केशवबहादुर कार्की, विराटनगर लगायतले आ-आफ्नो विचार राख्नुभएको थियो ।

नेपाल पत्रकार महासङ्घको सभाहलमा भएको सो परामर्श बैठकमा पत्रकार महासङ्घ, मोरङका अध्यक्ष महेन्द्र बिष्टले स्वागत मन्तव्य राख्नुभएको थियो । कार्यक्रममा सरोकारवाला सहभागीको सङ्ख्या ६० रहेको थियो ।

## ख. पोखरा

प्रेस काउन्सिल नेपाल र नेपाल पत्रकार महासंघको संयुक्त आयोजनामा २०७१ चैत २७ गते शुक्रबार पोखरामा पत्रकार आचारसंहिता संशोधन विषयक क्षेत्रीयस्तरको छलफल कार्यक्रम सम्पन्न भयो ।

युनेस्कोको सहयोगमा प्रेस काउन्सिल नेपालका अध्यक्ष बोर्णबहादुर कार्कीको अध्यक्षतामा भएको छलफल कार्यक्रममा प्रेस काउन्सिल नेपालका सदस्य माधव शर्माले स्वागत मन्तव्य राख्नुभएको थियो भने कार्यक्रमको सञ्चालन प्रेस काउन्सिल नेपालका प्रशासकीय अधिकृत मानबहादुर लामिछानेले गर्नुभएको थियो । छलफल कार्यक्रममा गण्डकी तथा धौलागिरी अञ्चलअन्तर्गत कास्की, गोर्खा, तनहुँ, स्याङजा, पर्वत, म्याग्दी, लमजुङ क्षेत्रका करिब ६० जना पत्रकारहरुको सहभागिता रहेको थियो ।

कार्यक्रममा बोल्दै प्रशासकीय अदालतका अध्यक्ष काशिराज दाहालले लोकतन्त्रको लामो

समयदेखि अभ्यास भएको मुलुकमा पत्रकार आचारसंहिताको धेरै पालना भएको बताउनुभयो । नेपालजस्ता मुलुकमा भने धेरै पत्रकारबाट आचारसंहिताको पालना नभएको उहाँले वताउनु भयो । सत्यको खोजी गरी भूमिका निष्पक्ष र स्वतन्त्र पत्रकारिता आजको आवश्यकता भएकोमा उहाँको जोड थियो । मुलुकको आवश्यकताअनुसार ऐन कानुन परिमार्जन हुनुपर्ने बताउँदै उहाँले अब बन्ने पत्रकार आचारसंहिता अन्य मुलुकले समेत अनुसरण गर्ने गरी निर्माण गर्नुपर्ने बताउनुभयो । डन र धनको प्रभावले पेशागत मर्यादा संकटमा परेको बताउँदै अध्यक्ष दाहालले आचारसंहितामा नपरेका विषयलाई समेट्नुपर्ने बताउनु भयो । उहाँले श्रोता, पाठक, दर्शक र जनताप्रति मिडिया जवाफदेहि हुनु पर्ने भन्दै लगानीकर्ता र सम्पादकबीचको दूरी घटाउनको लागि पनि लगानीकर्तालाई आचारसंहिताको बारेमा जानकारी गराउनु पर्ने उहाँको ठहर थियो ।

सञ्चारविज्ञ विनोद ढुंगेलले युरोपेली मुलुकमा पत्रकारिताको राम्रो आचारसंहिता पालना भएको बताउँदै पछिल्लो क्रममा नेपालको मोफसलमा हुबहु समाचारले टाउको दुखाईको विषय भएको गुनासो गर्नुभयो । बालबालिकाको अन्तरवार्ता लिँदा उनका अभिभावकसँग स्वीकृत लिनुपर्ने, उनीहरुलाई मात्र स्रोतको रुपमा प्रयोग गर्न नहुनेसमेत उहाँले बताउनु भयो ।

अध्यक्ष बोर्णबहादुर कार्कीले पत्रकार र सञ्चारमाध्यमले आफ्नो जिम्मेवारी निर्वाह गर्न नसकेको र स्वच्छन्दताले गर्दा अराजकता भएको र नेपाली पत्रकारिता वयस्क उमेरमा पुगेको छ, यो उमेरमा हामीले उसलाई नियममा राख्न नसके भोलि ठूलो चुनौती सामना गर्नुपर्दछ, त्यसैले पत्रकार आचारसंहिता पालना गर्नु गराउनु पर्ने भन्दै पत्रकारितामा विकृति धेरै भएकोले बताउँदै उहँले असल पत्रकारिता गर्नेलाई सम्मान र खराब पत्रकारिता गरी बदनाम गर्ने उपर कारवाही गर्नुपर्नेमा जोड दिनुभयो । उहाँले भन्नु भयो, 'जो पनि र जतिबेला पनि पत्रकार बन्ने संस्कारको अब भने अन्त्य हुनुपर्दछ, यसले असल पत्रकारिता गर्नेलाई असर पुर्‍याउँदछ ।' महिला पत्रकारको संख्यामा बृद्धि गर्न महिला पत्रकारलाई सरकारी सञ्चामाध्यमबाटै आरक्षणको शुरुवात हुनुपर्ने अध्यक्ष कार्कीले बताउनु भयो ।

नेपाल पत्रकार महासंघका अध्यक्ष डा. महेन्द्र बिष्टले पत्रकारितामा क्षमता अभिबृद्धि आवश्यक भएको बताउँदै पत्रकार आचारसंहिता पालना गर्न आफ्नो तहबाटै पहल गर्न आग्रह गर्नुभयो । परम्परागत ढंगले पत्रकारिता अब नचल्ने बताउँदै उहाँले चलनचल्तीअनुसार सत्यतालाई स्थापित गर्न सक्नु पर्ने बताउनु भयो । विश्वसनीयतालाई आचारसंहिताले बाध्य पार्न नसकेसम्म पत्रकार सुरक्षित हुन नसक्ने उहाँको भनाई थियो । उहाँले समाचार प्रकाशन तथा प्रशारणमा पत्रकारलाई मात्र नभई सञ्चारमाध्यमलाई नै जिम्मेवार बनाउनु पर्ने बताउनु भयो ।

प्रेस काउन्सिलका सदस्य किशोर श्रेष्ठले पत्रकारलाई न्यूनतम योग्यताको लागि परीक्षा प्रणाली हुनुपर्नेमा जोड दिनुभयो । उहाँले हाल देशमा १४ हजार बढी पत्रकार भएको तर गुणस्तरमा कमि पाइएकोले यसलाई सुधार्न पनि परीक्षा प्रणाली आवश्यक भएको बताउनु भएको हो । पत्रकार आचारसंहिता पालना नभएका कारण धेरै पत्रकार कुटपिट तथा मृत्युवरणको शिकार बन्नु परेको उहाँले बताउनु भयो । पत्रकारको जीउनको लागि पत्रकारिता बलियो हुनुपर्ने सदस्य श्रेष्ठको भनाई थियो ।

मानव अधिकारवादी नेता टेकनाथ बरालले पत्रकारले नाम र पैसाभन्दा माथि उठेर मुलुकको हितको लागि लाग्नु पर्ने बताउनु भयो । अभिवक्ता कमलप्रसाद अर्यालले पत्रकार आचारसंहिता भएर पनि व्यवहारमा लागु नभएको गुनासो गर्नुभयो । भएका नियम पालना गर्न नसकेको अवस्थामा

पुन आचारसंहिता परिमार्जन खोज्नु नमिल्दो भएको उहाँले बताउनुभयो । कार्यक्रममा चर्चित लोकदोहोरी गायक बद्री पंगेनीले आफ्नो प्रस्तुती राख्दा कार्यक्रममा सहभागीलाई थप मनोरञ्जन भएको थियो ।

नेपाल पत्रकार महासंघका केन्द्रीय सदस्य सुष्मा पौडेल, छापा पत्रकारिता राष्ट्रिय संजालका संयोजक राजबहादुर गुरुङ, सञ्चार केन्द्र क्षेत्रीय प्रमुख रामप्रसाद तिमिल्सिना, पत्रकार वद्रीविनोद प्रतिक, गंगाधर पराजुली, राम्जी लम्सालगायतले जिज्ञासा राख्दै केही सुझावसमेत दिनुभएको थियो । सहभागीहरुले राखेको जिज्ञासा तथा प्रश्नको उत्तर नेपाल पत्रकार महासंघका अध्यक्ष डा. महेन्द्र बिष्ट, सञ्चार विज्ञ विनोद ढुंगेल, युनेस्कोका प्रतिनिधि लक्ष्मणदत्त पन्त, प्रेस काउन्सिलका सदस्य किशोर श्रेष्ठले दिनुभएको थियो ।

एकदिने उक्त छलफल कार्यक्रमबाट निम्न सुझाव आएका छन् ।

१. पत्रकार र सञ्चारमाध्यमलाई सिमित दायरामा ल्याउनु पर्ने ।
२. पत्रकार आचारसंहिता स्वयं पत्रकार र सञ्चारमाध्यमबाट लागु गर्नुपर्ने ।
३. पत्रकार आचारसंहिता लागु गर्न देशमा स्थायित्व आवश्यक ।
४. रेडियो तथा अनलाइन सञ्चारमाध्यमलाई छापा सञ्चारमाध्यम जस्तै बर्गीकरण गरी राज्यको सुविधा उपलब्ध गराउनु पर्ने ।
५. श्रमजीवी पत्रकार ऐन लागु गरी पत्रकार आचारसंहिताको राम्रोसँग अनुगमन हुनुपर्ने ।
६. असल पत्रकारलाई सम्मान तथा खराब पत्रकारलाई कारवाही हुनुपर्ने ।

## ग. काठमाडौंः

प्रेस काउन्सिल नेपालको आयोजनामा पत्रकार आचारसंहिता पुनरावलोकनसम्वन्धी एकदिने राष्ट्रिय परामर्श बैठक २०७१ चैत्र ९ गते सोमवार काठमाडौंमा सम्पन्न भएको छ । कार्यक्रममा पत्रकार आचारसंहिता समसामयिक रुपमा निर्माण गरी सोको प्रभावकारी कार्यान्वयन गर्नेतर्फ प्रेस काउन्सिल नेपाल गम्भीर रुपमा अन्तर्क्रिया र छलफलमा जुटेको काउन्सिलका अध्यक्ष बोर्णबहादुर कार्कीले वताउनुभयो । उहाँले मिडियाको बढ्दो विकास र प्रबृत्तिलाई मध्यनजर गरी आचारसंहितामा परिमार्जन गर्नुपर्ने आवश्यकता रहेको प्रष्ट पार्नुभयो ।

काउन्सिल सदस्य किशोर श्रेष्ठले स्वागत गर्दै परामर्श बैठकको औचित्यमाथि प्रकाश पार्नुभएको थियो । काउन्सिलका मुख्य अधिकृत झविन्द्र भुसालले आचारसंहिता जागरण अभियान कार्यक्रमअन्तर्गत विभिन्न सरोकारवालाहरुबाट आचारसंहिताका विषयमा सुझाव लिने कार्य गरिँदै आएको जानकारी दिनुभयो ।

बैठकमा अन्तर्राष्ट्रिय मिडिया सहयोग कोषका तर्फवाट टोवी मेण्डलले नेपालमा जारी आचारसंहिताका सम्वन्धमा टिप्पणीपत्र प्रस्तुत गर्नुहुँदै विभिन्न राष्ट्रमा आचारसंहिताको अभ्यासवारे धारणा, सहभागीका जिज्ञासाको उत्तर र नेपाली मौलिकतामा आधारित आचारसंहिता उत्तम हुने बताउनुभएको थियो ।

पत्रकार विनोद ढुङ्गेलले प्रस्तुत गर्नुभएको कार्यपत्रमा सहभागीहरुबीच छलफल भएको थियो । ढुंगेलले विभिन्न राष्ट्रमा पत्रकार आचारसंहिताको विद्यमान व्यवस्था र नेपालभित्रका पेशागत संगठनले जारी गरेका आचारसंहिताको व्यवस्था र अवस्थाको जानकारी गराउनुभएको थियो । कार्यक्रममा उपत्यका बाहिर मध्यमाञ्चलका ६ जिल्लाका पत्रकारसहित विभिन्न सरोकारवाला गरी

५८ जनाको उपस्थिति थियो ।

बैठकबाट आचारसंहितामा पत्रकार परिचयपत्रको प्रयोगको सीमा किटान गर्नुपर्ने, पत्रकारले अरुलाई होच्याउन नहुने, बालबालिका र यौनहिंसा पीडितका समाचार छाप्दा सावधानी अपनाउनुपर्ने, अदालतलाई प्रभावित पार्नेगरी आउने समाचारको विषयमा ध्यान दिनुपर्ने, पत्रकार आचारसंहिताको विषय पत्रकारका लागि मात्र सीमित हुन नहुने, वर्तमान पत्रकार आचारसंहिता बनाउँदा सवै सरोकारवालाको संलग्नता नरहेको, हरेक मिडियाले आ-आफ्नो आचारसंहिता र निर्देशिका बनाउनुपर्ने, काउन्सिलमा नेतृत्व गर्ने व्यक्ति कानुन र पत्रकारितामा विज्ञ हुनुपर्ने लगायतका विषय उठेका थिए ।

यससम्वन्धमा पत्रकारिता तथा आमसञ्चार विषयका सह-प्राध्यापक प्रवलराज पोखरेल, काउन्सिलका तर्फबाट उपप्रशासकीय अधिकृत दीपक खनाल, पत्रकारहरु सुरेश आचार्य, गोविन्द आचार्य, विष्णुप्रसाद शर्मा, के.वी. राना, बद्रीराज तिमिल्सिना, पत्रकार यम विरही, लेखनाथ न्यौपाने, प्रकाशकुमार अधिकारी, उद्योग वाणिज्य महासंघका निर्मलराज पौडेल, कानुन व्यवसायी गोपालदत्त पाण्डे, विज्ञापन संघका रुद्र भट्टराई लगायतले धारणाहरु राख्नुभएको थियो ।

## ४. मिडिया अनुगमन/बजार निरीक्षण

### वारा, पर्सा, मकवानपुर, चितवन, नवलपरासी, रुपन्देही

भ्रमण अवधि : २०७१।०८।०७ देखि २०७१।०८।१३ सम्म ७ दिन

सञ्चारकेन्द्र मकवानपुरको अभिलेखबाट निम्नानुसार देखिएको ।

सञ्चार केन्द्रको कार्यक्षेत्र : नारायणी अञ्चलका बारा, पर्सा, रौतहट, चितवन, मकवानपुर साथै सर्लाही, धनुषा, सिन्धुली, रामेछाप

- १२२ वटा पत्रपत्रिकको लोक कल्याणकारी विज्ञापनको रकम भुक्तानी हुने गरेको ।
- पत्रपत्रिकको अभिलेख गत आ.व.२०७०।७१ र यो आ.व.२०७१।७२ मा नरहेको साथै लोककल्याणकारी विज्ञापनको रकम समेत भूक्तानी नभएको ।
- काउन्सिलबाट पत्रपत्रिका वर्गीकरण सम्बन्धी सूचना जानकारी एवं टाँसकोलागि पठाइएकोमा उक्त सूचना टाँस गरिएको थियो ।
- पत्रपत्रिकको अभिलेखको नियमित मासिक प्रतिवेदन पठाउने गरेको साथै निश्चित ढाँचामा पठाउन जानकारी गराइएको छ ।
- पत्रपत्रिका वर्गीकरण एवं आचारसंहिता अनुगमन समितिले विगत बर्षहरुमा बैठक साथै केही काम गरेतापनि हाल बजेट प्राप्त नभएको जस्ता कारणले समितिको काम कारवाही नभएको ।

**पर्सा पत्रकारले निम्न विषयहरु प्रमुखताकासाथ उठाएका थिए :**

- काउन्सिलको पुनर्संरचना
- राससको ग्राहक सेवा र शुल्क ( स्थानीय सञ्चारमाध्यमलाई बढी भयो, लाइन काटेको अवधिको समेत शुल्क लिएको छ ।)
- वर्गीकरण स्वच्छ, यर्थाथपरक हुनु पर्छ । नजिकको, चिनजान, आफन्त, पदाधिकारी भएकै भरमा वर्गीकरण माथिल्लो वर्गमा हुनु हुदैन ।
- सञ्चारकेन्द्रमा पत्रिका बुझाउदा लिदैन । केवल विज्ञापन प्रकाशन भएका अंक मात्र

लिने गर्दछ । त्यहाँ अभिलेख हुनु पर्‍यो । पटक पटक विभिन्न निकायमा पत्रिका पठाउन कठिन छ । एक ठाँउको पत्रिका अभिलेखलाई प्रयोग गर्दा राम्रो हुने ।

- पत्रकार आचारसंहिता पालना र उजुरी एवं जागरण सम्बन्धी ।

उठेका जिज्ञासा तथा प्रश्नको सदस्य श्री सुदर्शन आचार्य र मुख्य अधिकृत झविन्द्र भुसालले प्रष्ट गर्दै काउन्सिल आचारसंहिता सम्बन्धी जागरण अभियान लिएर पर्सामा समेत आउने जानकारी गराइएको थियो । सोही अवसरमा स्थानीय नारायणी एफ.एम.मा प्रेस काउन्सिलको भूमिका, पत्रकार आचारसंहिता, पत्रपत्रिका वर्गीकरणका विषयको साथै भ्रमणको उद्देश्यबारे रेर्कडभै त्यस क्षेत्रका सर्वसाधरणमा समेत जानकारी गराइएको ।

कलैयामा जिल्ला हुलाक कार्यालयका प्रमुखसंग बाराका पत्रपत्रिकाको अवस्था, हुलाक चलान सम्बन्धमा छलफल हुदा कुनै पनि पत्रिकाले न्यूनतम शुल्क लाग्ने भएतापनि नविकरण गरेका छैनन् र हुलाकमा आउदैनन् । पढ्ने प्रयोजनार्थ कृपा दैनिक आउने गरेको साथै आफूले पहिले जिल्लामा स्थानीय समिति रहदाँ पत्रपत्रिकाको विकास र व्यवस्थापनको लागि पहल गरेको समेत बताउनु भयो । उहाँको सुझाब हुलाक कार्यालयमा नविकरण नहुने पत्रपत्रिका वर्गीकरणमा समावेश गरी राज्यको सुविधा उपलब्ध गराउनु उचित नहुने हुदा जिल्ला हुलाक कार्यालय संग सिफारिश माग भै आएमा पठाउने र यसले पत्रपत्रिका नियमित प्रकाशनमा सहयोग मिल्ने छ भन्ने रहेको थियो ।

## नवलपरासी

नवलपरासीको कावासोतीमा बजार अनुगमनका साथै स्थानीय देवचुली टेलिभिजनको हलमा पत्रकारहरुसंग भेटबाट र अर्न्तक्रिया सम्पन्न गरिएको । छलफलको क्रममा निम्नानुसार विषय उठान भएका छन् ।

- काउन्सिल पत्रकार आचारसंहिता जागरणमा केन्द्रित हुनुपर्ने र यस्ता कार्यक्रम नवलपरासीमा समय समयमा भैरहनु पर्छ । विद्युतीय सञ्चारमाध्यमको अनुगमन हुनु पर्ने ।
- नवलपरासी मोफसलको पनि मोफसल हो । राजधानीका मिडियाका यहाँ स्ट्रिङगर बाहेक कोही पनि स्थायी रिपोटर छैनन् ।
- पत्रपत्रिका वर्गीकरण, पत्रिकाको साइज, अभिलेख व्यवस्था, वर्गीकरण मापदण्डसम्बन्धी विषय
- काउन्सिलको भूमिका, उपलब्ध हुने सहयोग
- स्थानीय सञ्चारमाध्यमको अवस्था
- पछिल्ला कार्यक्रमगत एवं नीतिगत छलफलका विषय

उठेका जिज्ञासाबारे काउन्सिलको टोलीबाट प्रष्ट पारिएको थियो ।

सोहि अवसरमा कावासोतीमा रहेको नवलपुर एफ.एम. र देवचुली टेलिभिजनमा प्रेस काउन्सिलको भूमिका, पत्रकार आचारसंहिता, पत्रपत्रिका वर्गीकरणका विषय र काउन्सिलले गर्ने सहयोगको साथै भ्रमणको उद्देश्यबारे रेर्कडभै त्यस क्षेत्रका सर्वसाधरणमा समेत जानकारी गराइएको थियो । स्थानीय बजारमा सामर्थ्य साप्ताहिक, शैक्षिक जागरण मासिक र देबचुली मासिक साथै चितवनको पारदर्शी दैनिक, कायकैरन दैनिक, चितवन पोष्ट दैनिक र बुटबलको दै

निक पत्र देखिएका । एफ.एम.रेडियो ४, मासिक पत्रिका २, साप्ताहिक २ र टेलिभिजन ४ वटा सञ्चालनमा रहेका ।

तत्पश्चात सदरमुकाम परासीमा पत्रकार महासंघको कार्यालय भवन निरीक्षण एवं पत्रकार हरुसंग भेटघाट गरी स्थानीय बजार अनुगमन गरिएको । पाण्डे स्टेशनरीले गोरखापत्र, कान्तिपुर मात्र आउने अन्य स्थानीय पत्रिका र साप्ताहिक पत्रिका नआउने केही आउने भए सुनवलको मिलन पुस्तक पसलमा हुनसक्ने बताएका । भैरहवामा हाम्रो पुस्तक पसल र सरल स्टेशनरी साथै बुद्ध चोकमा अनुगमन गरी पत्रिका खरिद गरिएको छ ।

**रुपन्देही**

बुटबलमा स्थानीय पत्रकारहरुसंग भेटघाट तथा अर्न्तक्रिया सम्पन्न भएको । सो अवसरमा निम्न विषय प्रमुख रुपमा उठेका थिए ।

- साप्ताहिक पत्रपत्रिका विक्री, वितरणमा समस्या छ । त्यसैले कहिले निस्कने कहिले ननिस्कने गर्छन । पत्रपत्रिकामा समाचार कहाँ छ खोज्नुपर्ने भएको छ । सुधार हुनुपर्छ ।
- काउन्सिलको अनुगमन प्रकृया सुधार भएछ । खुशी लाग्यो । अनुगमन गर्दा सम्बन्धीत कार्यालय, पूर्वाधार, जनशक्ति समेतको छड्के निरीक्षण हुनुपर्‍यो ।
- मिडिया दर्तामै व्यवस्थित योजना, आर्थिक रुपमा दीगोपना, धरौटी लिने व्यवस्था भएमा टिक्ने र पारिश्रमिकको समस्या कम हुने थियो ।
- रेडियोको अवस्था दर्दानाक छ । टेलिफोन, घरभाडा तिर्न मुस्किल हुन थालेको छ ।
- मिडियामा मर्ज नीति हुनु पर्‍यो । मर्ज पछि किसिम परिवर्तन हुदाँ देखिएका लोक कल्याणकारी विज्ञापन भूक्तानीका समस्या समाधान भएन । हुनुपर्‍यो ।
- वर्गीकरणमा राम्ररी चलेका देखिने पत्रपत्रिका तल्लो वर्गमा अन्य माथिल्लो वर्गमा वर्गीकृत हुदाँ काउन्सिलको भूमिकामा प्रश्नचिन्ह खडा हुने हुदाँ ध्यान दिनु पर्छ ।
- रेडियो र टेलिभिजनमा आचारसंहिता, वियषवस्तुको काउन्सिलले अनुगमन गर्नुपर्‍यो ।
- फर्जि विवरण पेश गर्ने, सुविधा लिने तर नदिने प्रवृति छ । त्यस्तालाई वर्गीकरणमा समावेश गर्ने होइन कारवाही गर्नुपर्छ ।
- स्थानीय समिति गठन त छ तर प्रभावकारी छैन, भएन । स्थानीय रुपमै काम गर्दा आग्रह पूर्वाग्रह हुने हुदाँ काम गर्न सजिलो छैन ।
- काउन्सिलले अनुगमन गर्दा फिल्डमै गल्ती औंल्याइ सच्चाउन लगाउनु पर्छ ।

उठेका जिज्ञासा तथा प्रश्नको सदस्य श्री सुदर्शन आचार्य र मुख्य अधिकृत झविन्द्र भुसालले प्रष्ट गर्दै काउन्सिल आचारसंहिता सम्बन्धी जागरण अभियान लिएर रुपन्देहीमा समेत आउने जानकारी गराइएको थियो । कार्यक्रम पछी बुद्ध टेलिभिजन, लुम्बिनी टेलिभिजन, रेडियो रिपब्लिका र रेडियो लुम्बिनीको निरीक्षण भ्रमण गरिएको साथै स्थानीय बजारमा पत्रपत्रिका अनुगमन गरियो । पत्रिका पसलमा :

१. विशाल पुस्तक पसल
२. बुद्धि बन्दना स्टेशनरी
३. सिटी बुक्स एण्ड स्टेशनरी

नवलपरासीको सुनवलमा रहेको मिलन पुस्तक पसलमा पत्रिका निरीक्षण गरिएको ।

## धादिङ, नुवाकोट र काभ्रेः

२०७१ कार्तिक १७ गते धादिङ, कार्तिक १९ गते नुवाकोट र कार्तिक २२ गते काभ्रे जिल्लामा मिडिया अनुगमन तथा पत्रकार भेटघाट कार्यक्रम सम्पन्न भएको छ । सो अनुगमन तथा भेटघाटको क्रममा निम्नानुसार विषयहरु प्रमुखताका साथ उठेका थिए ।

१. पत्रिका वर्गीकरण निष्पक्ष गरिनुपर्ने ।
२. मोफसलका पत्रिका/पत्रकारलाई राज्यबाट दिइने सुविधामा थप हुनुपर्ने ।
३. पत्रकारितामा प्रवेश अगाडि परीक्षा प्रणाली लागु गरिनुपर्ने ।
४. पत्रकारिता पेशाबाट निबृत्तपश्चात पेन्सनको व्यवस्था हुनुपर्ने ।
५. हरेक आ.व. पश्चात सो आ.व.को वर्गीकरण सक्नुपर्ने ।
६. दुई आर्थिक वर्षको वर्गीकरण पश्चात पत्रिकाले रकम पाउने व्यवस्था खारेज गरी शुरु वर्गीकरण पश्चात नै रकम पाउन ऐन नियममा संशोधन गरिनुपर्ने भए संशोधन गरिनुपर्ने ।
७. प्रेस संग्रहालयको स्थापना हुनुपर्ने ।
८. उजुरी हेरेर मात्र नभै पत्रिका हेरी स्वयं काउन्सिलले समेत आचारसंहिता उल्लंघन गर्ने उपर कारवाही गरोस् ।
९. काउन्सिलको समयसापेक्ष पुनर्संरचना होस् ।
१०. पत्रिका दर्ता हुँदा/गरिँदा रकम डिपोजिट लिएर दर्ता गरी पत्रिका र पत्रकारलाई थप जिम्मेवार बनाउने व्यवस्था हुनुपर्छ ।
११. लोककल्याणकारी विज्ञापन मोफसलका पत्रिकाले पाएका छैनन् ।
१२. पत्रिका ढुवानीका कारणसमेत समयमा पत्रिका ग्रामीण भेगमा पुऱ्याउने व्यवस्था गर्न सकिएको छैन ।

अनुगमनमा काउन्सिलका सदस्य सुदर्शन आचार्य र वितरण सम्परीक्षण अधिकृत रामप्रसाद पोखेलको सहभागिता रहेको थियो । साथै काभ्रे जिल्लामा काउन्सिल सदस्य मनऋषि धिताल र मुख्य अधिकृत झविन्द्र भुसालसमेतको सहभागिता रहेको थियो ।

## लमजुङमा २०७१ कार्तिक २५ गते

२०७१ कार्तिक २५ गते लमजुङको वेशीशहरमा पत्रकार भेटघाट तथा मिडिया अनुगमन कार्यक्रम सम्पन्न भयो । काउन्सिलका सदस्य किशोर श्रेष्ठ, खिलाबहादुर भण्डारी र मनऋषि धितालको सहभागिता रहेको सो कार्यक्रममा पत्रकार आचारसंहिता जागरण अभियान, पत्रपत्रिका वर्गीकरण लगयातका विषयहरुमा छलफल भएको थियो ।

## मिडिया अनुगमन एवं पत्रकारहरुबीच अन्तरक्रिया कार्यक्रम बाग्लुङ/ म्याग्दी/ पर्वत

२०७१।९।६-११ गतेसम्म श्री माधव शर्माको नेतृत्वमा प्रेस काउन्सिल नेपालका सदस्य एवं नेपाल पत्रकार महासंघका उपाध्यक्ष श्री खिलबहादुर भण्डारी र सूचना प्रविधि अधिकृत श्री रामशरण बोहराको टोलीले पश्चिमाञ्चलको बाग्लुङ, म्याग्दी र पर्वत जिल्लाको पत्रपत्रिकाको बजार निरीक्षण, मिडिया अनुगमन एवं पत्रपत्रिकाका प्रकाशक/सम्पादक/पत्रकारबीच छलफल तथा अन्तरक्रिया कार्यक्रम सम्पन्न गरेको थियो ।

बजार निरीक्षण तथा मिडिया अनुगमनका क्रममा स्थानीय पत्रपत्रिका तथा विद्युतीय संचारमाध्यमको समस्या बारे छलफल गर्नुका साथै त्यस क्षेत्रका पत्रपत्रिकाले भोग्नु परेका अप्ठ्यारा अवलोकन गरिएको थियो । यी तीनवटै जिल्लाका पत्रपत्रिकाहरु प्रेसको कारणले गर्दा १२ बजेपछिमात्र बजारमा आउने गरेको जानकारी प्राप्त भयो । प्रेसका कर्मचारीलाई २ सिफ्टमा काम गरेबापत यथोचित पारिश्रमिक उपलब्ध गराउन नसक्दा कार्यालय समयमा मात्र काममा लगाइने गरिएकाले पत्रपत्रिका दिउँसोमात्र छपाई हुने गरेको, लोडसेडिङ्गको समस्याका कारण बजारमा पत्रपत्रिका ढिला आउने गरेको लगायतका विविध समस्या रहेका स्थानीय प्रकाशकहरुले निरीक्षण टोलीलाई जानकारी गराएका थिए । सोही क्रममा स्थानीय एफएम/रेडियोको समेत अनुगमन गरी विद्युतीय संचारमाध्यमहरुको समस्या बारे जानकारी लिइएको थियो भने तीनवटै जिल्लामा पत्रकार एवं पत्रकारसँग सम्बन्धित संघ/संस्थाहरुसँग छलफल, अन्तरक्रिया तथा पत्रकार भेटघाट कार्यक्रमसमेत गरिएको थियो । सोको संक्षिप्त विवरण यसप्रकार रहेको छ :

### बाग्लुङ

प्रेस काउन्सिल नेपालको अनुगमन टोलीले २०७१ पुस ८ गते बागलुङ्का विभिन्न मिडियामा कार्यरत पत्रकारहरुसँग भेटघाट एवं अन्तरक्रिया कार्यक्रम आयोजना गरेको थियो । नेपाल पत्रकार महासंघ बागलुङ्ग शाखाले प्रेस काउन्सिलको अनुगमन टोलीलाई बागलुङ्गमा स्वागत गरेको कार्यक्रममा २४ जना पत्रकारहरुको सहभागिता थियो । उक्त कार्यक्रममा पत्रकारहरुले देहायका जिज्ञासा एवं गुनासा राखेका थिए ।

- सूचना विभागबाट वितरण गरिने प्रेस पासमा आठ बुँदे प्रक्रिया निर्धारण गरिएको छ । यसले प्रेस पास लिन असहज बनाएको । यस विषयमा काउन्सिलले सहजीकरण गर्न पहल गरिदिनु पर्ने ।
- काउन्सिलको अभिलेख, वर्गीकरण, श्रमजीवी ऐन कार्यान्वयन र सूचना विभागको रातो कार्ड वितरण, आचारसंहिता पालना नगर्ने पत्रपत्रिकालाई वर्गीकरणमा के कस्तो असर पार्छ ? जानकारी चाहियो ।
- काउन्सिलले मोफसलका विद्यार्थीलाई फेलोसिप प्रदान गर्नुपर्ने, मिडिया विकास कोषले दिने अनुदानको दायरालाई अझ व्यापक र बृहत गर्नुपर्ने ।
- एफएमलाई काउन्सिलले के के कुरामा सहयोग गर्न सक्छ ? अनलाइन पत्रकारितालाई व्यवस्थित गर्न काउन्सिलले के गरिरहेको छ ? जानकारी पाए राम्रो हुने थियो ।
- काउन्सिलले क्षेत्रगतरुपमा अनुगमन गरिरहेको प्रभाव परेको देखिन्न । यसलाई प्रभावकारी बनाउनुपर्‍यो ।
- मिडियालाई नियमन गर्ने निकाय प्रेस काउन्सिल भएको तर यो यथोचित रुपमा क्रियाशील

हुन सकेको छैन ।

- प्रेस काउन्सिलले अहिले बजार अनुगमन गर्नुका साथै मिडियाकर्मीसँग छलफल गर्न थालेकोमा खुशी लाग्यो । मोफसलमा पत्रकारिता ६० को दशकपछि फैलिएको भएपनि यसले जटिल समस्या भोलिरहेको छ । मिडियाले गल्ती गरेका होलान, गल्ती गर्नेलाई कारवाही होस् । वर्गीकरण नतिजा प्रकाशनमा ढिलाई भइरहेकोले पत्रकारितामा नकारात्मक प्रभाव परिरहेको छ । काउन्सिलको प्रक्रिया नै त्रुटिपूर्ण छ, । यथार्थ विवरण पेश गर्ने पत्रपत्रिका तल परिरहेका छन् भने ढाँट, छल गर्ने वा झूठा विवरण पेश गर्ने पत्रपत्रिकाहरु वर्गीकरणमा माथिल्लो वर्गमा पर्ने गरेका छन् । यसले इमान्दार पत्रकारलाई हतोत्साही बनाएको छ ।
- नियमित प्रकाशित गर्ने पत्रिका वर्गीकरणमा पर्दैनन् तर कहिलेकाँही प्रकाशित गर्ने पत्रपत्रिका वर्गीकरणमा समावेश भएको देख्दा दुःख लागेको छ ।
- बागलुङ्ग बजार सानो छ । कलकारखाना कम भएकोले विज्ञापन पाउन कठिन छ । सञ्चारमाध्यम धेरै छन् । मिडिया सञ्चालन गर्न निकै कठिन भएको छ ।

सो कार्यक्रममा उठेका प्रश्नहरुको जवाफ दिंदै काउन्सिल माधव शर्माले काउन्सिलको बोर्डले नै निष्पक्षरुपमा तदारुकताका साथ काम गर्न नसकिरहेको, नियमित प्रकाशित गर्ने पत्रिका वर्गीकरणमा पर्दैनन् तर कहिलेकाँही प्रकाशित गर्ने पत्रपत्रिका वर्गीकरणमा समावेश हुने गरेको र झूठको खेती गर्ने, छलढाँट गर्ने र काउन्सिलमा आफ्नो मान्छे भएका पत्रपत्रिकाहरु मात्र वर्गीकरणमा पर्ने गरेको जस्तो लाग्छ भने काउन्सिलमा उजुरी गर्नुहुन अनुरोध गर्नुभयो । त्यस्तै गरी सदस्य श्री खिलबहादुर भण्डारीले फेलोसिप बढाउन काउन्सिलले कोशिस गर्नेछ । प्रक्रियागत ढंगबाट काम गर्नुपर्ने हुँदा वर्गीकरणमा केही ढिलाई भएको छ । वर्गीकरणमा अनियमितता भएको लागेमा उजुरी दिनुहोस्, छानबिन गर्छौं । व्यवस्थित गर्नका लागि काउन्सिलले अनलाईन पत्रिकाहरुको सूचीकरण प्रक्रिया अगाडि बढाइरहेको छ । मोफसलको पत्रकारिताको विकासका लागि मिडिया विकास कोषले बैंक ब्याजमा अनुदान दिंदै आएको छ। अफसेट प्रेस तथा एमएमका उपकरणहरु खरिद गर्न यहाँहरुले बैकबाट लिएको ऋणमा लाग्ने ब्याजमा Subsidy दिइरहेको छ। त्यसैगरी पत्रकारलाई क्यामरा, ल्यापटप आदि खरिदका लागि पत्रकार महासंघको सिफारिशमा २५% सम्म अनुदान दिंदै आइरहेको भन्नुभएको थियो ।

## म्याग्दी

प्रेस काउन्सिल नेपालले म्याग्दीका विभिन्न मिडियामा कार्यरत पत्रकारहरु, पत्रिकाका प्रकाशक एवं सम्पादकहरुसँग सोही दिन भेटघाट एवं अन्तरक्रिया कार्यक्रम आयोजना गरेको थियो । म्याग्दीको बेनीमा सञ्चालित उक्त कार्यक्रममा २१ जना पत्रकारको सहभागिता थियो । उक्त कार्यक्रममा प्रेस काउन्सिल नेपालका सूचना प्रविधि अधिकृतले काउन्सिलले सम्पादन गर्दै आएको काम र यसको कार्यक्षेत्रको बारेमा जानकारी गराउनुभएको थियो ।

यस कार्यक्रममा नेपाल पत्रकार महासंघ म्याग्दी शाखाले प्रेस काउन्सिलको अनुगमन टोलीलाई स्वागत गर्दै नेपाल पत्रकार महासंघ, म्याग्दीका अध्यक्ष श्री सुरज केसीले पत्रकार साथीहरुले आफूलाई लागेका जिज्ञासा र समस्या प्रष्टरुपमा राख्न आह्वान गर्नुभयो । सो क्रममा पत्रकाहरुले देहायका भनाई राखेका थिए :

- टिभी र रेडियो माध्यममा विज्ञापनको दरलाई व्यवस्थित गर्नुपर्ने, बढाउनका लागि

काउन्सिलले भूमिका खेल्नुपर्ने ?

- अन्य पत्रपत्रिका तथा विद्युतीय संचारमाध्यमको स्थानीय प्रतिनिधि भई कार्य गर्नुका साथै वैकल्पिकरुपमा अनलाइनसमेत संचालन गरिरहेको हुँदा अनलाइनलाई आत्मनिर्भर बनाउन के गर्न सकिन्छ ?
- अनलाइनको दर्ता प्रक्रिया स्पष्ट नभएकोले यसलाई स्पष्ट बनाउनेतर्फ के भइरहेको छ ?
- म्याग्दीजस्तो दुर्गम जिल्लाबाट प्रकाशित पत्रपत्रिकालाई माथिल्लो वर्गमा वर्गीकरण गर्नुपर्नेमा किन यस्तो भएको छैन ?
- सन् २००२ देखि पत्रिका संचालन गर्दै आएतापनि अहिलेसम्म व्यावसायिक गर्न सकेका छैनौं । दर्ता प्रक्रिया के हो थाहा भएन ।
- बजार सानो छ, यसलाई धान्न गाह्रो परिरहेको छ, । काउन्सिलले यसतर्फ विशेष ध्यान दिई दुर्गम जिल्लाका पत्रिकालाई माथि उठाउन केही ठोस कदम चाल्नुपर्ने ।
- वर्गीकरणमा लबिङ हुँदोरहेछ कि के हो ? आफ्नो मान्छे नभई नहुने रहेछ कि के हो ? हामी अन्यायमा परेका छौं ।
- सञ्चारकेन्द्र र प्रेस काउन्सिलमा पत्रपत्रिका अभिलेखका सम्बन्धमा तालमेल भएन, मोफसलका पत्रपत्रिकालाई मार नपर्ने गरी तालमेल गर्नुपर्‍यो ।

## पर्वत

प्रेस काउन्सिल नेपालले पर्वतका विभिन्न मिडियामा कार्यरत पत्रकारहरु, पत्रिकाका प्रकाशक एवं सम्पादकहरुसँग भेटघाट एवं अन्तरक्रिया कार्यक्रम आयोजना गरेको थियो । पर्वतको कुश्मामा संचालित उक्त कार्यक्रममा २० जना पत्रकारहरुको सहभागिता रहेको थियो । उक्त कार्यक्रममा प्रेस काउन्सिल नेपालका सूचना प्रविधि अधिकृतले काउन्सिलले सम्पादन गर्दै आएको काम र यसको कार्यक्षेत्रको बारेमा जानकारी गराउनुभएको थियो । कार्यक्रममा नेपाल पत्रकार महासंघ पर्वत शाखाले प्रेस काउन्सिल सदस्य श्री माधव शर्मा, श्री खिलबहादुर भण्डारी र सूचना प्रविधि अधिकृत श्री रामशरण बोहरालाई पर्वतको कुश्मामा स्वागत कार्यक्रममा नेपाल पत्रकार महासंघ पर्वतका अध्यक्ष दुर्गाप्रसाद शर्माले पत्रकार साथीहरुले आफूलाई लागेका जिज्ञासा र समस्या प्रष्टरुपमा राख्न आह्वान गर्नुभएको थियो ।

*यस कार्यक्रममा पत्रकाहरुले देहायका भनाई राखेका थिए :*

- पत्रकारिताको समस्याका सम्बन्धमा जिज्ञासा राख्दै भ्याटमा दर्ता हुनुपर्ने व्यवस्थाले साहित्यिक पत्रिकालाई समस्या भएको छ । यसमा प्रेस काउन्सिलले समन्वय गर्नुपर्ने ।
- वर्गीकरणको नतिजा आउन किन ढिलाई भइरहेको छ ?
- साहित्यिक सिर्जनामा लागेका हामी साहित्यकर्मीहरुको पीडा प्रेस काउन्सिलले बुझिदिनुपर्‍यो । अहिले साहित्यिक पत्रपत्रिकाको प्रकाशन प्रायः लोप हुनलागेकोमा राज्यको ध्यान जानुपर्ने ।
- क्षेत्रीय/स्थानीय/राष्ट्रिय रुपमा वर्गीकरणमा पर्नेलाई के कस्तो सुविधाको व्यवस्था छ ?
- अभिलेखका सम्बन्धमा काउन्सिल र सूचना केन्द्रबीच कस्तो समन्वय छ ?
- पत्रपत्रिकालाई भ्याटमा लैजानाले अत्यन्त समस्या परेको छ । २० लाखभन्दा कमको कारोवार गर्ने व्यवसायलाई भ्याटमा जानुपर्दैन भन्ने मैले बुझेको थिएँ । कसरी पत्रिकालाई भ्याट लागू भयो ? यस विषयमा प्रेस काउन्सिलले समन्वय गर्नुपर्छ ।
- हाम्रोजस्तो दुर्गम जिल्लाबाट प्रकाशित हुने पत्रिकालाई वर्गीकरणमा किन तल्लो वर्गीकरणमा झारिएको हो ? वर्गीकरणमा राहत दिनुपर्‍यो ।

- मोफसलका साप्ताहिक पत्रिकाहरु निकै समस्यामा छन् । विज्ञापनको बजार छैन । विविध समस्या रहेतापनि पत्रिकालाई कसरी टिकाउने भन्ने हाम्रो चिन्ता छ। समानुपातिक विज्ञापन प्रणाली कार्यान्वयनमा ल्याउन काउन्सिलले पहल गरिदिनुपर्‍यो । सूचना विभागबाट आउने पैसाले मात्र पत्रिका निकाल्न गाह्रो छ ।
- पत्रिकामा लेख, समाचार, विज्ञापन र सोको स्थान के हो ? विज्ञापनको मापदण्ड के हो ? जिल्लाका मिडियामा विज्ञापन छैन । कारोबारको आधारमा भ्याटमा जाने, नजानेबारे स्पष्ट हुन नसकिरहेको अवस्थाले अन्यौल छ । यसतर्फ काउन्सिलले पत्रकारलाई सहयोग गर्नुपर्‍यो ।

मोफसलको पत्रकारिता घाटामा छ । मरेर काम गर्‍यो तर कुनै पारिश्रमिकसमेत नलिइरहेको अवस्था छ । विज्ञापनको बजार सानो छ । सानो मिडियालाई जिल्लाबासीले विज्ञापन दिन गाह्रो मान्छन् । प्रेस काउन्सिल पत्रिका र पत्रकार बचाउने प्रयासमा लाग्नुपर्‍यो ।

## टीकापुर, कैलालीः

२०७१ फागुन १० गते कैलालीको टीकापुरमा मिडिया अनुगमन तथा पत्रकार भेटघाट कार्यक्रम सम्पन्न भएको छ । उक्त कार्यक्रममा काउन्सिलका अध्यक्ष श्री बोर्णबहादुर कार्कीले पत्रकार आचारसंहिता र जागरण अभियान साथै काउन्सिलले चालेका नयाँ कदमबारे पत्रकार हरुलाई जानकारी गराउनु भएको थियो । कार्यक्रममा काउन्सिलका सदस्य श्री मनऋषि धिताल, मुख्य अधिकृत श्री झविन्द्र भुसाल र बरिष्ठ अनुगमन सहायक बसन्त प्रसाद दाहालको सहभागिता रहेको थियो । उक्त कार्यक्रममा टीकापुरमा रहेर क्रियाशील निम्नानुसार पत्रकारहरुले देहायनुसार धारणा राखेका थिए ।

**भुवनेश्वर अधिकारीः** आचारसंहिताको प्रभावकारी अनुगमन काठमाण्डौबाट प्रकाशित पत्रिकाबाट शुरु गर्नुपर्छ । हालै नागरिक दैनिकमा प्रकाशित यमाहाको मोटरसाइकल सम्बन्धी न्युज पछिल्लो उदाहरणको रुपमा लिन सकिन्छ । केही ननिस्कने पत्रिका वर्गीकरणमा परेका छन, फोन गरेर बुझ्दा हुन्छ । वर्गीकरणमा दया माया चाहिएको छैन

**दुर्गा देवकोटाः** पत्रिका वर्गीकरण पश्चात पाइने सुविधाले टिकाइरहेको छ, हैन भने टिक्न गाह्रो छ। चलिरहेका पत्रिका र मेहनत गर्ने पत्रकारलाई हौसला दिनुपर्छ ।

**पदम सापकोटाः** वर्गीकरणको मापदण्ड कडा छ । वास्तविकतासंग तालमेल हुनुपर्छ । फेक विवरणका आधारमा वर्गीकरण माथि पर्ने व्यवस्था हट्नु पर्छ ।

**गणेश चौधरी** : मिडियामा समाचार ठूलो आउने तर खण्डन नदेखिने गरी छापिने गरिउको छ त्यसमा सुधार जरुरी छ । हालसम्म आचारसंहिता अनुसार कारवाही के भयो । पीडितले न्याय पाएक्ष छन् त । अनलाइन सम्बन्धी नीति के हुने ? सरकारी जागिर पनि खाने पत्रकार पनि हुन पाउने, यस्तै हो ?

**महेन्द्र भण्डारीः** काठमाण्डौको जस्तो न्यूज पनि आउने तर हामीले मेहनत गरेर पठाएको समाचारले प्राथमिकता नपाउने । वोनसको लागि अनावश्यक बढी समचार प्रशारण गरिन्छ । सुधार हुनुपर्छ ।

**एकेन्द्र तिमिल्सेनाः** आचारसंहिताको कारवाही नाममात्रको छ । रेडियो र टेलिभिजनलाई समेटन सकेको छैन । छापा र विद्युतीय मिडियामा रहेको बिज्ञापनको विभेद अन्त्य हुनुपर्छ । पत्रकारको

भनाइ पश्चात मुख्य अधिकृत झविन्द्र भुसालबाट पत्रकार आचारसंहिता जागरण कार्यक्रम, आचारसंहिताका उजुरीको प्रकृति, वर्गीकरणको सम्बन्धमा समेत स्पष्ट पार्नु भएको थियो ।

अध्यक्षज्यूबाट जिज्ञासाको जवाफ सहित जिम्मेवार र उत्तरदायी पत्रकारिताको लागि आचारसंहिता पालना महत्वपूर्ण रहेको, पत्रकारको क्षमता बृद्धिको लागि प्रशिक्षक तयारी गर्न लागिएको साथै पत्रकारिता पेशामा प्रवेशको लागि प्रेस परीक्षा सम्बन्धमा छलफल भइरहेको जानकारी गराउनु भएको थियो ।

## कैलालीमा रहेका एफ.एम.

| सि.नं. | एफ.एम.को नाम | रहेको स्थान | कैफियत |
|---|---|---|---|
| १ | सामुदायिक रेडियो टीकापुर | टीकापुर | |
| २ | फूलवारी एफएम | टीकापुर | |
| ३ | नमस्ते एफएम | टीकापुर | |
| ४ | काहटस एफएम | टीकापुर | |
| ५ | हाम्रो मालिका | लम्की | |
| ६ | रेडस्टार एफएम | लम्की | |
| ७ | पश्चिम आवाज | लम्की | |
| ८ | रेडियो सखी | जोशीपुर | |
| ९ | कोशेली एफएम | वौनिया | |
| १० | रेडियो कैलाली | सुखड | |
| ११ | रेडियो अपी | सुखड | |
| १२ | रेडियो डौना वेवरी | पहलमानपुर | |
| १३ | सुनौलो एफएम | मसुरीया | |
| १४ | गोदावरी एफएम | अत्तरीया | |
| १५ | दिनेश एफएम | धनगढी | |
| १६ | रेडियो पश्चिम टुडे | धनगढी | |
| १७ | सुदूर सन्देश | धनगढी | |
| १८ | धनगढी एफएम | धनगढी | |
| १९ | घोडाघोडी एफएम | धनगढी | |
| २० | जनआवाज | धनगढी | बन्द |
| २१ | खप्तड | धनगढी | बन्द |
| २२ | कान्तिपुर | रिले प्रशारण | रिले प्रशारण |
| २३ | रेडियो नेपाल | रिले प्रशारण | रिले प्रशारण |

## गुलरीया, बर्दिया

२०७१ फागुन १० गते वर्दियाको गुलरीयामा मिडिया अनुगमन तथा तथा पत्रकार भेटघाट कार्यक्रम सम्पन्न भएको छ । कार्यक्रममा काउन्सिलका अध्यक्ष श्री बोर्णबहादुर कार्कीबाट पत्रकार

आचारसंहिता र जागरण अभियान बारे जानकारी गराउदै उत्तरदायी र जिम्मेवार पत्रकारीताको लागि आचारसंहिता महत्वपूर्ण रहेको बताउनु भयो । कार्यक्रममा काउन्सिलका सदस्य श्री मनऋषि धिताल, मुख्य अधिकृत श्री झविन्द्र भुसाल र बरिष्ठ अनुगमन सहायक बसन्त प्रसाद दाहालको सहभागिता रहेको थियो । सो अवसरमा स्थानीय पत्रकारहरु विष्णु तिमिल्सेना, राकेश, पत्रकार महासंघ बर्दियाका अध्यक्ष मिनराज शर्माले कही केही नपाएपछि पत्रकार वन्ने परिपाटीले पत्रकार आचारसंहिता उल्लंघन भइरहेको, रिपोटर प्रकाशक हुन हुने नहुने के हो ? पत्रिका प्रकाशनमा वत्तिको समस्या, वर्गीकरण अघि पत्रकार महासंघसंग सूचना जानकारी लिदा यर्थाथपरक हुन जाने, कान्तिपुर, नागरिकको क्षेत्रीय संस्करण काउन्सिलमा अभिलेख नहुने के आधारमा अनुगमन मूल्यांकन हुन्छ भन्दै काउन्सिलको पूनसंरचना हुनु पर्ने कुरामा जोड दिनु भएको । काउन्सिल टोलीले यस अघि राजापुर, बर्दियामा रहेको राजापुर टाईम्स साप्ताहिकको कार्यालय र पत्रिकाको अनुगमन समेत गरेको थियो ।

**बर्दियामा रहेका पत्रपत्रिकाहरुः**

| | |
|---|---|
| हाम्रो भावना दैनिक | बर्दिया टाइम्स दैनिक |
| बबई साप्ताहिक | बढैयाताल दैनिक |
| राजापुर टाइम्स साप्ताहिक | चुरकुञ्ज साप्ताहिक |

**बर्दियामा रहेका एफ.एम.**

| सि.नं. | एफ.एम.को नाम | रहेको स्थान | कैफियत |
|---|---|---|---|
| १ | गुरुबाबा एफएम | गुलरिया | |
| २ | बबई एफएम | गुलरिया | |
| ३ | फूलवारी एफएम | गुलरिया | |
| ४ | रामज्ञानु एफएम | गुलरिया | |

## डडेलधुराः

२०७१ फागुन ९ गते डडेलधुरामा मिडिया अनुगमन तथा तथा पत्रकार भेटघाट कार्यक्रम सम्पन्न भएको छ । कार्यक्रममा काउन्सिलका अध्यक्ष श्री बोर्णबहादुर कार्की, सदस्य श्री मनऋषि धिताल, मुख्य अधिकृत झविन्द्र भुसाल साथै काउन्सिलका पूर्व सदस्य श्री ऋषिराज लुम्सालीको सहभागिता रहेको थियो । सो अवसरमा काउन्सिलको टोलीले पत्रकार आचारसंहिता जागरण अभियान, पत्रपत्रिका वर्गीकरण, मिडिया विकास कोषबाट हुने सहयोग जस्ता कुराहरुको बारेमा जानकारी गराएको थियो सो कार्यक्रममा स्थानीय पत्रकार हिक्मत सिंह, नेपाल पत्रकार महासंघ डडेलधुरा सचिव सचिन ताम्राकार, पत्रकार गणेश ठगुन्नाले जिल्लाको पत्रकारिता र भोग्नु परेका समस्याको बारेमा बताएका थिए ।

## डडेलधुरामा रहेका एफ.एमहरु

| सि.नं. | एफ.एम.को नाम | रहेको स्थान | कैफियत |
|---|---|---|---|
| १ | अमरगढी एफएम | डडेलधुरा | ९७.४ मेगाहर्ज, ५०० वाट |
| २ | सुदूर आवाज | डडेलधुरा | ९५ मेगाहर्ज, ५०० वाट |
| ३ | आफ्नो एफएम | डडेलधुरा | १०४.८ मेगाहर्ज, १०० वाट |

## डडेलधुरामा रहेका पत्रपत्रिका

| | |
|---|---|
| हिलटाइम्स दैनिक | डडेलधुरा पोष्ट दैनिक |
| आकलन दैनिक | आमरगढी पोष्ट दैनिक |
| हिन्दकुश साप्ताहिक | गाउँघर सन्देश दैनिक |
| रंगुनदर्पण साप्ताहिक | |

**अन्य:**

२०७१ कार्तिकमा बाँके, बर्दिया, सुर्खेत, जुम्ला र मुगुमा काउन्सिलका सदस्य मनऋषि धिताल, कार्तिकमै मेची अञ्चलका सवै जिल्लामा सदस्य मुरलीप्रसाद यादव, २०७१ असोजमा मोरङ र सुनसरीमा सदस्य चन्द्रदेव कामती, २०७१ असोजमै मोरङ र सुनसरीमा काउन्सिलका कानून अधिकृत सोमनाथ सुवेदी, २०७१ माघमा गोर्खामा काउन्सिल अधिकृत रहमतुल्ला मियाँ, २०७१ असोजमा बाँके, बर्दिया र जाजरकोटमा प्रशासन सहायक महेन्द्रराज सिंहले मिडिया अनुगमन गर्नुभएको थियो ।

## ५) CCTV जडान र कम्प्युटर खरिदः

काउन्सिल परिसर बाहिर र भित्र प्रत्येक तलामा एक/एक वटा क्यामेरा रहने गरी जम्मा ८ वटा क्यामेरासहितको CCTV जडान कार्य सम्पन्न भएको छ । त्यस्तै यो वर्ष १० थान कम्प्युटर खरिद गरिएको छ ।

## ६) फर्निचरः

भवनमा थपिएको माथिल्लो तलामा कार्पेट, पर्दा, स्टेज, कुर्चीलगायत फर्निचर खरिदकोलागि बोलपत्र आवहान भै खरिद गरिएको छ ।

## ७) पत्रकार आचारसंहिता अनुगमनसम्बन्धी आधारभूत तालिम सम्पन्न

काउन्सिल सेवाका कर्मचारीहरुको आचारसंहिता अनुगमन सम्बन्धी क्षमता अभिबृद्धि गर्ने उद्देश्य साथ आचारसंहिता अनुगमन सम्बन्धीत आधारभूत तालिम सञ्चालन गरिएको छ। २०७१ कात्तिक १४ गते शुरु गरिएको यस तालिममा नौवटा कक्षा सञ्चालन भएका थिए, ८ जना प्रशिक्षकले प्रशिक्षण दिनुभएको थियो । पहिलो दिन नेपाल पत्रकार महासङ्घका पूर्वअध्यक्ष सुरेश आचार्यले छापामाध्यमको आचारसंहिता अनुगमन, महासङ्घका पूर्वअध्यक्ष शिव गाउँलेले पत्रकार आचारसंहिता र प्रेस काउन्सिल व्यवस्थापन, कान्तिपुर टिभीका समाचार सम्पादक भुवन केसीले

पत्रकार आचारसंहिता र अभ्यासमा समस्या, महासङ्घका अध्यक्ष डा.महेन्द्र बिष्टले पत्रकार आचारसंहिता पालनाको राष्ट्रिय/अन्तर्राष्ट्रिय सन्दर्भ, अनलाइन खबर डट कमका सम्पादक अरुण बरालले अनलाइन मिडियामा पत्रकार आचारसंहिता पालनाको अवस्था, रेडियो कृष्णसार एफएमका कार्यकारी प्रमुख तुला अधिकारीले नेपालका विद्युतीय सञ्चारमाध्यममा आचारसंहिता, पहिलो पोस्ट डट कमका सहसम्पादक एवम् रत्नराज्य लक्ष्मी क्याम्पस पत्रकारिता तथा आमसञ्चार विषयका उपप्राध्यापक ऋषिकेश दाहालले अनलाइन मिडियामा पत्रकार आचारसंहिता पालनाका साथै मिडियाका विविध पक्ष र गोरखापत्र दैनिकका पूर्वप्रबन्ध-सम्पादक लक्ष्मीधर गुरागाईंले विज्ञापन र समाचारमा आचारसंहिता अनुगमनका सम्बन्धमा केन्द्रित रहेर प्रशिक्षण दिनुभएको थियो । २०७२ असार ११ गते सम्पन्न भएको उक्त तालिममा काउन्सिलका २० जना कर्मचारी सहभागी भएका थिए । तालिममा सहभागी कर्मचारीहरुलाई काउन्सिलका अध्यक्षले प्रमाणपत्र वितरण गर्नुभएको थियो ।

## ८) अनलाइन पत्रपत्रिकाको सूचीकरण

अहिले अनलाइन पत्रकारिताप्रतिको चासो निकै बढ्दो छ । अनलाइन मिडियामार्फत् समाचार सम्प्रेषण गर्ने होड नै चलेको छ । अनगिन्ती अनलाइन मिडियाहरु सञ्चालनमा रहेका छन् । तर अनलाइन मिडियासम्बन्धी स्पष्ट कानुनको अभावका कारण अनलाइन मिडिया व्यवस्थित हुन सकेको देखिन्न । कानुनकै अभावका कारण कानुनी दायरामा ल्याउन पनि कठिन रहेको अवस्था छ । अनलाइन पत्रकारिता एउटा आकर्षण बनेको अवस्थामा यसका चुनौतीहरु पनि त्यति कै छन् । यसक्रममा सरकारले अनलाइनलाई व्यवस्थित गर्नका लागि गत आ.व. देखि नै प्रेस काउन्सिलले सूचीकरणको लागि आवेदन संकलन गर्दै आएको छ । हालसम्म २२० वटा अनलाइन सञ्चारमाध्यमले सूचीकरणका लागि आवेदन दिएका छन् । सोको विवरण अनुसूची खण्डमा संलग्न गरिएको छ ।

## ९) पत्रपत्रिका स्क्यानिङ्ग तथा अभिलेख

काउन्सिलले अभिलेखमा रहेका पत्रपत्रिकाहरुलाई स्क्यान गरी संरक्षण गर्दै आएको छ । यस आ.व.मा १६६०२ पेज स्क्यानिङ्ग गरिएको छ भने १६९८२१ पेज कटिङ्ग गरी सर्भर तथा सिडीमा संरक्षण गर्ने कार्य सम्पन्न भएको छ । २०७१ चैत सम्मका ठूला दैनिकहरु स्क्यानिङ्ग गरी सर्भरमा भण्डारण गरिएको छ । प्रायः २०७० चैतसम्मका ब्रोडसिट दैनिक पत्रपत्रिकाहरु कटिङ्ग गरिएको छ । हाल एउटा मात्र स्क्यानरबाट स्क्यानिङ कार्य भइरहेकोले अद्यावधिक गर्न निकै वर्ष लाग्ने देखिन्छ । डाटालाई समयमै अद्यावधिक गर्न आवश्यक स्क्यानर थप गरी परियोजनाको अवधारणा अन्तर्गत कार्य गर्नु अपरिहार्य भइसकेको छ । बर्सेनि पत्रपत्रिकाको प्रकाशन संख्यामा उल्लेख्य वृद्धि भइरहेकोले अभिलेख राख्न निकै चुनौतिपूर्ण हुँदै गएको छ । आगामी दिनहरुमा काउन्सिलमा द्रुतगतिको इन्टरनेट प्रविधि जडान गरी सम्बन्धित पत्रपत्रिकाहरुसँग डिजिटल प्रति मागेर संरक्षण गर्नु उपयुक्त हुनेहुँदा यसतर्फ अगाडि बढ्नु अपरिहार्य भइसकेको छ ।

| क्र.सं | महिना | स्क्यानिङ | कटिङ | कैफियत |
|---|---|---|---|---|
| १. | साउन | | २८१२४ | |
| २. | भाद्र | | ११८८२ | |

| | | | | |
|---|---|---|---|---|
| ३. | असोज | | १६६८९ | |
| ४. | कात्तिक | | १६६४० | |
| ५. | मंसिर | | १९९५१ | |
| ६ | पुस | | १५३३६ | |
| ७. | माघ | | ७००३ | |
| ८ | फागुन | | १२६०० | |
| ९. | चैत | | १२०८८ | |
| १०. | बैशाख २०७२ | | - | |
| ११. | जेठ २०७२ | | १५९५४ | |
| १२. | असार २०७२ | १६६०२ | १३५५४ | |
| | | १६६०२ | १६९८२१ | |

यस आ.व. को अन्त्यसम्म काउन्सिलको अभिलेखमा रहेका २०३१ सालदेखि हालसम्म प्रकाशित पत्रपत्रिकामध्ये ठूला दैनिक २०७१ सालसम्म र साप्ताहिक पत्रपत्रिकाहरु २०६२ सालसम्मका स्क्यान भइसकेका छन् ।

काउन्सिलको अभिलेखमा संरक्षित पत्रपत्रिकाहरु विभिन्न विधामा अनुसन्धान गर्ने व्यक्ति एवं संस्था/अनुसन्धानकर्ता, पत्रकारहरुको मागअनुसार इमेज डाटा तथा प्रिन्ट प्रति उपलब्ध गराइँदै आएको छ । यस्तो डाटा प्रयोग गर्ने अधिकांशतः अनुसन्धानकर्ता, विद्यार्थी तथा पत्रकारहरु रहेका छन् । यस आ.व. मा ४४ जना व्यक्तिबाट माग भएअनुसार रु. ७३,२९७१४- रकम बराबरको इमेज डाटा तथा प्रिन्ट उपलब्ध गराइएको छ ।

## १०. ०७१।०७२ मा काउन्सिलको बैठकका मुख्य निर्णयहरू

बैठक संख्याः १७

१) **मिति २०७१।०४।१४**

- ☞ आ.व. २०७१/०७२ को बजेट तथा कार्यक्रम स्वीकृत भएको
- ☞ प्रेस काउन्सिल नेपाल (Press Council Nepal) र भारतीय प्रेस काउन्सिल (Press Council of India) का बीच सम्वन्ध प्रगाढ गरी दुई देशको पत्रकारिताका विषयमा, अनुभव आदान -प्रदान गर्ने तथा जिम्मेवार र उत्तरदायित्वपूर्ण पत्रकारिताको विकास गरी राष्ट्र निर्माणमा योगदान पुऱ्याउने प्रमुख उद्देश्यले दुवै देशका प्रेस काउन्सिलको अध्यक्षबाट Memorandum of Understanding (MOU) मा २०७१ असोज ६ गते काउन्सिल वार्षिकोत्सवको अवसरमा हस्ताक्षर गर्ने निर्णय ।

२) **मिति २०७१।०४।१५**

- ☞ काउन्सिलका समिति/उपसमिति पुनर्गठन
- ☞ प्रेस काउन्सिल नेपालको बैठकसम्वन्धी कार्यविधिका सम्वन्धमा छलफल ।

३) **मिति २०७१।०५।११**

☞ वार्षिक उत्सव मनाउने सम्वन्धमा छलफल ।

**४) मिति २०७१।०५।१२**

☞ सदस्यहरुको कार्यक्षेत्र तोकिएको

**५) मिति २०७१।०५।१३**

☞ आ.व. २०६८/०६९ को पत्रिका वर्गीकरण नतिजाको पुनरावलोकन सम्वन्धमा छलफल भएको

**६) मिति २०७१।०५।१४**

☞ आ.व. २०६८/०६९ को पत्रिका वर्गीकरण नतिजा पुनरावलोकनको निर्णय गरिएको ।
☞ नवनियुक्त सदस्य श्री सुदर्शन आचार्यलाई स्वागत
☞ प्रेस काउन्सिल नेपालको बैठकसम्बन्धी कार्यविधि २०७१ स्वीकृति
☞ पत्रपत्रिका वर्गीकरण मापदण्ड संशोधन
☞ कान्तिपुर प्रकाशन गृहहरुको वितरणमा भइरहेको अवरोधको घटनाप्रति सरोकार व्यक्त गर्दै अवरोध तत्काल खुलाउन, संवादको माध्यमबाट आन्दोलन पक्षका मागको उचित सुनुवाई गर्न सम्वद्धपक्षको ध्यानाकर्षण गराउने निर्णय भएको ।

**७) मिति २०७१।०५।२५**

☞ ४५ औं वार्षिकोत्सवको अवसरमा विभिन्न विधामा पुरस्कार वितरण गर्ने सम्वन्धमा निर्णय भएको ।

**८) मिति २०७१।०६।५**

☞ ४५ औं वार्षिकोत्सवको तयारी र कार्यतालिका सम्वन्धमा निर्णय भएको
☞ पत्रपत्रिका वितरण सम्परीक्षण मापदण्ड ०६६ (०६९-०७० देखि लागु हुने गरी संशोधन) गर्ने प्रस्ताव पेश र छलफल भएको ।

**९) मिति २०७१।०९।२३**

☞ चौमासिक प्रगतिबारे समीक्षा ।
☞ पत्रपत्रिका वितरण सम्परीक्षण मापदण्ड ०६६ परिमार्जन (०६९-०७० देखि लागु हुने गरी संशोधन) वर्गीकरण आवेदन दस्तुर राष्ट्रियको हरुमा रु. ३५००।-, क्षेत्रीय रु. २५००।- स्थानीय रु २०००।- कायम गर्ने ।

**१०) मिति २०७१।०९।२४**

☞ सञ्चारमाध्यमसम्वन्धी नीतिका विषयमा प्रेस काउन्सिल ऐन, २०४८ को दफा ७ (ग) अनुसार नेपाल सरकारलाई निम्नानुसार १४ बुँदे सुझाव पेश गरेको ।

१. *सञ्चारमाध्यमको अनुगमन, नियमन गर्ने बहु संस्था हुँदा काममा दोहोरोपना हुने, आर्थिक भार बढ्ने भएकोले आमसञ्चारमाध्यमको अनुगमन प्रेस काउन्सिलले नै गर्ने गरी यसको प्रभावकारीता बृद्धि गर्ने ।*

२. *पत्रपत्रिका, अनलाइनको दर्ता र सञ्चारमाध्यमलाई राज्यबाट उपलब्ध हुने सेवा सुविधा स्थानीय तहबाट उपलब्ध गराउने व्यवस्था गर्नुपर्ने ।*

३. *प्रेस परीक्षाको व्यवस्था गर्ने र सो लिने काम अन्य नियामक काउन्सिलहरुले जस्तै प्रेस काउन्सिलले गर्ने व्यवस्था गर्ने ।*

४. *विशिष्ट योगदान दिने पत्रकारलाई विशिष्ट वा वरिष्ठ पत्रकारको उपाधी वा सम्मानको व्यवस्था गर्ने ।*

५. *पत्रकारहरुको लागि सामाजिक सुरक्षा कोष स्थापना गर्ने, सो कोषमा सरकार र सम्बन्धीत मिडियाहरुको योगदान हुने व्यवस्था गर्ने ।*

६. *संचारमाध्यमको दर्ताको लागि न्युनतम पूर्वाधार, बजेट, योजना, धरौटी तोक्ने व्यवस्था गर्ने ।*

७. *स्थानीय साथै दुर्गम क्षेत्रका संचारमाध्यमको विकासको लागि विशेष व्यवस्था गर्ने ।*

८. *साना लगानीका संचारमाध्यम मर्जरको प्रोत्साहन गर्न विशेष व्यवस्था गर्ने ।*

९. *काउन्सिलको सदस्यमा प्रेस उपभोक्ताहरुबाट समेत प्रतिनिधि हुने व्यवस्था गर्ने ।*

१०. *संचारमाध्यमहरुमा आन्तरिक आचारसंहिता र सम्पादकीय निर्देशिका वनाई लागु गर्ने र सो को लागि प्रेस काउन्सिलले सहजीकरण एवं प्रेरित गर्ने ।*

११. *संचारमाध्यमहरुले सर्वसाधारणको जानकारीको लागि आफ्नो हिसाव किताव पारदर्शी गर्नुपर्ने ।*

१२. *प्रेस काउन्सिलको आर्थिक स्वायत्तता सुनिश्चित गर्ने ।*

१३. *सञ्चारमाध्यमको दर्ता/इजाजत लिदा नामकरण गर्दा भाषागत रुपमा समेत ध्यान दिने ।*

१४. *राज्यका निकायहरुमा जनसम्पर्क सम्बन्धी कार्यको लागि जनशक्ति व्यवस्था गर्दा पत्रकारिता तथा आमसञ्चार र जनसम्पर्क सम्बन्धी विषयमा ज्ञान भएकालाई प्राथमिकता दिने व्यवस्था गर्ने ।*

११) **मिति २०७१।०९।२५**

☞ काउन्सिलको आव.०७०।०७१ को लेखापरीक्षण प्रतिवेदन उपर छलफल
☞ काउन्सिलको खर्च निर्देशिका २०७० मा संशोधन
☞ पत्रकार आचारसंहिता जागरण अभियान प्रभावकारी बनाउने सम्वन्धमा छलफल
☞ काउन्सिलको कार्यप्रकृति /कार्यबोझको सम्वन्धमा ओएनएम सर्भे गर्ने
☞ विद्युतीय र छापा सञ्चार माध्यमको आचारसंहिता अनुगमन गर्न काउन्सिलमा २ शाखा गठन गरी अविलम्व कार्य प्रारम्भ गर्ने ।

१२ ) **मिति २०७२।०३।१३**

☞ २०७२ वैशाख १३ गतको भूकम्पबाट बढी प्रभावित जिल्लाका पत्रकारलाई सहयोग गर्ने सम्वन्धमा निर्णय साथै उद्दार,राहतको क्रममा खटिने पदाधिकारी /कर्मचारीलाई धन्यवाद ज्ञापन ।

१३) **मिति २०७२।०३।१४**

☞ काउन्सिलको चौमासिक प्रगति समीक्षा

१४) **मिति २०७२।०३।३० विहान**

☞ पत्रपत्रिका वर्गीकरण मापदण्ड २०६६ संशोधन गर्ने सम्वन्धमा छलफल भएको ।
☞ आव २०६९।०७० र आव २०७०।०७१ को पत्रिका वर्गीकरण नतिजा सार्वजनिक गर्ने

सम्वन्धमा छलफल ।

**१५) मिति २०७२।०३।३० साँझ**

☞ आव २०६९।०७० र आव २०७०।०७१ को पत्रिका वर्गीकरण नतिजा सार्वजनिक गर्ने निर्णय भएको ।

☞ उपर्युक्त आ.व. को नतिजाउपर चित्त नबुझ्नेले पुनरावलोकनका लागि निवेदन दिन सकिने हुँदा पुनरालोकनसम्वन्धी कार्य गर्न काउन्सिलका सदस्यहरु संलग्न रहेको उपसमिति गठन ।

**१६) मिति २०७२।०३।३१ विहान**

☞ काउन्सिलमा सञ्चार संग्रहालय स्थापना गर्ने सम्वन्धमा छलफल भएको ।

☞ प्रेस काउन्सिल कर्मचारी सेवाशर्त विनियमावली, २०५४ संशोधित सम्वन्धमा निर्णय भएको ।

☞ काउन्सिलको वेबसाइड पुनर्निर्माण गर्ने निर्णय भएको ।

**१७) मिति २०७२।०३।३१ साँझ**

☞ काउन्सिलको लोगो परिमार्जनसम्वन्धमा निर्णय भएको ।

☞ पत्रकार आचारसंहिता संशोधन ड्राफ्टसम्वन्धमा सरोकारवालासंग छलफल गर्ने ।

## ११. अन्यः

## १. महाभूकम्पपछिको बोर्ड बैठक

**अध्यक्षको प्रतिवेदनः**

प्रेस काउन्सिल नेपालको यो बोर्ड बैठकमा उपस्थित सवै बोर्ड सदस्य साथी, सदस्य सचिवज्यू, सचिवालयका साथीहरुलाई स्वागत गर्दछु ।

बैठकका प्रस्तावहरुमा प्रवेश गर्नुअघि, म नेपालमा गत वैशाख १२ र २९ गते गएका ठुल्ठूला भूकम्पहरुवाट ज्यान गुमाउने हाम्रा दाजुभाइ, दिदी बहिनीहरुमा हार्दिक श्रद्धाञ्जली अर्पण गर्दछु । शोकको घडीमा क्षति व्यहोर्ने परिवारजनहरुमा समवेदना प्रकट गर्दछु । र, काउन्सिलको यस बैठकमा शोक प्रस्ताव पनि पेश गर्दछु । महाभूकम्पबाट हाम्रो प्रेस काउन्सिलका सदस्य तथा कर्मचारीहरुको घरपरिवारमा पनि ठूलो नोक्सानी भएको छ । त्यसमा पनि हामीलाई गहिरो दुःख लागेको छ । महाभुकम्पलगत्तै प्रेस काउन्सिलका सदस्य तथा कर्मचारी साथीहरु सवै आ-आफ्ना ठाउँमा स्वयंसेवकका रुपमा जनसेवामा खट्नुभएकोमा सवैलाई हार्दिक धन्यवाद दिन चाहन्छु । देशमा महाविपत्ति आएपछि सुरक्षित रहनु सवैको पहिलो काम हो, त्यसपछि मात्र पेशागत कामको कुरा आउँछ । यो भूकम्पबाट नेपालको मिडिया क्षेत्र पनि नराम्रोसंग प्रभावित भयो । सञ्चारमाध्यम र सञ्चारकर्मीहरुलाई आपतकालीन सहयोगका लागि नेपाल पत्रकार महासंघले खेलेको भूमिका, आपतकालीन सूचना सम्प्रेषणका लागि सूचना विभागले खेलेको भूमिकासमेत यतिवेला स्मरणीय छ ।

साथै प्रेस काउन्सिलका काठमाडौंस्थित बोर्ड सदस्य साथीहरुको क्रियाशीलताबाट विपद्मा

परेका सञ्चारकर्मी र सञ्चारमाध्यमलाई राहत भएको कुरा पनि यहांमाफ स्मरण गर्न चाहन्छु । १४ जिल्लाका भूकम्पपीडित पत्रकारलाई नेपाल पत्रकार महासंघसँगको सहकार्य र समन्वयमा हामीले मिडिया विकास कोषवाट केही सहयोग गऱ्यौं । रकमभन्दा पनि त्यो सद्भाव थियो ।

महाभूकम्पका असरबीच रिपोर्टिङ्मा आएका केही विदेशी सञ्चारमाध्यमले अफवाह फैलाएको र जनजीवनलाई झन् भयभित पारेकोमा प्रेस काउन्सिलले तत्कालै प्रेस वक्तव्य जारी गरेर सम्वन्धित सवैलाई सचेत गराएको थियो । विपद्का बेला नेपाली सञ्चारमाध्यम निकै संयमित भएको मैंले पाएँ । तैपनि कतिपय अवस्थामा प्राकृतिक विपद्का वेला गर्नुपर्ने समाचार संकलन र सम्प्रेषण सीपको अभावले नेपाली मिडियाले कमीकमजोरी गरेको पाइयो । जसलाई प्रेस काउन्सिलले वक्तव्यमार्फत सचेत गरायो र कतिपय मिडिया हाउसमा पुगेर सहानुभूति दिने काम पनि भयो । समग्रमा विपद्का बेला साहसिक रिपोर्टिङ् गर्ने नेपाली पत्रकारहरुलाई हामीले अभिनन्दन गर्नुपर्दछ । यसवीच हामी यो बैठक निकै ढिलोगरी बस्दैछौं । बैठक ढिलो भएकोमा मैंले बोर्डसमक्ष आफ्नो कमजोरीलाई मौखिकरुपमा स्वीकार गरिसकेको छु । र, यहाँ म लिखितरुपमा पनि ढिलो हुनुमा अध्यक्ष तथा सचिवालयको कमजोरी हो भन्ने कुरा स्वीकार गर्दछु । हामीले मधेशमा गर्ने भनिएको बैठक गर्न नसकेतापनि आगामी दिनमा मधेशमै कुनै बैठक राख्ने प्रतिवद्धता व्यक्त गर्न चाहन्छु । तर मधेशमा बोर्ड बैठक बस्नु अघि पनि हाम्रो उपसमितिका कामहरुलाई मधेशमा तीव्रता दिने प्रतिवद्धता व्यक्त गर्दछु ।

राजनीतिमा विपद्पछि राष्ट्रिय एकता पनि देखिएको छ र संविधान निर्माणको प्रक्रिया आशालाग्दो हिसावले अगाडि बढेको छ । ठुल्ठूला राजनीतिक परिवर्तनमा मिडियाको भूमिका बुझेका राजनीतिक दलहरुले प्रेस स्वतन्त्रता संवैधानिक ढंगबाट अझ संरक्षित गर्नेछन् भन्ने मलाई विश्वास छ र हामीले प्रेस काउन्सिलका तर्फबाट नयाँ संविधान र कानुनहरुमा प्रेस स्वतन्त्रताको पर्याप्त संरक्षण हुने प्रावधान राख्न सुझाव दिनुपर्ने ठान्दछु । एकातिर विपद्बाट आहत भएको नेपाली प्रेस जगत्लाई राहतको लागि पनि हामीले सुझाव दिनु छ भने अर्कोतिर पूर्ण प्रेस स्वतन्त्रताको प्रत्याभूतिका लागि पहल गर्नुछ । त्यसतर्फको बौद्धिक छलफलमा सहभागी हुन म यो बोर्डलाई अनुरोध गर्दछु ।

## क. शक्तिशाली भूकम्प, काउन्सिलको अवस्था र सक्रियता :

२०७२ वैशाख १२ गते शनिवार विहान ११ बजेर ५६ मिनेट जाँदा ७.६ रेक्टर स्केल, केन्द्रविन्दु गोरखाको बार्पाक भएको शक्तिशाली भूकम्प र तत्पश्चातका पराकम्पनले मुलुकमा ठूलोक्षति पुऱ्याएको छ । यसले प्रेस काउन्सिल र सञ्चारक्षेत्रसमेत प्रभावित रह्यो । भूकम्पले काउन्सिलको भवनका पेटी, भित्रीवालहरु चर्किएका छन् । भवनमा प्राविधिकहरुबाट निरीक्षण हुँदा भूइँतलाको एक कोठा प्रयोग गर्न नमिल्ने र अन्य कोठा सावधानीका साथ प्रयोग गर्न मिल्ने भनी ग्रिन स्टीकर टाँस भएको छ ।

वैशाख १२ को भूकम्पपश्चात काउन्सिल सचिवालय १३ गतेदेखि यसपूर्वझैं नियमित सञ्चालनमा रहेको छ । वैशाख १२ गते नै भूकम्पको राष्ट्रिय विपदबाट मुलुक गुज्रिएको र भूकम्पमा परी ज्यान गुमाउनु हुने सबैमा हार्दिक श्रद्धाञ्जली, परिवारजनमा समवेदना र घाइतेको शीघ्र स्वास्थ्यलाभको कामना गर्दै यस सम्वन्धी समाचार सम्प्रेषणमा मिडियाले खेलेको भूमिकाको सराहना गर्दै राष्ट्रिय विपद्मा संयमित तथा उत्तरदायीपूर्ण भई सत्य-तथ्य समाचार

सामग्री प्रकाशन/प्रशारण गरी उद्धार तथा राहतमा सहयोग पुऱ्याउन सम्पूर्ण सञ्चारमाध्यम तथा पत्रकारलाई विज्ञप्तीमार्फत आग्रह गरिएको थियो ।

भूकम्पले सञ्चारमाध्यममा पुऱ्याएको क्षति, असर र प्रभावका सम्वन्धमा काउन्सिल र नेपाल पत्रकार महासंघको संयुक्त टोलीले २०७२ वैशाख १४ गते काठमाडौंमा रहेका केही सञ्चारगृह (नयाँपत्रिका दैनिक, अन्नपूर्णपोष्ट दैनिक, कान्तिपुर दैनिक, कान्तिपुर टेलिभिजन, नागरिक दैनिक) को स्थलगत अनुगमन गरेको थियो । अनुगमनटोलीमा काउन्सिलको तर्फबाट अध्यक्ष बोर्णबहादुर कार्की, सदस्य किशोर श्रेष्ठ, मुख्य अधिकृत झविन्द्र भुसाल र नेपाल पत्रकार महासंघको तर्फबाट महासचिव उजिर मगर, काउन्सिलका पूर्वसदस्य र नेपाल पत्रकार महासंघका पूर्व अध्यक्ष शिव गाउँलेको सहभागिता थियो । अनुगमनको क्रममा इन्टरनेटको सुविधा र टेन्ट/पाल उपलब्ध नहुँदा समाचार सम्प्रेषणमा समस्या रहेको देखियो । तत्सम्वन्धमा सोही दिन अनुगमन टोलीले काठमाडौंका प्रमुख जिल्ला अधिकारी, गृह सचिव, मुख्यसचिव र सूचना तथा सञ्चार मन्त्रीज्यूसमक्ष छलफल गरी सञ्चारमाध्यमहरुलाई इन्टरनेटकोलागि 3G सहितको सिमकार्ड र पाल उपलब्ध गराउन अनुरोध गरिएपश्चात केही पाल र सिमकार्ड वितरण गरिएको छ ।

भूकम्प प्रभावित जिल्लाहरुका सञ्चारमाध्यम र पत्रकारलाई तत्काल राहतको लागि काउन्सिलका अध्यक्ष र सदस्यज्यूहरु र नेपाल पत्रकार महासंघको टोलीले गृहमन्त्रीलाई भेटी छलफल गरेपश्चात पाल/टेन्ट र मोबाइल चार्जर ब्याकअप उपलब्ध भै धादिङ,नुवाकोट, रसुवा, सिन्धुपाल्चोक सिन्धुली र दोलखामा वितरण गरिएको छ । भूकम्पपछि राहत र उद्दारको क्रममा काउन्सिलका सदस्य र कर्मचारीहरुबाट विभिन्न ठाउँमा विशेष पहल गरी राहत संकलन, वितरण र भग्नावशेष व्यवस्थापनमा योगदान पुऱ्याइएको छ ।

## ख. राहत कोष स्थापना र वितरणः

२०७२ साल वैशाख १२ गते गएको विनाशकारी भूकम्प र त्यसपछि लगातार गइरहेको पराकम्पका कारण अतिप्रभावित जिल्लाहरुमा पत्रकारहरुलाई राहत सहयोग अति जरुरी भएको अवस्थालाई मूल्याङ्कन गरी काउन्सिल र महासंघद्वारा संयुक्तरुपमा सहयोगका निम्ति ३ लाख २० हजारका दरले जम्मा रु. ६ लाख ४० हजारको तत्कालिन कोष स्थापना गरिएको, उक्त कोषबाट काठमाडौ उपत्यकाबाहेक देहायका १३ जिल्लालाई बमोजिम नेपाल पत्रकार महासंघ जिल्ला प्राथमिकताका आधारमा खर्च गर्ने गरी काउन्सिल र महासंघको संयुक्त टोली गई संस्थागत सहयोग गरिएको ।

क) सदरमुकाम नै ध्वस्त भै पत्रकारलाई बस्न र कार्य गर्न अति कठिनाइ भइरहेको २ जिल्ला सिन्धुपाल्चोक र दोलखा प्रत्येक शाखालाई १ लाखको दरले जम्मा रु. २ लाख ।

ख) प्रभावित अन्य ११ जिल्लाहरु नुवाकोट, धादिङ, गोरखा, रसुवा, रामेछाप, सिन्धुली, काभ्रे, मकवानपुर, ओखलढुंगा, सोलुखुम्बु र लमजुङ प्रत्येक शाखालाई ४० हजारका दरले ४ लाख ४० हजार ।

उक्त सहयोग रकम रामेछाप, दोलखा, सिन्धुपाल्चोक जिल्लामा अध्यक्ष बोर्णबहादुर कार्की, सदस्य किशोर श्रेष्ठ र सदस्य खिलबहादुर भण्डारी, गोरखा, लमजुङ, नुवाकोट, रसुवा, धादिङमा सदस्यहरु डा.महेन्द्र बिष्ट, मनऋषि धिताल, सुदर्शन आचार्यको सहभागितामा वितरण गरिएको थियो ।

## ग. प्रधानमन्त्री दैवीप्रकोप राहत कोषमा रकम जम्मा :

भूकम्पपश्चातको राहत, पुनर्स्थापना, पुनर्निर्माणकोलागि स्थापना भएको प्रधानमन्त्री दैवी प्रकोप राहात कोषमा काउन्सिलका अध्यक्षज्यू र कर्मचारीहरु (२९जना) बाट ३ दिनको तलबबराबरको रकम रु. ५९,९८७।- मिति २०७२।०२।०५ मा जम्मा गरिएको छ ।

## घ. अन्य :

- भूकम्प र तत् पश्चातका धक्काहरुबाट काउन्सिल सचिवालय भवनमा बसी काम गरिरहन नसकिरहेको स्थितिमा गृह मन्त्रालयमा पत्राचार गरी ४ (चार) थान टेन्ट काउन्सिललाई उपलब्ध भएको छ ।
- २०७२ वैशाख १२ को भूकम्पपश्चात् प्रकाशित समाचार सामग्रीको सम्वन्धमा काठमाडौंबाट प्रकाशित केही दैनिक पत्रिकाको विशेष अनुगमन शुरु गरिएको छ ।

## २) रौतहट घटना र संयुक्त मिसन:

२०७१ चैत महिनामा सरकारको सेवा केन्द्र विस्तारको निर्णय कार्यान्वयनसम्वन्धी विषयमा रौतहटमा चलेको आन्दोलनले प्रेस लक्ष्यित आक्रमणका घटना बढाउनुका साथै प्रेस तथा अभिव्यक्ति स्वतन्त्रता संकुचन भएको र कतिपय सञ्चारमाध्यमबाट पत्रकार आचारसंहिताको उल्लंघनसमेत भइरहेको गुनासा आएकोले पत्रकारको सुरक्षा र स्वतन्त्रता उपभोगका लागि सहज वातावरण निर्माण गर्न एवं पत्रकार आचारसंहिताको पालना गर्न गराउन आवश्यक भूमिका निर्वाह गर्ने र त्यहाँको वास्तविक अवस्थाको अध्ययन गरी यथाशक्य चाँडो सिफारिससहित प्रतिवेदन पेश गर्न २०७१ चैत्र २४ गते काउन्सिलका सदस्य चन्द्रदेव कामति संयोजक, नेपाल पत्रकार महासंघका केन्द्रीय सदस्य एवं मध्यमाञ्चल संयोजक शीतल महतो, महासंघ रौतहट शाखाका अध्यक्ष शैलेन्द्र गुप्ता सदस्य रहेको संयुक्त मिसन टोली गठन गरिएको । उक्त टोलीले विभिन्न १५ बुँदे सुझावसहितको प्रतिवेदन २०७२ वैशाख ०३ गते काउन्सिलमा पेश गरेको थियो ।

प्रतिवेदनमा पत्रकार तथा सञ्चारमाध्यममाथि आक्रमण गर्ने दोषीलाई कानुनी दायरामा ल्याउन राज्य गम्भीर हुनुपर्ने, पत्रकारलाई सुरक्षाको प्रत्याभूति दिलाउन र प्रेस तथा अभिव्यक्ति स्वतन्त्रता उल्लंघनका घटना दोहरिन नदिन रौतहट घटनामा संलग्न दोषीलाई यथाशीघ्र कानुनी दायरामा ल्याइनुपर्ने, द्वन्द्वको बेला जोगिएर समाचार संकलन गर्नुपर्ने, पत्रकार र सञ्चारमाध्यमको भौतिक सुरक्षा र दण्डहिनताको अन्त्य गर्नुपर्ने, प्रेस तथा अभिव्यक्ति स्वतन्त्रता हननका घटनाको तत्काल अभिलेखन, तथ्यांक विश्लेषण, प्रवृत्तिगत अध्ययन, अनुगमन, नियन्त्रण, उद्धार र कानुनी उपचारका लागि महासंघका जिल्ला शाखालाई अझ प्रभावकारी र क्रियाशील बनाइनुपर्ने, न्यूमिडियाको पछिल्लो विकासलाई ध्यानमा राखी अनलाइन पत्रकारितालाई स्वतन्त्र, जिम्मेवार एवं उत्तरदायी मूलधारको सञ्चारमाध्यमको रूपमा स्थापित गराइनुपर्ने, रौतहटमा तत्काल द्वन्द्व पत्रकारिता एवं पत्रकार आचारसंहितासम्बन्धी तालिम अनिवार्य रुपमा दिइनुपर्ने लगायत १५ बुँदे निश्कर्ष पेश गरिएको छ । टोलीले चैत २५ गते नै गौरमा पुगेर घटनाको स्थलगत अध्ययन, अनुसन्धान गर्नुका साथै घटनाका सम्बन्धमा स्थानीय सञ्चारकर्मी, प्रमुख जिल्ला अधिकारी, प्रहरी उपरीक्षक तथा नागरिक समाजका अगुवा र प्रतिनिधिलगायतका सरोकारवालाहरुसँग छलफल, अन्तर्क्रिया र अन्तरसंवाद गरी घटनाको सत्य, तथ्य र यथार्थ बुझ्ने काम गरेको थियो ।

परिच्छेद
४

# आचारसंहिता अनुगमन तथा अनुसन्धान

प्रेस काउन्सिल ऐन, २०४८ ले स्वस्थ पत्रकारिताको विकासका लागि पत्रकारितासम्बन्धी आचारसंहिता तयार गरी लागू गर्ने कार्यको जिम्मेवारी प्रेस काउन्सिल नेपाललाई दिएको छ । ऐनले प्रेस काउन्सिललाई पत्रकार एवं सञ्चारगृहले पत्रकार आचारसंहिता उल्लंघन गरेको अवस्थामा कारबाही गर्न सक्ने अधिकार पनि दिएको छ । काउन्सिलले आचारसंहिता पालनालाई प्रभावकारी बनाउन यसलाई समयानुकूल संशोधन र परिमार्जन गर्दै लागू गरेको छ ।

आचारसंहितालाई प्रभावकारी बनाउन काउन्सिलले प्रचारप्रसार, अन्तरक्रिया एवं मिडिया संवादजस्ता कार्यक्रम केन्द्र एवं मोफसलमा गर्दै आएको छ । केन्द्रीयस्तरमा मात्र सञ्चार माध्यमहरुमा आएको विविधतालाई संबोधन गर्न सहज नहुने स्थितिको दृष्टिगत गरी पत्रकार आचारसंहिताको अनुगमन प्रभावकारी बनाउनका लागि जिल्लातहमा समेत संयन्त्र खडा गरी अनुगमन कार्य अगाडि बढाइएको छ ।

पत्रकार आचारसंहिता उल्लंघनका विषयमा कसैले उजुरी दिएमा सोसम्बन्धमा छानबिन गर्न काउन्सिलले आचारसंहिता अनुगमन तथा संवाद उपसमिति गठन गरेको छ । यस उपसमितिले आचारसंहिता पालनाका सन्दर्भमा सम्बन्धित सञ्चारमाध्यमलाई ध्यानाकर्षण एवं सचेत गराउनेलगायतका कार्यहरू गर्दै आएको छ । दैनिक रुपमा आचारसंहिता अनुगमन गर्न एवं प्राप्त उजुरीहरुको आवश्यक कार्यान्वयन गर्न आचारसंहिता अनुगमन, अनुसन्धान तथा कानुन शाखा क्रियाशील रहेको छ ।

आ.व. २०७१/०७२ मा आचारसंहितासम्बन्धी उजुरी, स्वअनुगमन, बोधार्थ र तामेलीको विवरण निम्नानुसार छ :

| उजुरी | स्वअनुगमन | जम्मा | बोधार्थ | तामेली |
|---|---|---|---|---|
| ५१ | ३ | ५४ | २८ | १४ |

## cf= j= @)&!÷)&@ cl3sf ph'/Lx?

### १ ) नेपाल विद्यार्थी संघ, जिल्ला समिति, सोलुखुम्वु
### विरुद्ध
### हिमाल एफ. एम.:

नेपाल विद्यार्थी संघ, जिल्ला समिति, सोलुखुम्वुसँग सम्बन्धित समाचारहरु गलत, भ्रामक र अति पूर्वाग्रही ढंगबाट हिमाल एफएमले संप्रेषण गरेको भनी आवश्यक कारवाहीको लागि मिति २०७१।१।२३ गते प्रेस काउन्सिल नेपालमा दर्ता भएको उजुरी कार्यविधि पूरा नभएकोले सो कार्यविधि पूरा गर्न मिति २०७१।२।१ गते काउन्सिलबाट पत्राचार गरिएकोमा प्रक्रिया पूरा गरेर अर्को उजुरी प्राप्त नभएकोले आचारसंहिता अनुगमन उपसमितिको मिति २०७२ मंसिर ५ गतेको बैठकको निर्णयानुसार हिमाल एफ. एम. सोलुखुम्बुलाई पत्रकार आचारसंहिता पालनामा सजग रहन पत्राचार गरी उजुरी तामेलीमा राखिएको ।

## २) भारतीय राजदूतावास, क्याम्प अफिस, विराटनगर

### विरुद्ध

### न्यू सृष्टि दैनिकः

विराटनगरबाट प्रकाशित न्यू सृष्टि दैनिकले आफ्नो विषयमा पटक पटक भ्रामक समाचार प्रकाशित गरेको भनी भारतीय राजदूतावास, क्याम्प अफिस विराटनगरले मिति २०७०।४।२९ गते दिएको निवेदनमा काउन्सिलबाट खण्डन प्रकाशनार्थ न्यू सृष्टि दैनिकलाई पत्राचार र ताकेता गरिएकोमा त्यस दैनिकले पठाएको जवाफमा भारतीय राजदूतावास, क्याम्प अफिस, विराटनगरको तर्फबाट खण्डन प्राप्त नभएको व्यहोरा उल्लेख भएको; तत्पश्चात काउन्सिलमा प्राप्त खण्डन सहित प्रकाशनको लागि मिति २०७१/१०/२२ गते पत्राचार गरिएकोमा खण्डन प्रकाशन भए नभएको कुनै जानकारी प्राप्त नभएको हुँदा अवज्ञाकारीको सूचीमा राख्ने साथै उजुरीकर्ताको खण्डन प्रकाशन गर्न पुनः आदेश दिने र सो को जानकारी उजुरीकर्तालाई गराउने, आदेशको पालना नगरेमा थप कारवाही गर्ने निर्णयको व्यहोरा उल्लेख गरी निवेदक र पत्रिकालाई पत्राचार गरिएको ।

## ३) जगदम्बा स्टिल प्रा. लि.

### विरुद्ध

### सगरमाथा टेलिभिजन

सगरमाथा टेलिभिजनमा मिति २०७०।९।२२ गते प्रशारित “खोज खवर” कार्यक्रममा जगदम्बा स्टील प्रा. लि. तथा जगदम्बा ब्रण्डबारे आक्षेपयुक्त समाचार सम्प्रेषण एवं प्रशारण गरेको सम्बन्धमा खण्डन पठाउँदासमेत खण्डन प्रशारण नगरेकोले आवश्यक कारवाहीका लागि कम्पनीका मार्केटिङ स्यानेजर प्रभु आचार्यले मिति २०७०।११।९ गते दिनु भएको उजुरी निवेदनका सम्बन्धमा आवश्यक कारवाही भई मिति २०७०।११।१३ गते सगरमाथा टेलिभिजनलाई पत्र पठाई खण्डन प्रशारण गर्न नमिल्ने कुनै कारण भए ७ (सात) दिनभित्र आधार प्रमाणसहित जवाफ पेश गर्न, अन्यथा निवेदकको खण्डन प्रशारण गरी काउन्सिललाई जानकारी दिन भनिएकोमा, सो टेलिभिजनले मिति २०७०।११।२१ गते काउन्सिलमा दर्ता गराएको जवाफमा “कार्यक्रम सत्यतथ्यमा आधारित रहेको र समाचारको सत्यतामा संस्था विश्वस्त रहँदा रहँदै खण्डन गर्न कुनै जरुरी नरहेको” व्यहोरा उल्लेख भएकोले सो विषयमा आचारसंहिता अनुगमन उपसमितिको बैठकमा छलफल गरिंदा मिति २०७०।११।१३ को पत्रानुसारै अविलम्व खण्डन प्रशारण गर्न, निर्देशन पालना नभए नियमानुसार कारवाही गरिने व्यहोराको पत्राचार मिति २०७१।१।१९ गते र मिति २०७१।०६।०५ गते पुनः निर्देशन गरिएकोमा सगरमाथा टेलिभिजनले मिति २०७१/०६/२९ गते दर्ता गराएको जवाफमा खण्डन प्रकाशन गर्न जरुरी नरहेको उल्लेख भएकोले उक्त उजुरी कारवाही प्रकृयामा रहेको ।

## ४) राम गिरी

### विरुद्ध

### क्राइम टुडे मासिक

क्राइम टुडे मासिक पत्रिकाले विभिन्न अंकहरुमा भ्रामक, कपोलकल्पित र भ्रामक समाचार प्रकाशित गरी आफ्नो चरित्रहत्या गरेको र पत्रिकाका सम्पादकलाई खण्डन प्रकाशित गर्न पत्राचार गरेकोमा खण्डन प्रकाशित नगरेकोले आवश्यक कारवाहीको लागि मिति २०७०।४।१४ गते राम गिरीले दिनुभएको उजुरी सम्बन्धमा काउन्सिलबाट आवश्यक कारवाही भई क्राइम टुडे मासिकका प्रकाशक र सम्पादकको नाम तथा विवरण पठाउन अनुरोध गरी जिल्ला प्रशासन कार्यालय, काठमाडौं र सूचना विभागमा मिति २०७०।४।१७ गते पत्राचार गरी क्राइम टुडे मासिकका तर्फबाट प्रेस पास लिएकाहरुको विवरण मागिएकोमा विवरण प्राप्त नभएकोले सो उजुरी प्रक्रियामा रहेको ।

## ५) ज्योति अधिकारी

### विरुद्ध

### इन्भेष्टिगेशन राष्ट्रिय साप्ताहिकः

इन्भेष्टिगेशन राष्ट्रिय साप्ताहिकः इन्भेष्टिगेशन राष्ट्रिय साप्ताहिकले २०७० साल माघ ७ गते प्रकाशित अंकमा “हत्यारालाई राजनैतिक संरक्षण” शिर्षकमा तथ्यहीन र भ्रामक समाचार प्रकाशन गरी आफ्नो चरित्रहत्या गरेको र खण्डन पठाउँदासमेत प्रकाशन नगरेको भनी आवश्यक कारवाहीका लागि इको ट्रेक इन्टरनेसनल प्रा.लि. का अध्यक्ष ज्योति अधिकारीले काउन्सिलसमक्ष मिति २०७० साल माघ २२ गते दिएको निवेदनका सम्वन्धमा खण्डन प्रकाशनार्थ काउन्सिलबाट पटक-पटक पत्राचार गरिएको र पत्रिकाले कारवाहीको प्रतिरोध गर्नुको विकल्प नभएको जवाफ पठाएको हुँदा आचारसंहिता अनुगमन उपसमितिको मिति २०७२ असार ०२ गतेको बैठकमा छलफल हुँदा पत्रिकालाई पत्रकार आचारसंहिता २०६० (संशोधित तथा परिमार्जित २०६४) को दफा ६(२) बमोजिम अवज्ञाकारीको सूचीमा राख्ने निर्णय भएको ।

## ६) दिलशोभा श्रेष्ठ

### विरुद्ध

### नागरिक दैनिक :

समाजसेवी दिलशोभा श्रेष्ठलाई जोडेर नागरिक दैनिकले प्रकाशन गरेको यौन दुराचार सम्बन्धी समाचार सार्वजनिक सरोकारको विषय बनेको; सो समाचार सामग्रीबाट पत्रकारिता पेशाका मूल्य, मान्यता र पत्रकारले अवलम्वन गर्नुपर्ने आचारसंहिताको उल्लंघन भएको प्रश्न पनि उठिरहेको तथा सो सन्दर्भमा पत्रकारले पालना गर्नुपर्ने आचारसंहिता परिमार्जन गर्नुपर्ने प्रतिक्रियासमेत विभिन्न कोणबाट आइरहेकोले समग्र पत्रकार आचारसंहिताको समयानुकूल परिमार्जन तथा प्रभावकारिताको लागि के, कस्तो व्यवस्था गर्न उचित र आवश्यक हुन्छ ? तत्सम्बन्धमा अध्ययन, अनुसन्धान गरी राय तथा सुझाव पेश गर्न सर्वोच्च अदालतका पूर्व रजिष्ट्रार श्री रामकृष्ण तिमल्सेनाको संयोजकत्वमा त्रिभुवन विश्वविद्यालयका सह-प्राध्यापक श्री प्रवलराज पोखरेल र प्रेस इन्स्टिच्यूटकी सदस्य श्री शोभा गौतम सदस्य तथा प्रेस काउन्सिल नेपालका उपप्रशासकीय अधिकृत दिपक खनाल सदस्य सचिव रहनुभएको “पत्रकार आचारसंहिता सुझाव कार्यदल - २०७०” गठन भएको, सो कार्यदलले आफ्नो प्रतिवेदन मिति २०७१/०२/१४ गते काउन्सिलका अध्यक्षज्यूसमक्ष बुझाएको । प्रतिवेदन समेतको आधारमा नागरिक दैनिकको संपरीक्षण अंकमा नकारात्मक ५ अङ्क दिने भनी दिएको काउन्सिलको सो निर्णय बदर गर्न आग्रह गर्दै नागरिक दैनिकको तर्फबाट निवेदन दर्ता भएकोमा सो निवेदन प्रकृयामा रहेको ।

## ७) महम्मद सहाबुद्धिन

### विरुद्ध

### वीरगञ्ज समाचारत्र दैनिक

नेपाली काँग्रेस, पर्सा, वीरगञ्जका नगर सभापति महम्मद सहाबुद्धिनले वीरगञ्जबाट प्रकाशित हुने वीरगञ्ज समाचारपत्र दैनिकले पटक-पटक आफूलाई भारतीय नागरिक भएको शीर्षक राखी समाचार सम्प्रेषण गर्दै आएकोले आवश्यक कारवाहीको लागि मिति २०७०।२।१३ गते दिनुभएको उजुरीको सम्बन्धमा काउन्सिलबाट पत्राचार गरिंदा वीरगञ्ज समाचारपत्रले पठाएको जवाफमा सो समाचारबारे पर्सा जिल्ला अदालतमा गाली बेइज्जती मुद्दा विचाराधीन रहेको जानकारी आएको, सोसम्बन्धमा पर्सा जिल्ला अदालतमा काउन्सिलबाट पत्राचार गरिएकोमा गाली बेइज्जती मुद्दा फैसला भइसकेको किर्ते पत्र प्राप्त भई अदालतसँग यथार्थ बुझ्ने काम भइरहेको। सम्बन्धित पत्रिकालाई आ.व. ०७०।७१ को वर्गीकरणबाट हटाइएको ।

## ८) प्रेमप्रसाद खनाल
### विरुद्ध
### नयाँ पत्रिका समेत अन्य

जिल्ला बन कार्यालय, नुवाकोटका जिल्ला अधिकृत प्रेमप्रसाद खनालले नयाँ पत्रिका, दृष्टि, नुवाकोटबाट प्रकाशित हुने त्रिशुली खवर साप्ताहिक समेतले आफ्नो बिरुद्ध कपोलकल्पित र भ्रामक समाचार सम्प्रेषण गरी व्यक्तिगत तवरबाट मानहानी र अपमान गरेको भनी मिति २०७०।२।१ गते काउन्सिलसमक्ष दिनुभएको उजुरीका सम्बन्धमा पत्रकार आचारसंहिता - २०६० (संशोधित तथा परिमार्जित - २०६४ ) को दफा ५ बमोजिमको कार्यविधि पूरा नगरेकोले सम्बन्धित पत्रिकाको सम्पादकलाई संबोधन गरी खण्डन वा गुनासो पठाउन पत्र पठाइएकोमा कार्यविधि पूरा गरेर अर्को उजुरी प्राप्त नभएकोले आचारसंहिता अनुगमन उपसमितिको मिति २०७१ कार्तिक २० गतेको बैठकले थप केही गरिरहन नपर्ने निर्णय गरेको ।

## ९) धनबहादुर बुढा
### विरुद्ध
### रोल्पा टाइम्स राष्ट्रिय दैनिक

रोल्पा टाइम्स राष्ट्रिय दैनिकले “स्वास्थ्य केन्द्र तीन महिनादेखि डाक्टरबिहीन” शीर्षक राखी कपोलकल्पित र भ्रामक समाचारमार्फत् चरित्र हत्या गरेकोले आवश्यक कारवाही गरिपाऊँ भनी मिति २०७०।३।३० गते काउन्सिलसमक्ष दिएको उजुरी निवेदनमा पत्रकार आचारसंहिता - २०६० ( संशोधित तथा परिमार्जित - २०६४ ) को दफा ५ को कार्यविधि पूरा नभएकोले आवश्यक प्रक्रिया पूरा गर्न मिति २०७०।४।०१ गते पत्राचार गरिएको कार्यविधि पूरा गरेर अर्को उजुरी नआएकोले आचारसंहिता अनुगमन उपसमितिको मिति २०७१ कार्तिक २० गतेको निर्णयानुसार रोल्पा टाइम्स राष्ट्रिय दैनिकलाई आचारसंहिता पालनामा सजग रहन पत्राचार गरी सो उजुरी तामेलीमा राखिएको ।

## १०) दिपकराज पाण्डे

### विरुद्ध

### मासिक सम्पत्ति आर्थिक पत्रिका :

मासिक सम्पत्ति आर्थिक पत्रिका बर्ष १२, अंक ११, २०७० जेष्ठको अंकमा 'बाणिज्य तथा आपूर्ति सचिव'को आतंक जारी शीर्षक समाचारबाट सरकारी निकायका उच्च पदाधिकारीको चरित्रहत्या भएको भनी बाणिज्य तथा आपूर्ति मन्त्रालयबाट मिति २०७०।२।१३ गते काउन्सिलमा प्राप्त पत्रका सम्बन्धमा आवश्यक कारवाही भई पत्रकार आचारसंहिता-२०६० (संशोधित तथा परिमार्जित - २०६४) को दफा ५ को कार्यविधि पूरा नभएकोले आवश्यक कार्यविधि पूरा गरी आउन बाणिज्य तथा आपूर्ति मन्त्रालय, सिंहदरवारलाई मिति २०७०।४।०१ गते पत्राचार गरिएकोमा प्रकृया पूरा गरी अर्को पत्र प्राप्त नभएकोले मासिक सम्पत्ति आर्थिक पत्रिकालाई आचारसंहिता पालनामा सजग रहन पत्राचार गरी सो उजुरी आचारसंहिता अनुगमन उपसमितिको मिति २०७१ कार्तिक २० गतेको निर्णयानुसार तामेलीमा राखिएको ।

## ११) लालकुमारी खड्का

### विरुद्ध

### साप्ताहिक गोलमेच र अभियान टाइम्स साप्ताहिक

महानगरीय प्रहरी परिसर ललितपुरका प्रहरी नायव निरीक्षक लालकुमारी खड्काले मिति २०७०।५।२८ गते साप्ताहिक गोलमेच पत्रिकाको प्रथम पृष्ठमा "पीडित महिला सईद्वारा झन पीडित" शीर्षकको समाचार र २०७०।५।२० गतेको अभियान टाइम्स साप्ताहिकमा प्रकाशित "परिसर भित्रै दलाली" शीर्षकमा महिला प्रहरी र राष्ट्रसेवकको नैतिक एवं व्यक्तिगत आचरण समेतमा आँच पुऱ्याएको र सम्बन्धित पत्रिकालाई खण्डन पठाउँदासमेत प्रकाशित नगरेकोले आवश्यक कारवाहीका लागि मिति २०७०।६।३ गते दर्ता गराउनु भएको उजुरी निवेदनमा आवश्यक प्रक्रिया पूरा नभएकोले प्रक्रिया पूरा गरी आउन २०७०।६।१० गते पत्राचार गरिएकोमा अर्को उजुरी प्राप्त नभएको आचारसंहिता अनुगमन उपसमितिको मिति २०७१ श्रावण २३ गतेको बैठकमा छलफल हुँदा थप केही गरिरहन नपर्ने निर्णय भएको ।

## १२) विश्वेन्द्र पासवान

### विरूद्ध

### जनआस्था साप्ताहिक समेत ४ (चार) :

दलित जनजाति पार्टीका अध्यक्ष तथा संविधानसभाका सदस्य विश्वेन्द्र पासवानले आफ्नो चरित्रहत्या गरी २०७० साल माघ २९ गतेको जनआस्था साप्ताहिक, फागुन १५ गतेको रातोपाटी डटकम, फागुन १६ गतेको जनआह्वान साप्ताहिक र फागुन १८ गतेको राजतिलक साप्ताहिकले भ्रामक समाचार प्रकाशित गरेकोले आवश्यक कारवाही गरी पाउँ भनी मिति २०७० साल फागुन २० गते दर्ता गराउनु भएको उजुरी निवेदनका सम्बन्धमा पत्रकार आचारसंहिता २०६० को दफा - ५ अनुसारको कार्यविधि पूरा गरेको नदेखिएकोले सो कार्यविधि पूरा गरी आउन पत्राचार गरिएकोमा प्रकृया पूरा गरेर अर्को उजुरी प्राप्त नभएको सम्बन्धमा आचारसंहिता अनुगमन उपसमितिको मिति २०७१ श्रावण २३ गतेको  बैठकमा छलफल हुँदा थप केही गरिरहन नपर्ने निर्णय गरिएको ।

## १३) सु–सन्देश साप्ताहिक

### विरूद्ध

### नवक्षितिज साप्ताहिक समेत ३

सु-सन्देश साप्ताहिकका प्रकाशक तथा सम्पादक यदुनाथ गौतमले मिति २०७०।१२।११ मा आफ्नो पत्रिकामा  विभिन्न मिति र अंकमा प्रकाशित शीर मेमोरियल अस्पतालसँग सम्बन्धित समाचारका सम्बन्धमा नवक्षितिज साप्ताहिक, नयाँ सञ्चार दर्शन साप्ताहिक तथा काभ्रे टाइम्स साप्ताहिकमा प्रायोजित विज्ञप्तिमार्फत समाचार खण्डन गरी पत्रकारले पालना गर्नुपर्ने आचारसंहिताको उल्लंघन भएकोले आवश्यक कारवाहीका लागि प्रेस काउन्सिल नेपालमा उजुरी दिनुभएको सम्बन्धमा आचारसंहिता अनुगमन उपसमितिको मिति २०७१ वैशाख ८ गतेको बैठकमा छलफल भई यस्तो विषयमा काउन्सिलबाट नीतिगत निर्णय नभइसकेकोले नीति बनाउने  निर्णय भएकोले सो निर्णयको जानकारी पनि निवेदकलाई दिईएको । सो सम्बन्धमा पुनः आचार संहिता अनुगमन उपसमितिको मिति २०७१ श्रावण २३ गतेको बैठकमा  छलफल हुँदा सो समाचार विज्ञापनको रुपमा प्रकाशित गर्ने तीनवटै पत्रिकालाई पत्रकार आचारसंहिता – २०६० (संशोधित तथा परिमार्जित – २०६४) ४ (१२) बमोजिम विज्ञापनलाई समाचारका रुपमा प्रकाशन गर्न नहुनेतर्फ ध्यानाकर्षण गराउने साथै उजुरीकर्ता सु–सन्देश साप्ताहिकका प्रकाशक/सम्पादकलाई एउटै विषयसँग सम्वन्धित समाचार विभिन्न अंकमा नियमितरुपमा प्रकाशित गरेको , प्रस्तुत समाचार सत्य,तथ्य र सन्तुलित भएको नदेंखिदा सत्य,तथ्य र सन्तुलितरुपमा समाचार प्रकाशन गर्न निर्देशन दिने साथै पत्रकार आचारसंहितामा यस उजुरीसँग सम्वन्धित यस्ता  विषयमा थप स्पष्ट पार्नुपर्ने देखिएको हुँदा पत्रकार आचारसंहिता संशोधन/परिमार्जनको समयमा विषय उठान गर्ने निर्णय भएको ।

## १४)   डा. अजय साह
### विरुद्ध
### अपडेट जनकपुर :

जनकपुरबाट निस्कने पत्रिका अपडेट जनकपुरको २०७० पौष ३० गतेको अंकमा प्रकाशित "सर्वसाधारणलाई झुक्याउँदै चेम्बर्स, छुट्टै अनुगमन हुने" शीर्षकको समाचारविरुद्ध डा. अजय साहले मिति २०७१।३।१८ गते काउन्सिलमा दर्ता गराउनुभएको उजुरी निवेदनमा काउन्सिलबाट अपडेट जनकपुरलाई पत्राचार र ताकेता गरिएकोमा पत्रिकाको तर्फबाट कुनै जवाफ प्राप्त नभएको, अवज्ञाकारीको सूचीमा राख्ने साथै उजुरीकर्ताको खण्डन प्रकाशन गर्न पुनः आदेश दिने र सोको जानकारी उजुरीकर्तालाई गराउने निर्णय भएको ।

## १५)   पार्वती थापामगर
### विरुद्ध
### तरुण साप्ताहिक

नेपाल प्रहरीकी नायव महानिरीक्षक पार्वती थापामगरले, मिति २०७०।५।१० गतेको तरुण साप्ताहिकले "आईजीपी खोज्दै भोजनगृहमा" शीर्षकमा प्रकाशित गरेको समाचारबाट आफ्नो चरित्रहत्या भएको र खण्डन पठाउँदा पनि प्रकाशित नगरेकोले आवश्यक कारवाहीका लागि मिति २०७०।५।१९ गते दर्ता गराउनुभएको उजुरी निवेदनका सम्बन्धमा काउन्सिलबाट खण्डन प्रकाशनार्थ पत्राचार गरिएकोमा तरुण साप्ताहिकले खण्डन प्रकाशित भैसकेको जानकारी गराएको हुँदा सोही व्यहोरा निवेदकलई जानकारी गराइएको ।।

## १६)   नारायण जोशी
### विरुद्ध
### बल्देव सिंह धामी :

दार्चुला एफ.एम. का पत्रकार बलदेव सिंह धामीले सामाजिक सञ्जालमार्फत झुठो विवरण सार्वजनिक गरी संस्थाको प्रतिष्ठामा आँच पुर्‍याउने काम गरेकोले आवश्यक कारवाहीको लागि संकल्प-दार्चुला नामक संस्थाका संयोजक नारायण जोशीद्वारा फ्याक्समार्फत मिति २०७१।२।११ गते काउन्सिलमा दर्ता भएको उजुरी निवेदनका सम्वन्धमा पत्रकार आचारसंहिता - २०६० (संशोधित तथा परिमार्जित - २०६० ) को दफा - ५ अनुसार आउन पत्राचार गरिएको तर प्रक्रिया पूरा गरेर अर्को उजुरी नआएकोले आचारसंहिता अनुगमन उपसमितिको मिति २०७१ कार्तिक २० गतेको बैठकमा छलफल हुँदा थप केही गरिरहन नपर्ने निर्णय भएको ।

## १७) नेशनल मल्टिपल कलेज

### विरुद्ध

### रिपब्लिका दैनिक

रिपब्लिका दैनिकको website मा प्रकाशित newsnepalnabin.blogspot.com/2011/05 नाम राखी Students accuse college chairman of sexual harassment शीर्षकको समाचारबाट आफ्नो कलेजको प्रतिष्ठा एवं मर्यादामा आघात पुगेको र सो सम्बन्धमा खण्डन पठाउँदासमेत खण्डन प्रकाशित नगरेकोले आवश्यक कारवाहीको लागि नेशनल मल्टिपल कलेजका प्रशासन प्रमुखले मिति २०७०।४।२२ गते दर्ता गराउनुभएको उजुरीका सम्बन्धमा काउन्सिलबाट आवश्यक कारवाही भई रिपब्लिका दैनिकलाई पत्राचार गरिएकोमा मिति २०७१/०८/२२ गते रिपब्लिका दैनिकको तर्फबाट जवाफ प्राप्त भएको। आचारसंहिता अनुगमन उपसमितिको बैठकमा छलफल हुँदा आचारसंहिता सम्बन्धी पत्रको जवाफ सम्पादक वा सम्पादकीय समूहका व्यक्तिहरुबाट नआएकोले ७ (सात) दिनभित्र जवाफ पेश गर्न मिति २०७१/१०/२६ गते काउन्सिलबाट पत्राचार गरिएकोमा रिपब्लिका दैनिकका सम्पादक सुभाष घिमिरेले उजुरीमा उल्लेख गरेअनुसारको वेवसाइट/व्लग रिपव्लिका दैनिकको नभएको र काउन्सिलमा गरिने पत्राचार सम्पादक समूहबाट नै गर्ने गराउने जानकारी गराएको ।

## १८) पार्वती थापामगर

### विरुद्ध

### दृष्टि साप्ताहिक

मिति २०७०।४।२९ गतेको दृष्टि साप्ताहिकमा प्रकाशित “आईजीको सुराकीमा डिआईजी” शीर्षक र २०७०।५।४ गतेको दृष्टि साप्ताहिकमा प्रकाशित “प्रचण्डको ओत पाएपछि पार्वती” शीर्षकको समाचारबाट आफूलाई मानसिक पीडा पुगेको र विभिन्न मितिमा समाचारको खण्डन गर्न लिखित आग्रह गर्दासमेत खण्डन प्रकाशित नगरेको भनी नेपाल प्रहरीका नायव महानिरीक्षक पार्वती थापामगरले मिति २०७०।५।११ गते काउन्सिलसमक्ष दिनुभएको उजुरी निवेदनका सम्बन्धमा काउन्सिलबाट दृष्टि साप्ताहिकको नाममा खण्डन प्रकाशनार्थ पत्राचार गरिएकोमा दृष्टि साप्ताहिकले निवेदकको खण्डन प्रकाशन भैसकेको जवाफ पेश गरेको हुँदा सोही व्यहोरा उजुरीकर्तालाई जानकारी गराइएको ।

## १९) राजेशमान सिंह श्रेष्ठ
## विरुद्ध
## आलिशान राष्ट्रिय दैनिक :

राष्ट्रिय मधेशवादी पार्टीको केन्द्रीय सदस्य राजेशमान सिंहको बारेमा आलिशान दैनिकको विभिन्न अंकमा कपोलकल्पित र आपत्तिजनक तथ्यहरु उल्लेख गरी चरित्र हत्या गर्ने उद्देश्यले समाचार र फोटोसमेत प्रकाशन गरेको र विभिन्न मितिमा पत्र पठाएकोमा खण्डन पनि प्रकाशन नगरेकोले आवश्यक कारवाही गरी पाऊँ मिति २०७१।३।२२ गते दर्ता गराउनु भएको उजुरी-निवेदनका सम्बन्धमा काउन्सिलबाट खण्डन प्रकाशनार्थ पत्राचार र ताकेता गरिएको, आलिशान दैनिकको तर्फबाट कुनै जवाफ प्राप्त नभएकोले आचारसंहिता अनुगमन उपसमितिको मिति २०७२ असार २४ गतेको बैठकको निर्णयानुसार निवेदकको खण्डन अविलम्ब प्रकाशित गरी काउन्सिललाई जानकारी दिन, अन्यथा अवज्ञाकारीको सूचीमा राखी थप कारवाही गरिने व्यहोरा सहित आलिशान दैनिकलाई पत्राचार गरिएको ।

## २०) डिमी शेर्पा
## विरुद्ध
## हिमगाथा राष्ट्रिय साताहिक

मिति २०७१ साल असार १६ गते सोमवारको हिमगाथा राष्ट्रिय साप्ताहिकमा शेर्पा महिला संघकी उपाध्यक्ष पेसी शेर्पाको अन्तरवार्तामा आफू र आफ्नो संस्थाको बारेमा गलत सामग्री प्रकाशित गरी भ्रम सिर्जना गरेको पत्रिकाका सम्पादकलाई खण्डन प्रकाशन गर्न लिखित आग्रह गर्दासमेत बेवास्ता गरेको आवश्यक कारवाही गरी पाऊँ भनी नेपाल शेर्पा महिला संघकी अध्यक्ष डिमा शेर्पाले मिति २०७१ साल असार २४ गते प्रेस काउन्सिल नेपालमा दर्ता गराउनु भएको उजुरीका सम्बन्धमा आवश्यक कारवाही भई हिमगाथा साप्ताहिकलाई खण्डन प्रकाशन गर्न पत्राचार गरिएकोमा खण्डन समाचार प्रकाशित गर्नेबारे आफ्नो ध्यानाकर्षण भएको जानकारीसहितको पत्र काउन्सिललाई २०७१ साल असार २९ गते प्राप्त भएको । आचारसंहिता अनुगमन उपसमितिको मिति २०७१ श्रावण २३ गतेको बैठकमा छलफल हुँदा विषयवस्तुको गम्भीरतालाई समेत मध्यनजर गर्दै समय मिलाई उजुरवाला र आरोपित पक्ष दुवैलाई काउन्सिलमा झिकाई छलफल गर्ने निर्णय भएको ।

## २१. सुसन सर्जन रामदाम
## विरुद्ध
## तिलहरी साप्ताहिकः

तिलहरी साप्ताहिक आफ्नो चरित्रहत्या हुने गरी भ्रामक र कपोलकल्पित समाचार प्रकाशित गरेको र पत्रिकाका सम्पादकलाई खण्डनको लागि लिखित निवेदन पठाउँदासमेत बेवास्ता गरेका कारण आवश्यक कारवाहीको लागि प्रेस काउन्सिल नेपालमा मिति २०७० साल असार २१ गते उजुरी निवेदन दिनु भएकोमा सो साप्ताहिकले मिति २०७० साल साउन ७ गते खण्डन प्रकाशन नगर्ने लिखित जवाफ दिएपछि २०७१ कार्तिक २० गतेको  बैठकबाट दुवै पक्षलाई झिकाई छलफल गर्ने निर्णय भएको ।

## २२) महेन्द्रप्रसाद साह
## विरुद्ध
## विश्वजागरण दैनिकः

विश्वजागरण दैनिकः हलवाई समाज सेवा समितिका अध्यक्ष महेन्द्रप्रसाद साहले आफू र आफ्नो संस्थाका पदाधिकारीहरुको विषयमा विश्वजागरण दैनिकको मिति २०७० साल साउन १० गतेको अंकमा गलत र पूर्वाग्रहपूर्ण समाचार प्रकाशन भएको र खण्डन पठाउँदा पनि प्रकाशित नगरेका भनी २०७० साल साउन २८ गते काउन्सिलमा दिनुभएको उजुरी निवेदनका सम्वन्धमा कारबाही चल्दै जाँदा २०७२ असार २४ गतेको  बैठकबाट विश्वजागरण दैनिकलाई पत्रकार आचारसंहिता २०६० (संशोधित तथा परिमार्जित २०६४) को दफा ६(२) बमोजिम अवज्ञाकारीको सूचीमा राख्ने साथै उजुरीकर्ताको खण्डन प्रकाशन गर्न पुनः आदेश दिने र आदेशको पालना नगरेमा थप कारवाही गर्ने  निर्णयानुसारको व्यहोरा उल्लेख गरी पत्राचार गरिएको ।

## २३ ) मानव अंग प्रत्यारोपण केन्द्र
## विरुद्ध
## www. swasthyakhabar.com

मिति २०७१।१।७ गतेको www.swasthyakhabar.com (स्वास्थ्य खवर डट कम) मा प्रकाशित “मानव अङ्ग प्रत्यारोपण केन्द्रमा अनियमितता” शीर्षकमा झुट्टा विवरणहरु गरी सर्वसाधारणलाई भ्रमित पार्ने काम गरेकोले आवश्यक कारवाहीको लागि प्रेस काउन्सिल नेपालमा मिति २०७१।१।१५ गते दर्ता गराउनुभएको उजुरी निवेदनका सम्बन्धमा  उपसमितिमा छलफल हुँदा कार्यविधि पूरा नभएकोले सो कार्यविधि पूरा गर्न मिति २०७१।२।१ गते काउन्सिलबाट पत्राचार गरिएकोमा अर्को उजुरी नआएकोले उक्त उजुरी तामेलीमा राखिएको ।

**२४)   टिका पनेरु र यादव जोशी**

**विरुद्ध**

topnepalnews.com:

वीर अस्पतालका सि. अ.हे.व. टिका पनेरु र अ.हे.व.यादव जोशीले मिति २०७० श्रावण २५ गतेको topnepalnews.com मा प्रकाशित समाचारले आफ्नो चरित्रहत्या भएकोले आवश्यक कारवाहीका लागि प्रेस काउन्सिल नेपालमा मिति २०७०।४।२८ गते दिनु भएको उजुरी निवेदन कारवाहीको प्रक्रियामा रहेको ।

**२५ )   बीरेन्द्रबहादुर बस्नेत**

**विरुद्ध**

reportsnepal.com :

बुद्ध एयर प्रा. लि., जावलाखेल -४, ललितपुरका प्रबन्ध निर्देशक बीरेन्द्रबहादुर बस्नेतले, २०७१।२।२९ गतेको reportsnepal.com मा मुखपृष्ठको बिविध शीर्षकमा झुट्ठा समाचार प्रकाशन गरेको र खण्डन पनि प्रकाशन नगरेकोले आवश्यक कारवाहीका लागि मिति २०७१।३।१३ गते काउन्सिलमा दर्ता गराउनु भएको उजुरी निवेदनका सम्बन्धमा काउन्सिलबाट पत्राचार र ताकेता गरिएको, जवाफ प्राप्त नभएको सम्बन्धमा आचारसंहिता अनुगमन उपसमितिको मिति २०७२ असार २४ गतेको बैठकमा छलफल हुँदा अनलाइन पत्रिकालाई पत्रकार आचारसंहिता २०६० (संशोधित तथा परिमार्जित २०६४) को दफा ६(२) बमोजिम अवज्ञाकारीको सूचीमा राख्ने साथै उजुरीकर्ताको खण्डन प्रकाशन गर्न पुन: आदेश दिने र सोको जानकारी उजुरीकर्तालाई गराउने निर्णय भएकोले सोही व्यहोरा उल्लेख गरी उजुरी कर्ता र अनलाइन पत्रिकालाई पत्राचार गरिएको ।

**२६ )   पार्वती खड्का**

**विरुद्ध**

**कृष्ण सुवेदी :**

नेपाल पत्रकार महासंघ, हिमालय टाइम्स शाखा सदस्य कृष्ण सुवेदीले सामाजिक सञ्जाल फेसबुकमार्फत् आफ्नो चरित्र हत्या हुने गरी घृणित र कपोलकल्पित शद्बहरु प्रयोग गरी समाचार प्रकाशन गरेकोले आवश्यक कारवाहीका लागि मुनलाईट इन्टरनेशनल प्रा. लि. का सञ्चालक पार्वती खड्काले मिति २०७१।२।५ गते काउन्सिलमा दर्ता गराउनु भएको उजुरी प्रक्रियामा रहेको ।

## २७ ) हरिप्रसाद उप्रेती

**विरुद्ध**

onlinekhabar.com :

चितवनबाट प्रकाशित जोश साप्ताहिक पत्रिकाले २०७१ बैशाख २० गतेको onlinekhabar.com मा आफूविरुद्ध झुट्टा समाचार प्रकाशन भएको र खण्डन पनि प्रकाशन नगरेको भनी सम्पादक हरिप्रसाद उप्रेतीले मिति २०७१।२।१४ गते दर्ता गराउनु भएको सम्बन्धमा काउन्सिलबाट पत्राचार र ताकेता गरिएकोमा onlinekhabar.com को तर्फबाट मिति २०७२/०३/१८ मा इमेलबाट प्राप्त पत्रमा २०६८ सालमा प्रेस काउन्सिलको हुबहुमा परी नसुध्रने पत्रिकाको सूचीको क्रमसंख्या ८ मा जोश साप्ताहिकको नाम उल्लेख रहेकोले सत्य समाचारको खण्डन गरिराख्नु नपर्ने, साथै उक्त पत्रिकाले हाल पनि अनलाइन खवर डट कम लगायत विभिन्न अनलानइनहरुको समाचार प्रकाशित गरिरहेकोले छानविनको लागि अनुरोध गरिएको । सो जवाफको सम्बन्धमा आचारसंहिता अनुगमन उपसमितिको मिति २०७२ असार २४ गतेको वैठकमा छलफल हुँदा अनलाइन खवर डटकमको जवाफको व्यहोरा उल्लेख गरी निवेदकलाई पत्राचार गरिएको ।

# cf= a= @)&!÷)&@ df k|Kt ph'/Lx?sf] cj:yf

## १) श्री दिपज्योती प्राथमिक विद्यालय (नवलपरासी)

**विरुद्ध**

**एभिन्यूज टेलिभिजन :**

नवलपरासी जिल्लाको अमरापुरी - २ स्थित दिपज्योती प्राथमिक विद्यालयमा भ्रष्टाचार गरी आर्थिक हिनामिना गरेको भनी एभिन्यूज टेलिभिजनले मिति २०७१/०८/०८ मा प्रशारण गरेको समाचारबाट आफ्नो चरित्रहत्या भएकोले एभिन्यूज टेलिभिजन र संवाददाता टिकाराम गैरेसमेतलाई आवश्यक कारवाहीको लागि प्रधानाध्यापक राजकुमार श्रेष्ठले मिति २०७१/०९/०१ गते काउन्सिलमा दर्ता गराउनु भएको उजुरीमा पत्रकार आचारसंहिता - २०६० (संशोधित तथा परिमार्जित - २०६४ ) को दफा - ५ अनुसारको कार्यविधि पूरा गरेको नदेखिएकोले पत्राचार गरिएकोमा अर्को उजुरी प्राप्त नभएको र कार्यविधि पूरा गरी आएमा आवश्यक प्रकृया अगाडि बढाउन सकिने निर्णय भएको ।

## २) राधारमण भण्डारी (श्याम), कार्यकारिणी सचिव, मोरङ व्यापार संघ

### विरुद्ध

### न्यू सृष्टि दैनिकः

न्यू सृष्टि दैनिकमा मिति २०७०/११/१० गतेदेखि निरन्तर श्रोतविहिन र चरित्र हत्या गर्ने समाचार आएकोले आवश्यक कारवाहीको लागि मोरङ व्यापार संघका कार्यकारिणी सचिव श्री राधारमण भण्डारी (श्याम) ले मिति २०७१/०५/३० गते दर्ता गराउनुभएको उजुरीमा पत्रकार आचारसंहिता - २०६० (संशोधित तथा परिमार्जित - २०६४) को दफा - ५ अनुसारको कार्यविधि पूरा गरेको नदेखिएकोले २०७१/०६/२८ गते काउन्सिलबाट पत्राचार गरिएको, कार्यविधि पूरा गरी अर्को उजुरी प्राप्त नभएकोले, २०७२ असार २४ गतेको बैठकमा छलफल हुँदा कार्यविधि पूरा गरी आएमा आवश्यक प्रकृया अगाडी बढाउन सकिने निर्णय भएको ।

## ३) लोकमान लोहिया

### विरुद्ध

### स्वतन्त्र विराट साप्ताहिकः

२०७१ श्रावण ३० गते “स्वतन्त्र विराट” साप्ताहिकको “मारवाडी महिला मञ्चका सदस्य नै अनैतिक कार्यमा” शीर्षक समाचारमा श्रोत र आधार केही उल्लेख नभएको, यसबाट मान प्रतिष्ठा, पारिवारिक जीवन र अस्मितामाथि खेलवाड भएको र खण्डन प्रकाशन गर्न पत्र पठाएकोमा सोको समेत सुनुवाइ नभएको भनी लोकमान लोहियाले मिति २०७१।५।२९ गते दर्ता गराउनुभएको उजुरी बारे काउन्सिलबाट २०७१।०६ ।०५ गते सम्वन्धित पत्रिकालाई यथार्थ जानकारी दिन भनिएकोमा मिति २०७१ भाद्र ६ गतेको अंकमा खण्डन प्रकाशन भैसकेको पत्र आएकोले क्षमायाचनासहित खण्डन प्रकाशित गरेकोमा सम्बन्धित पत्रिकालाई धन्यवाद दिने निर्णय भएको ।

## ४) रचना पोद्धार

## विरुद्ध

## स्वतन्त्र विराट साप्ताहिकः

स्वतन्त्र विराट साप्ताहिकको मिति २०७१ श्रावण ३० गते शुक्रबारको अङ्कको प्रथम पृष्ठमा "मारवाडी महिला मञ्चका सदस्य नै अनैतिक कार्यमा" शीर्षकमा प्रकाशित समाचार कपोलकल्पित एवं आधारहीन भएको र त्यसबाट आम नेपाली मारवाडी समुदायको मानमर्दन गरेकोले आवश्यक कारवाहीका लागि रचना पोद्धारले मिति २०७१/०६/१२ गते दर्ता गराउनुभएको उजुरी कार्यविधि पूरा गरेको नदेखिएकोले सो कार्यविधि पूरा गर्न २०७१/०६/२३ गते पत्राचार गरिएको प्रक्रिया पूरा गरेर अर्को उजुरी प्राप्त नभएकोले मिति २०७१ मंसीर ५ गतेको बैठकमा छलफल हुँदा उजुरीका सम्बन्धमा स्वतन्त्र विराट साप्ताहिकलाई जानकारी दिई पत्रकार आचारसंहिता पालनामा सजग रहन पत्राचार गरिएको ।

## ५) अन्नपूर्णा मानन्धर

## विरुद्ध

## आलिशान दैनिकः

आलिशान दैनिकको मिति २०७१ आषाढ ३२ गतेको अंकमा प्रकाशित "कथित मधेसवादी नेता बोकाको कालाकर्तुत, घरबाटै निकालिएका व्यक्ति गैरकानुनी धन्दामा" शीर्षक समाचारले सामाजिक बेइज्जत गरेको हुँदा आवश्यक कारवाहीको लागि अन्नपूर्णा मानन्धरसमेतका महिलाको 'डेलीगेशन' ले उजुरी दिएकोले सो उजुरीको प्रतिलिपिसहित आवश्यक कारवाहीको लागि जिल्ला प्रशासन कार्यालय, पर्साबाट पत्र यस काउन्सिलमा प्राप्त भई सूचना विभागबाट समेत आवश्यक कारवाहीको लागि लेखीआएकोमा कार्यविधि पूरा गरी प्रेस काउन्सिल नेपालमा आउन निवेदकलाई जानकारी गराइदिने व्यवस्थाकालागि २०७१/०५/०९ गते जिल्ला प्रशासन कार्यालय, पर्साको नाममा पत्राचार गरिएको, पत्रकार आचारसंहिता पालनामा सजग रहन पत्रिकालाई पत्राचार गरिएको ।

## ६) सुदर्शन श्रेष्ठ

**विरुद्ध**

**नेपाल न्यूज साप्ताहिक र प्रक्षेपण प्रिन्ट न्यूजः**

नेपाल न्यूज साप्ताहिक र प्रक्षेपण प्रिन्ट न्यूजले २०७१ भाद्र ११, १८, २४ र २५ गतेको अङ्कमा आफ्नो संस्थाको प्रतिष्ठामा आँच पुऱ्याउने उद्देश्यले समाचार प्रकाशित गरेकोले आवश्यक कारवाहीको लागि सेभ द चिल्ड्रेनका निर्देशक (सूचना तथा सञ्चार) सुदर्शन श्रेष्ठले मिति २०७१/०६/२७ गते दर्ता गराउनुभएको उजुरीका सम्बन्धमा कार्यविधि पूरा गर्न मिति २०७१/०६/२८ गते यस काउन्सिलबाट सेभ द चिल्ड्रेनको नाममा पत्राचार गरिएकोमा प्रक्रिया पूरा गरी अर्को उजुरी प्राप्त नभएको ।

## ७) संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालय

**विरुद्ध**

**विरुद्ध जनआस्था साप्ताहिक र setopati.com :**

मिति २०७१/०५/११ गतेको जनआस्था साप्ताहिकमा "आतंकवादी छिरेको सूचना आएपछि ......" शीर्षकमा भारतीय कम्पनीको कुनै एउटा जहाज चौध वर्षपछि फेरि अपहरणमा पर्नसक्ने मोबाइल सन्देश प्राप्त भएपछि ......" भन्ने समाचारलाई आधार बनाएर online news portal setopati.com ले मिति २०७१/०५/११ को online news मा "त्रिभुवन विमानस्थलमा आतंककारी छिरेको सूचना, फेरि विमान अपहरण हुनसक्ने" शीर्षकमा समाचार प्रकाशन गरेको, उक्त समाचारमा स्रोत समेत उल्लेख नभएको र यस्ता खालका अपुष्ट र गलत समाचार सम्प्रेषण हुनगएमा यसबाट आमजनमानसमा हवाई उडानप्रति भय एवं त्रास उत्पन्न भई हवाई सेवा र पर्यटन क्षेत्रले नकारात्मक परिणाम व्यहोर्नुपर्ने हुनसक्ने भएकोले 'उडान सुरक्षा सम्बन्धमा हुनसक्ने गलत सूचना प्रवाहको रोकथामबारे' संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयको पत्र सूचना तथा सञ्चार मन्त्रालयमा प्राप्त भई सोको छायाँप्रति सहित आवश्यक कार्यार्थ पत्र प्राप्त भएकोमा, संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयको पत्रमा पत्रकार आचारसंहिता - २०६० (संशोधित तथा परिमार्जित - २०६४) को दफा - ५ अनुसारको कार्यविधि पूरा गरेको नदेखिएकोले कार्यविधि पूरा गर्न मन्त्रालयलाई जानकारी गराइदिने व्यवस्थाका लागि २०७१/०६/०६ गते सूचना तथा सञ्चार मन्त्रालयको नाममा पत्राचार गरिएकोमा अर्को उजुरी प्राप्त नभएकोले २०७१ मंसीर ५ गतेको बैठकले उजुरीका सम्बन्धमा जनआस्था साप्ताहिक साथै setopati.com लाई जानकारी दिई पत्रकार आचारसंहिता पालनामा सजग रहन पत्राचार गरिएको ।

**८)　　नजमा बेगम**

**विरूद्ध**

**देशको अस्तित्व दैनिकः**

देशको अस्तित्व दैनिक पत्रिकाको मिति २०७१ आषाढ २९ गते आइतवारको अंकमा “भारतीय नागरिक शहाबुद्धिन खाँ को संकट चुलिँदै श्रीमतीलाई आपत्तिजनक अवस्थामा पाएपछि खाँले गरे आत्महत्याको प्रयास” शीर्षक समाचारले आफ्नो प्रतिष्ठा र मानसम्मानमा आघात पुगेकोले आवश्यक कारवाहीको लागि नजमा बेगमसमेतका महिलाको ‘डेलीगेशन’ आई जिल्ला प्रशासन कार्यालय, पर्सामा उजुरी दिएकोले, कार्यविधि पूरा गरी प्रेस काउन्सिल नेपालमा आउन निवेदकलाई जानकारी गराइदिने व्यवस्थाका लागि २०७१/०५/०९ गते जिल्ला प्रशासन कार्यालय, वीरगञ्ज, पर्साको नाममा पत्राचार गरिएकोमा हालसम्म  प्रक्रिया पूरा गरी निवेदकको अर्को उजुरी प्राप्त नभएको । पत्रकार आचारसंहिता पालनामा सजग रहन पत्रिकालाई निर्देशन दिइएको ।

**९)　　देवमान हिराचन**

**विरूद्ध**

**tokyonepal.com:**

मिति २०७१/०७/०५ (अक्टोबर २२, २०१४) को tokyonepal.com मा प्रकाशित ‘जापानमा नेपालीलाई रोजगारीको अवसर गुम्ने खतरा’ शीर्षकको समाचारमार्फत् आफ्नो बारेमा झुट र भ्रम फैलाउने काम गरेकोले आवश्यक कारवाहीका लागि देवमान हिराचनले मिति २०७१/०८/२२ गते प्रेस काउन्सिल नेपालको सचिवालयमा दर्तागराउनुभएको उजुरीका सम्बन्धमा खण्डन प्रकाशनार्थ tokyonepal.com मा इमेलबाट पत्राचार र ताकेता गरिएको ।

**१०)　　विष्णुबहादुर सिंह**

**विरूद्ध**

**दीपक पाठकः**

मार्गदर्शन बचत तथा ऋण सहकारी संस्था लि. का अध्यक्ष एवं मार्गदर्शन खवरपत्रिकाका सम्पादक दीपक पाठकले ठगी गरेको र मलाई पत्रपत्रिकामा झुठा आरोप छपाउँछु भनी धम्काउने गरेको भन्नेसमेत व्यहोराको महाँकाल-७, काठमाडौंका विष्णुबहादुर सिंहको उजुरी निवेदनका सम्बन्धमा २०७१ कार्तिक ०४ गतेको बैठकमा छलफल हुँदा सञ्चारमाध्यममा प्रकाशित/प्रशारित सामग्री मात्र काउन्सिलको पत्रकार आचारसंहिताको क्षेत्राधिकारभित्र रहने हुँदा उक्त उजुरी निवेदनमा प्रवेश गर्न नसकिने निर्णयानुसार सो व्यहोरा उल्लेख गरी उजुरकर्ताको नाममा पत्राचार गरिएको  ।

## ११) नुरजहाँ खातुन

### विरुद्ध

### देशको अस्तित्व दैनिकः

देशको अस्तित्व दैनिक पत्रिकाको मिति २०७१ आषाढ ३१ गतेको अंकमा प्रकाशित "सुपवा पुछे चलनिया से तोरा मे केतना छेद" भोजपुरी उखान जस्तै आलिशान दैनिकका प्रकाशक शेष जलसोदिन र उनका दाजु शेष भुवाली भनिने शेष ईस्तखारले लागूऔषधको कुख्यात कारोवारी भएको खुलासा शीर्षक समाचारमार्फत् आफ्नो प्रतिष्ठा र मानसम्मानमा आघात पुऱ्याएकोले आवश्यक कारवाहीको लागि सेख नुरजाहा खातुन समेतका महिलाको 'डेलिगेशन' आई जिल्ला प्रशासन कार्यालय, वीरगञ्ज, पर्सामा समाचारको कटिंङ संलग्न गरी उजुरी दिएकोले सोको प्रतिलिपिसहित आवश्यक कारवाहीको लागि प्राप्त भएको र कार्यविधि पूरा गरी प्रेस काउन्सिल नेपालमा आउन निवेदकलाई जानकारी गराइदिने व्यवस्थाका लागि काउन्सिलबाट मिति २०७१/०५/०९ गते पत्राचार गरिएकोमा हालसम्म अर्को उजुरी प्राप्त नभएकोले अस्तित्व दैनिकलाई पत्रकार आचारसंहिता पालनामा सजग रहन पत्राचार गरिएको ।

## १२) लाइफ लाइन हस्पिटल, भीमबहादुर सुब्बा

### विरुद्ध

### माउण्टेन टेलिभिजनः

झापाको दमकस्थित लाइफलाइन हस्पिटल, इन्स्टिच्युट अफ हेल्थ साइन्समा PCL नर्सिङ तेस्रो वर्ष अध्ययनरत नियमिततर्फका विद्यार्थीहरुमध्ये गत २०७१ भाद्र/आश्विन महिनामा CTEVT बाट सञ्चालित वार्षिक अन्तिम परीक्षामा ३ (तीन) जना विद्यार्थी अनुत्तिर्ण भएको वारे माउण्टेन टेलिभिजनले विभिन्न मितिमा रात्रीको समय ८ः ३० - ९ः०० बजेसम्म र पुनः २०७१/०९/०६ गते प्रशारण गरेको समाचार भ्रामक भएको, उक्त समाचारले आफ्नो संस्थाको बेइज्जत गरेको र खण्डन प्रशारणको लागि लिखित पत्र पठाउँदा पनि वास्ता नगरेकोले आवश्यक कारवाहीको लागि प्रिन्सिपल भीमबहादुर सुब्बाले काउन्सिल सचिवालयमा मिति २०७१/०९/१८ गते दर्ता गराउनुभएको उजुरी प्रकृयामा रहेको ।

## १३) विन्दु अधिकारी पहाडी

### विरुद्ध

### अन्तरंग साप्ताहिकः

लमजुङबाट प्रकाशित हुने अन्तरंग साप्ताहिकले २०७१/०२/०८ को अंकमा चरित्रहरण गर्ने समाचारहरु प्रकाशित गरेको र खण्डन पठाउँदासमेत बेवास्ता गरेकोले आवश्यक कारवाही गरीपाउँ भनी विन्दु अधिकारी पहाडीले मिति २०७१/०४/२० मा उजुरी दर्ता गराउनुभएको र काउन्सिलबाट २०७१/०४/२३ मा निवेदकको खण्डन किन प्रकाशित नगरिएको हो ? खण्डन प्रकाशित गर्न नमिल्ने कुनै कारण भए ७ दिन भित्र आधार प्रमाणसहित जवाफ पेश गर्न अन्यथा निवेदकको खण्डन अविलम्व प्रकाशन गरी काउन्सिललाई जानकारी गराउन पत्राचार गरिएकोमा अन्तरंग साप्ताहिकको मिति २०७१/०५/१५ को पत्रबाट उक्त खण्डन २०७१ भाद्र ५ गतेको अङ्कमा प्रकाशन गरिएको जानकारी प्राप्त भएको सम्बन्धमा आचारसंहिता अनुगमन उपसमितिको मिति २०७१ कार्तिक ०४ गतेको बैठकमा छलफल भइ खण्डन प्रकाशित भएको ब्यहोरा उजुरीकर्तालाई जानकारी गराइएको ।

## १४) दिपक अग्रवाल

### विरुद्ध

### ब्लास्ट टाइम्स दैनिकः

सुनसरीको धरानबाट प्रकाशित हुने ब्लाष्ट टाइम्स दैनिकले मिति २०७१ श्रावण ११ गतेको अंकमा 'धरानमा ठूलो परिणाममा सुनचाँदी बरामद' शीर्षकमा समाचार लेखेर आफूलाई सुनचाँदी तस्कर भएको आशय प्रकट गरेको र आफ्नो अर्को संस्था 'धरान मन्टेश्वरी'को नाम जोडी मानमर्दन गरेको, खण्डन प्रकाशित नगरेकोले आवश्यक कारवाही गरीपाउँ भनी धरान मन्टेश्वरीका अध्यक्ष दिपक अग्रवालको २०७१/०४/१६ मा निवेदन दर्ता भएकोमा काउन्सिलबाट मिति २०७१/४/२३ को खण्डन किन प्रकाशित नगरेको हो ? प्रकाशन गर्न नमिल्ने कुनै कारण भए ७ दिनभित्र आधारप्रमाणसहित जवाफ पेश गर्न पत्राचार गरिएकोमा उक्त पत्रिकाको मिति २०७१/०५/०६ को पत्रबाट निवेदकले उठाएको विषय २०७१/०४/१२ गते प्रकाशित अंकमा स्पष्ट पारिएको जवाफ प्राप्त भएको हुँदा सोही ब्यहोरा जानकारी गराइएको ।

## १५) नेकपा (एमाले) जिल्ला कार्यसमिति प्युठान

### विरुद्ध

### माण्डवी साप्ताहिक: ______

मिति २०७१ साल भाद्र २२ गतेका दिन प्युठान नगरपालिका वडा नं. ४ निवासी सनत श्रेष्ठलाई अज्ञात व्यक्तिद्वारा खुकुरी प्रहार गरिएको घटनाको सम्बन्धमा मिति २०७१ भाद्र २५ गतेको माण्डवी साप्ताहिकमा नेपाल कम्युनिष्ट पार्टी (एमाले) जिल्ला कमिटी प्युठान र उपप्रधान एवं गृहमन्त्री वामदेव गौतमलाई समेत आरोप लगाई समाचार प्रकाशित गरेकोले आवश्यक कारवाहीको माग गर्दै नेपाल कम्युनिष्ट पार्टी (एमाले) जिल्ला कमिटी प्युठानको तर्फबाट मिति २०७१/०६/०५ गते प्रेस काउन्सिल नेपालको सचिवालयमा दर्ता भएको उजुरीका सम्बन्धमा कार्यविधि पूरा गर्न मिति २०७१/०६/२८ गते काउन्सिलबाट पत्राचार गरिएकोमा अर्को उजुरी प्राप्त नभएकोले उजुरी तामेलीमा राखिएको ।

## १६) मोहन बाँस्तोला

### विरुद्ध

### जनसवाल दैनिक समेतका पत्रिकाहरु : ______

जनसवाल दैनिक समेतका विभिन्न पत्रपत्रिकामा प्रेस विज्ञप्ती विज्ञापनको रुपमा प्रकाशन हुने गरेकोले कारवाही गरी पाऊँ भनी मोहन बाँस्तोलाले मिति २०७१।१०।०९ मा दिनुभएको निवेदन एवं काउन्सिल सचिवालयबाट भएको यस्तै प्रकृतिको अनुगमनका सम्बन्धमा आचारसंहिता अनुगमन उपसमितिको मिति २०७१ माघ १८ गतेको वैठकमा छलफल हुँदा पत्रकार आचारसंहिता-२०६०( संशोधित तथा परिमार्जित-२०६४) को दफा ४(१२) विज्ञापनलाई समाचारको रुपमा प्रस्तुत गर्न नहुने बुँदा आकर्षित हुँने देखिँदा विज्ञापन संघ र सोमार्फत सबै विज्ञापन एजेन्सीहरुलाई सर्कुलर गर्न गराउन पत्राचार गर्ने साथै प्रेस विज्ञप्ति विज्ञापनको रुपमा प्रकाशन गर्ने पत्रपत्रिकाहरुलाई समेत त्यस्तो कार्य आचारसंहिता प्रतिकूल हुने व्यहोरासहित ध्यानाकर्षण गराउने निर्णय भएकोले निर्णयानुसार ध्यानाकर्षण गराइएको ।

### १७) सन्तोष राई

### विरुद्ध

### स्टार एफ. एम. ९५.२ मे. ह. :

काठमाडौं महानगरपालिका वडा नं. १०, मध्यवानेश्वरमा स्टेशन रही यसअघि 'स्टार एफ. एम.' ९५.२ मेगाहर्जमा प्रशारणरत रहेको रेडियो अहिले 'Ruslan Vodka' नामक रक्सीको नाममा प्रशारण भइरहेको यसबाट कलसाइन राखी समाजमा नकारात्मक सन्देश जाने भन्नेसमेत व्यहोराको उजुरी मिति २०७१/१०/१८ गते सन्तोष राईले यस काउन्सिलमा दर्ता गराउनुभएको सम्बन्धमा खुलाई पठाइदिन सूचना तथा सञ्चार मन्त्रालयमा २०७१/१०/२२ गते पत्राचार गर्दा मिति २०७१/१०/२७ गतेको पत्रमा स्टार एफ.एम.को कलसाइन (Station ID) 'रुस्लान एफ.एम.' कायम भएको जानकारी प्राप्त भइ छलफल हुँदा उक्त एफएमले भोड्कलाई प्रबर्द्धन गर्ने गरी प्रशारण गरे नगरेको अनुगमन गरी थप छलफल गर्ने निर्णय भएको ।

### १८) नेपाल आयल निगम, ई.गोपालबहादुर खड्का

### विरुद्ध

### अभियान टाइम्स र गोलमेच साप्ताहिक :

२०७१/११/२८ गतेको अभियान टाइम्स साप्ताहिक र मिति २०७१/११/२९ गतेको गोलमेच साप्ताहिकमा प्रकाशित समाचारले समग्र आयल निगमको  बद्नाम गराएको, उक्त भ्रामक, कपोलकल्पित र पूर्वाग्रहीसमाचारले आफ्नो व्यक्तिगत चरित्र हत्या भएको र खण्डन पनि प्रकाशन नगरेकोले आवश्यक कारवाहीको लागि निगमका कार्यकारी निर्देशक ई. गोपालबहादुर खड्काले २०७१/१२/०२ गते दर्ता गराउनुभएको उजुरीका सम्बन्धमा सोधनी गर्दा अभियान टाइम्स साप्ताहिक र गोलमेच साप्ताहिकले खण्डन प्रकाशित भैसकेको जानकारी गराएको हुँदा खण्डन प्रकाशित भएको व्यहोरा नेपाल आयल निगमलाई जानकारी गराएको ।

### १९) डम्बरबहादुर स्वाँर (कालिका फोटो स्टुडियो, अछाम)

### विरुद्ध

### रेडियो सोसाइटी एफ. एम. ८९ मेगाहर्ज समेत ३ (तीन) :

कालिका फोटो स्टुडियो, अछामका डम्बरबहादुर स्वाँरले बैद्यनाथ राष्ट्रिय दैनिक, अछाम दैनिक र रेडियो सोसाइटी एफ. एम. ८९ मेगाहर्जका विरुद्ध मिति २०७१/११/२० गते दर्ता गराउनुभएको उजुरी अन्तिम प्रकृयामा रहेको ।

## २०) जिल्ला विकास समितिको कार्यालय जाजरकोट

**विरुद्ध**

**विभिन्न अनलाइनहरु र रा.स.स. जाजरकोट सम्वाददाता :**

रा.स.स. को हवाला दिंदै विभिन्न अनलाइन पत्रिकामा प्रकाशित 'जिविस जाजरकोटमा अख्तियारको छाँया' समाचारप्रति घोर आपत्ति प्रकट गरी जिल्ला विकास समितिको कार्यालय जाजरकोटबाट प्रेषित मिति २०७२/०२/१३ को पत्रमा पत्रकार आचारसंहिता - २०६० (संशोधित तथा परिमार्जित - २०६४) को दफा - ५ अनुसारको कार्यविधि पूरा गरेको नदेखिएकोले सो कार्यविधि पूरा गर्न मिति २०७२/०२/३१ गते पत्राचार गरिएको ।

## २१) युवा तथा साना व्यवसायी स्वरोजगार कोष सचिवालय

**विरुद्ध**

**विरुद्ध तामाकोशी सन्देशः**

तामाकोशी सन्देश साप्ताहिकमा मिति २०७२/०२/२७, २०७२/०३/०९ र २०७२/०३/१६ का अङ्कहरुमा क्रमशः प्रकाशित 'स्वरोजगार कोषमा गुरागाँईको मनोमानी', 'गुरागाँईले स्वरोजगार कोषलाई डुबाउँदै' र 'स्वरोजगार कोषमा उग्र मच्चाउँदै गुरागाँई' शीर्षक समाचार विरुद्ध आवश्यक कारवाहीका लागि युवा तथा साना व्यवसायी स्वरोजगार कोष सचिवालयबाट मिति २०७२/०३/२७ गते प्राप्त पत्र प्रकृयामा रहेको ।

## २२) कृषि विकास बैंक लिमिटेड

**विरुद्ध**

**तामाकोशी सन्देश साप्ताहिकः**

तामाकोशी सन्देश साप्ताहिकले प्रायः हरेक बुधवारको अङ्कमा नियमित रुपमा कृषि विकास बैंक र बैंकसँग सम्बन्धित व्यक्तिहरुको बारेमा भ्रमपूर्ण, कपोलकल्पित एवं पूर्वाग्रही समाचार प्रकाशित गरी चरित्रहत्या गर्ने दुश्प्रयास गरिरहेको भन्ने समेत व्यहोराको पत्र काउन्सिल सचिवालयमा मिति २०७१/१०/०४ गते दर्ता भएको र पत्रकार आचारसंहिता - २०६० (संशोधित तथा परिमार्जित - २०६४) को दफा - ५ बमोजिमको कार्यविधि पूरा भएको नदेखिएकोले पत्राचार गरिएकोमा कार्यविधि पूरा गरी अर्को पत्र प्राप्त नभएको ।

## २३) शिरिषा पौडेल

**विरुद्ध**

**dainikkhabar.com र dainiknepal.com**

विष्णु बहादुर क्षेत्रीका सम्बन्धमा हुँदै नभएको र हुनै नसक्ने फोटो राखी हत्या भएको खबर प्रकाशन गरेको, सो समाचारबाट आफ्नो बेइज्जती भएको र खण्डन पठाउँदा खण्डन पनि प्रकाशित नगरेकोले आवश्यक कारवाहीको लागि निजकी श्रीमती शिरीषा पौडेलले मिति २०७२/०३/२३ गते दर्ता गराउनुभएको उजुरी निवेदनका सम्बन्धमा काउन्सिलबाट खण्डन प्रकाशनार्थ तत् तत् अनलाइनलाई पत्राचार गरिएको, dainiknepal.com ले पठाएको जवाफ काउन्सिलमा प्राप्त भई सो विषय प्रकृयामा रहेको ।

## २४) राष्ट्रिय मानव अधिकार आयोग

**विरुद्ध**

**आर्थिक दैनिकः**

२०७२ जेष्ठ १० गतेको अङ्कमा प्रकाशित 'गल्ती मानव अधिकार आयोगको कि विश्व खाद्य कार्यक्रमको', मिति २०७२ जेष्ठ १२ गतेको अङ्कमा प्रकाशित 'मानव अधिकार आयोगको दाबी भ्रूठो साबित' र २०७२ असार १७ गतेको अङ्कमा प्रकाशित 'ड्रग्स कारोबारमा मानव अधिकार आयोगकी प्रवक्ता मोहना अन्सारीको पारिवारिक संलग्नता' शीर्षकका समाचारका विरुद्ध राष्ट्रिय मानव अधिकार आयोगबाट २०७२/०३/२४ मा दर्ता भएको पत्रउपर आवश्यक कारवाही भई आर्थिक राष्ट्रिय दैनिकको नाममा जवाफ पेश गर्न मिति २०७२/०३/२८ मा पत्र पठाइएकोमा जवाफ प्राप्त भई विषय प्रकृयामा रहेको ।

## २५) मा.उदय समशेर राणा

**विरुद्ध**

**साँघु साप्ताहिक :**

मिति २०७२ ज्येष्ठ २५ गते प्रकाशित 'जनताको राहत बेच्ने सभासद चिनौं' शीर्षकको समाचार विरुद्ध मा.उदय समशेर राणाले मिति २०७२/०२/२६ मा दर्ता गराउनुभएको उजुरीमा पत्रकार आचारसंहिता - २०६०(संशोधित तथा परिमार्जित - २०६४) को दफा - ५ बमोजिमको कार्यविधि पूरा भएको नदेखिएकोले कार्यविधि पूरा गर्न २०७२/०२/२६ गते नै पत्राचार गरिएको अर्को उजुरी प्राप्त नभएको ।

## २६) कोरियन दूतावास

**विरुद्ध**

**रिपब्लिका दैनिक :**

मिति २०७२ जेष्ठ २५ -june 8, 2015_ को रिपब्लिका दैनिकको अंकमा प्रकाशित ‘ Korean woman on interpole list living in Nepal since 5 years’ शीर्षकको समाचारका सम्बन्धमा आवश्यक कारवाहीको लागि गृह मन्त्रालयको पत्रको छायाँप्रति र Embassy of the Republic of Korea को छायाँप्रति सहित सूचना तथा सञ्चार मन्त्रालयको मिति २०७२/०३/०१ को पत्र काउन्सिल सचिवालयमा दर्ता भएको सम्बन्धमा के कसो भएको हो ? अविलम्ब जवाफ पेश गर्न काउन्सिलबाट पत्राचार गरिएकोमा रिपब्लिका दैनिकले मिति २०७२/०३/२२ मा पठाएको जवाफमा कोरियन दुतावासबाट बोधार्थका रुपमा प्रतिलिपी प्राप्त हुने बित्तिकै मिडियाको तर्फबाट लिखित रुपमा आफ्ना कुराहरु जानकारी गराएको उल्लेख गरी कोरियन दुतावासलाई पठाएको पत्रको प्रतिलिपी समेत संलग्न गराएको र उक्त जवाफ प्रकृयामा रहेको ।

## २७) प्र. अ. म. नि. रमेशशेखर बज्राचार्य

**विरुद्ध**

**आर्थिक राष्ट्रिय दैनिक :**

नेपाल प्रहरीका अतिरिक्त महानिरीक्षक रमेशशेखर बज्राचार्यका विषयमा त्यस दैनिकमा मिति २०७२/०२/३२ देखि पटकपटक विना कुनै प्रमाण भ्रामक समाचार तयार पारी प्रकाशन गरेको र लिखित रुपमा समाचार झुठ्ठा भएको व्यहोरा जानकारी गराउँदासमेत संक्षिप्त प्रतिक्रिया प्रकाशित गरेता पनि आफ्ना विरुद्ध षडयन्त्रमूलक समाचार प्रकाशनलाई निरन्तरता दिइरहेको भन्ने समेत व्यहोराको उजुरी काउन्सिलमा मिति २०७२/०३/११ गते दर्ता भएको विषयमा काउन्सिलबाट तत् सम्बन्धमा के कसो भएको हो ? अविलम्व जवाफ पेश गर्न आर्थिक राष्ट्रिय दैनिकको नाममा पत्राचार गरिएकोमा आर्थिक राष्ट्रिय दैनिकको जवाफ प्राप्त भई सो विषय प्रकृयामा रहेको ।

**२८) ओमदेवी मल्ल**

**विरूद्ध**

dainiknepal.com:

dainiknepal.com मा प्रकाशित सभासद ओमदेवी मल्ल, भूकम्पको राहत वितरणको सट्टा हनिमुन मनाउन गएको भनी जिल्ला प्रहरी कार्यालय सर्लाहीका प्रहरी उपरीक्षक केदार ढकालसँग नाम जोडी पुरानो फोटो राखेर गलत समाचार सम्प्रेषण गरेको र खण्डन पठाएकोमा खण्डन पनि प्रकाशन नगरेकोले आवश्यक कारवाहीको लागि ओमदेवी मल्लले मिति २०७२/०३/०७ गते दिनुभएको उजुरीका सम्बन्धमा के कसो भएको हो ? यथार्थ विवरण सहितको स्पष्टीकरण अविलम्ब पेश गर्न dainiknepal.com को नाममा पत्राचार गरिएको, अनलाइनले पठाएको जवाफ काउन्सिलमा प्राप्त भएको र सो विषय प्रकृयामा रहेको ।

२९) Meridian International School

**विरूद्ध**

**नागरिक दैनिकसमेत ३ (तीन):**

मिति २०७२/०३/०७ गतेको नागरिक दैनिक, काठमाडौंपोष्ट दैनिक र रिपब्लिका दैनिकमा समेत प्रकाशित Meridian International School सम्बन्धी समाचारको विरुद्ध इमेलबाट २०७२/०३/०७ मा प्राप्त उजुरी पत्रमा पत्रकार आचारसंहिता - २०६० (संशोधित तथा परिमार्जित-२०६४) को दफा-५ बमोजिमको कार्यविधि पूरा भएको नदेखिएकोले सो पूरा गर्न पत्राचार गरिएकोमा कार्यविधि पूरा गरी अर्को पत्र प्राप्त नभएको ।

**३०) अनुप भट्टराई**

**विरूद्ध**

**चलचित्र पत्रकार संघः**

समाचार सम्प्रेषण गरेको विषयलाई लिएर आफूमाथि चलचित्र पत्रकार संघले कठोर कारवाही गरेकोले निष्पक्ष छानविनको लागि चलचित्र पत्रकार अनुप भट्टराईले मिति २०७२/०३/२७ गते दर्ता गराउनुभएको उजुरी प्रकृयामा रहेको ।

## ३१) नेपाल पूर्वाधार विकास कम्पनी लिमिटेड

### विरुद्ध

### आर्थिक दैनिक: ____________________

आर्थिक दैनिकको मिति २०७१/०९/०९ गतेको अङ्कमा प्रकाशित 'हेटौंडा-काठमाडौं सुरुङमार्ग आयोजना संकटमा' शीर्षकको समाचार कपोलकल्पित एवं निराधार भएकोले आवश्यक कारवाहीको लागि नेपाल पूर्वाधार विकास कम्पनी लिमिटेडका अध्यक्ष कुशकुमार जोशीले मिति २०७१/०९/१८ गते दर्ता गराउनुभएको पत्रमा पत्रकार आचारसंहिता-२०६० (संशोधित तथा परिमार्जित-२०६४) को दफा-५ बमोजिमको कार्यविधि पूरा भएको नदेखिएकोले सो कार्यविधि पूरा गर्न मिति २०७१/१०/०९ गते काउन्सिलबाट नेपाल पूर्वाधार विकास कम्पनी लिमिटेडलाई पत्राचार गरिएकोमा कार्यविधि पूरा गरी अर्को पत्र प्राप्त नभएको ।

## ३२) हाम्रो विकास बैंक विरुद्ध

### विरुद्ध

### आर्थिक दैनिक: ____________________

काठमाडौंबाट प्रकाशित हुने आर्थिक दैनिकको मिति २०७१ श्रावण ११, १२ र १३ गतेको अंकमा प्रकाशित भ्रामक खवर बारेमा उक्त पत्रिकाका सम्पादकलाई खण्डन पठाइएको तर खण्डन प्रकाशित नगरी पुन श्रावण १६ गते बैंकका बारेमा सत्य लुकाई गलत समाचार सम्प्रेषण गरेकोले आवश्यक कारवाही गरि पाउँ भनी हाम्रो विकास बैंकको तर्फबाट कपिल ढकालले मिति २०७१/४/१९ गते काउन्सिलमा निवेदन दर्ता गराउनुभएको सम्बन्धमा आचार संहिता अनुगमन उपसमितिको निर्णयानुसार निवेदकको खण्डन अविलम्ब प्रकाशित गरी काउन्सिललाई जानकारी दिन, अन्यथा अवज्ञाकारीको सूचीमा राखी थप थप कारवाही गरिने व्यहोरा उल्लेख गरी आर्थिक दैनिकलाई मिति २०७२/०४/२८ गते काउन्सिलबाट पत्राचार गरिएको ।

## ३३) सूचना विभाग

### विरुद्ध

### प्रतिस्पर्धा साप्ताहिक: ____________________

मिति २०७२/०३/११ गतेको प्रतिस्पर्धा साप्ताहिकमा प्रकाशित 'सूचना विभागमा भ्रष्टाचार, लोककल्याणकारी विज्ञापनको रकम ब्याजमा' शीर्षकको समाचारका विरुद्धमा आवश्यक कारवाहीका लागि सूचना विभागबाट मिति २०७१/०३/२५ गते प्राप्तभएको पत्र प्रकृयामा रहेको ।

**३४) लक्ष्मी एस्तर थापा (कार्यकारी निर्देशक, अन्तर्राष्ट्रिय सहयोग सञ्जाल–नेपाल)**
**विरुद्ध**
**newsabhiyan.com:**

मिति ०७ फेब्रुवरी, २०१५ (२०७१ माघ २३) मा newsabhiyan.com अनलाइन पत्रिकाले 'क्रिश्चियनका आडमा डलर कुम्ल्याउँदै' शीर्षकमा साना-साना नानीहरुलाई पठनपाठन गराउने भन्दै ललितपुरको भैंसेपाटीमा रहेको आइ. एन. नेटवर्ककी प्रमुख लक्ष्मी एस्तर थापाले करोडौं रुपियाँ हिनामिना गरेको भन्दै कपोलकल्पित, भ्रामक समाचार प्रकाशन गरेको र खण्डन प्रकाशनको लागि पठाएकोमा खण्डन चित्तबुझ्दो रुपमा प्रकाशन नगरेकोले काउन्सिलबाटै आवश्यक कारवाही गरी पाउँ भनी अन्तर्राष्ट्रिय सहयोग सञ्जाल-नेपालका कार्यकारी निर्देशक लक्ष्मी एस्तर थापाले मिति २०७१/११/०१ गते दर्ता गराउनुभएको उजुरीमा काउन्सिलबाट आवश्यक कारवाही भई खण्डन प्रकाशनार्थ मिति २०७१/११/१३ मा newsabhiyan.com लाई पत्राचार गरिएकोमा अनलाइनले मिति २०७१/११/२२ गते पठाएको जवाफमा सरोकारवालाको खण्डन पठाएको समयमा नै प्रकाशित गरिसकेको जानकारी गराएको र सो विषय प्रकृयामा रहेको ।

**३५) विष्णुप्रसाद अधिकारी र मुनादेवी अधिकारी**
**विरुद्ध**
**टिकाराम नेति र हिमशिखर टेलिभिजन :**

२०७१ माघ ११ गते विहान ८:३० वजे विष्णु प्रसाद अधिकारीको घरमा अचानक केही मानिसहरुका साथ हिमशिखर टेलिभिजनको लोगो भएको क्यमरा लिएर टिकाराम नेति आफैं आई अनगरल कुरा गरी गाली वेइज्जति गरी खाली कागजमा सहिछाप नगरे तँलाई जे पनि गर्न सक्छु भन्ने धम्की दिँदा खाली कागजमा सहीछाप नगरेपछि आफूलाई वेहोस हुने गरी कुटपिट गरेको भन्ने समेत व्यहोराको उजुरी विष्णु प्रसाद अधिकारी र मुनादेवी अधिकारीको तर्फबाट काउन्सिल सचिवालयमा मिति २०७१/११/२६ गते दर्ता भएको र सो सम्बन्धमा आचारसंहिता अनुगमन उपसमितिको मिति २०७२ असार ०२ गतेको बैठकमा छलफल भई बैठकको निर्णयानुसार आचारसंहिता - २०६० (संशोधित तथा परिमार्जित - २०६४) को दफा - ३ (७) बमोजिम उच्च व्यवसायिक अभ्यासको लागि हिमशिखर टेलिभिजन र टिकाराम नेतिलाई सचेत गराइएको ।

## ३६) माधव न्यौपाने समेत जना २५ (पच्चिस)

## विरुद्ध

## रामशरण न्यौपाने :

नेपाल सरकार, घरेलु तथा साना उद्योग विकास समितिको आयोजनामा २०७१ फागुन ६ गतेदेखि १० गतेसम्म भृकुटीमण्डपमा सञ्चालित भएको बृहत घरेलु लघु उद्यमी मेला सञ्चालनका बखत फरकपत्र द्वैमासिकका प्रेस प्रतिनिधि श्री रामशरण न्यौपानेले सामान उठाएर लगेको सम्बन्धमा निजलाई आवश्यक कारवाही गरिदिन माधव न्यौपानेसमेतका जना २५ (पच्चिस) ले २०७१/११/१३ गते दर्ता गराउनुभएको उजुरीका सम्बन्धमा त्यसो किन गरेको हो ? लिखित जवाफसहित पत्र प्राप्त भएको ७ (सात) दिनभित्र स्वयं उपस्थित हुन मिति २०७२/०३/२० मा पत्राचार गरिएकोमा रामशरण न्यौपानेको तर्फबाट लिखित जवाफ प्राप्त भई उक्त विषय प्रकृयामा रहेको ।

## ३७) नवराज न्यौपाने (संवाददाता, आर्थिक दैनिक)

## विरुद्ध

## गोरखापत्र दैनिक समेतका विभिन्न पत्रिकाहरु

२०७१ पौष अन्तिम सातादेखि हालसम्म लगातार नेपाल ट्रष्टको नाममा हस्तान्तरण हुनुपर्ने राजदरवारका नातेदारहरुको नाम सेयरहरु जालझेलपूर्वक कपिल समशेर राणा र सिर्जना राणाको नाममा राखिएको भन्ने समाचारको खण्डनको रुपमा २०७१ फागुन ८ गतेको गोरखापत्र दैनिक, द राइजिङ नेपाल, कान्तिपुर दैनिक, द काठमाडौं पोष्ट, नागरिक दैनिक, अन्नपूर्णपोष्ट र द हिमालयन टाइम्ससमेतका पत्रिकामा प्रेस बक्तव्यलाई विज्ञापनको रुपमा प्रकाशित भएकोले खण्डन छाप्ने पत्रपत्रिका तथा छपाउने होटल डेला अन्नपूर्णमाथि कारवाही गरि पाऊँ भनी नवराज न्यौपाने (संवाददाता, आर्थिक दैनिक) ले मिति २०७१/११/१२ गते उजुरी दर्ता गराउनुभएको । उजुरीमा पत्रकार आचारसंहिता - २०६० (संशोधित तथा परिमार्जित-२०६४) को दफा - ५ बमोजिमको कार्यविधि पूरा भएको नदेखिएकोले पूरा गर्न मिति २०७२/०२/३२ गते काउन्सिलबाट नवराज न्यौपानेको नाममा पत्राचार गरिएकोमा कार्यविधि पूरा गरी अर्को उजुरी प्राप्त नभएको ।

## ३८) जगतमेहर देशार (कार्यकारिणी अधिकृत, ह्वाइट गोल्ड , तीनकुने)

### विरुद्ध

### नागरिक दैनिक र कान्तिपुर दैनिक :

२०७१ पौष २४ गतेको नागरिक दैनिक र कान्तिपुर दैनिकमा आधिकारिकता र प्रमाणिकता नभएको सूचना ह्वाइट हाउस इन्टरनेशनल कलेजको तर्फबाट छपाई आफू र आफ्नो संस्थाको व्यवसायिक मान प्रतिष्ठामा आघात पुऱ्याएको क्षतिपूर्तिबापत रु. १९००००००।- ( रु.एक करोड नब्बे लाख मात्र ) पाऊँ भनी मिति २०७१/११/६ गते ह्वाइट गोल्ड एजुकेशन नेटवर्क प्रा. लि.का कार्यकारिणी अधिकृत जगतमेहर देशारले दर्ता गराउनुभएको उजुरीका सम्बन्धमा आचारसंहिता अनुगमन उपसमितिको निर्णयानुसार आफ्नो भनाई/प्रतिक्रिया पेश गर्न नागरिक दैनिक र कान्तिपुर दैनिकको नाममा पत्राचार गरिएकोमा दुवै पत्रिकाहरुले जवाफ पेश भै प्रक्रियामा रहेको ।

## ३९) डा. सुमित्रा अमात्य, कार्यकारी निर्देशक,फोहरमैला व्यवस्थापन प्राविधिक सहयोग केन्द्र

### विरुद्ध

### डायरी एक्सप्रेस साप्ताहिक :

मिति २०७१/१२/१६ गतेको अङ्कमा 'मानव तस्करीमा संलग्न विना दर्ता पत्रिका प्रकाशन' र मिति २०७२।१।७ गतेको अङ्कमा 'भिसा नोट लेखाई दिने भन्दै सोलार प्यानल लगाइन् अमात्यले' शीर्षक समाचारहरु कपोलकल्पित र चरित्रहत्या गर्ने उद्देश्यले प्रकाशित गरिएकोले आवश्यक कारवाहीको लागि फोहरमैला व्यवस्थापन प्राविधिक सहयोग केन्द्रको तर्फबाट काउन्सिल सचिवालयमा दर्ता भएको पत्रमा पत्रकार आचारसंहिता - २०६० (संशोधित तथा परिमार्जित - २०६४) को दफा - ५ बमोजिमको कार्यविधि पूरा भएको नदेखिएकोले सो कार्यविधि पूरा गर्न मिति २०७२/०२/०५ गते काउन्सिलबाट फोहरमैला व्यवस्थापन प्राविधिक सहयोग केन्द्रलाई पत्राचार गरिएको ।

## ४०) काठमाडौं उपत्यका सडक विस्तार आयोजना

### विरुद्ध

### अन्नपूर्णपोष्ट दैनिकः

मिति २०७२/०३/०५ को अन्नपूर्णपोष्ट दैनिकमा प्रकाशित 'हचुवामा सडक विस्तार आयोजना, बागमती थुनिँदा घर डुबानमा' शीर्षक समाचार विरुद्ध आवश्यक कारवाहीको लागि काउन्सिलमा काठमाडौं उपत्यका सडक विस्तार आयोजनाको तर्फबाट आयोजना प्रमुख प्रभातकुमार झाले मिति २०७२/०३/१४ गते दर्ता गराउनुभएको पत्रउपर कारवाही भई निवेदनका सम्बन्धमा के कसो भएको हो ? अविलम्ब यथार्थ विवरणसहित जवाफ पेश गर्न मिति २०७२/०३/२२ गते अन्नपूर्णपोष्टलाई पत्राचार गरिएको ।

## ४१) जिल्ला प्रशासन कार्यालय, रौतहट

### विरुद्ध

### कोहिनुर एफ. एम. :

रौतहटको चन्द्रपुरमा मालपोत र नापी कार्यालयको शाखा कार्यालय स्थापना गर्ने सरकारको निर्णय फिर्ता लिनुपर्ने माग गर्दै मिति २०७१/१२/१८ देखि मिति २०७१/१२/२४ गते सम्म गौरमा भएको आम हड्ताल लगायतका कार्यक्रमका विषयमा कोहिनुर एफ. एम. ले सो अवधिमा जनतामाझ आफ्नो समाचार, विभिन्न व्यक्तिसँगको अन्तर्वार्ता, फोनिङ्ग कार्यक्रम जस्ता प्रशारणको माध्यमबाट अनेक प्रकारका काल्पनिक, भ्रामक र साम्प्रदायिक सदभाव खल्वल्याउने किसिमका झुठा सूचनाहरु प्रशारण गरेर जनताहरुलाई भ्रमित एवं उत्तेजित बनाउने किसिमका सूचनाहरु प्रशारण गरेको भन्ने समेत व्यहोराको जिल्ला प्रशासन कार्यालय, रौतहटको पत्र सूचना तथा सञ्चार मन्त्रालयको पत्रसाथ काउन्सिलमा प्राप्त भएकोले सो सम्बन्धमा के कसो भएको हो ? यथार्थ विवरण सहित स्पष्टीकरण पेश गर्न र सो स्पष्टीकरणसाथ मिति २०७१/१२/१८ देखि मिति २०७१/१२/२४ गते सम्म त्यस एफ. एम. बाट प्रशारित सामग्रीहरुको अभिलेख समेत काउन्सिलमा अविलम्ब पेश गर्न पत्राचार र ताकेता गरिएको ।

## ४२) सुनिल उप्रेती

### विरुद्ध

### रातो पाटी डट कमः

रातो पाटी डट कम नामको अनलाइनले नोभेम्बर १३, २०१४, नोभेम्बर १७, २०१४ र डिसेम्बर १२, २०१४ मा आफ्नो नाममा दर्ता समेत नरहेका कम्पनीहरुको नाम लिंदै नभए नगरेका कामकारवाहीहरु भए गरेको भन्ने समेतको झुठा समाचार सम्प्रेषण गरेको र त्यस्तो समाचारको खण्डन प्रकाशनको लागि इमेल मार्फत पत्राचार गरेकोमा खण्डन पनि प्रकाशन नगरेकोले आवश्यक कारवाहीको लागि सुनिल उप्रेतीले मिति २०७१/१२/१५ गते यस काउन्सिलमा दिनुभएको उजुरीका सम्बन्धमा खण्डन प्रकाशनार्थ काउन्सिलबाट रातो पाटी डट कमलाई पत्राचार र ताकेता गरिएकोमा रातो पाटी डट कमले पठाएको जवाफ काउन्सिलमा मिति २०७२/०३/२२ गते दर्ताभएको र सो विषय प्रक्रियामा रहेको ।

## ४३) कपिलदेव घिमिरे, व्यवस्थापन सल्लाहकार, स्थानीय सरकारको जवाफदेहिता अभिबृद्धि परियोजना

**विरुद्ध**

**कान्तिपुर दैनिक :**

कान्तिपुर दैनिकको मिति २०७१/१२/२४ को अङ्कमा 'जवाफदेहिता अभिवृद्धि कार्यक्रम विवादमा', मिति २०७१/१२/२९ को अङ्कमा ' सुशासन परियोजनामै फर्जी प्रतिवेदन' र मिति २०७२/०१/०७ को अङ्कमा 'अनियमितताको आरोपी नै सुशासन बिज्ञ' शीर्षकहरु राखी समाचार प्रकाशन गरेको र उक्त समाचार भ्रामक, कपोकल्पित, निराधार र असत्य भएको र खण्डन प्रकाशनको लागि पठाउँदा खण्डन पनि प्रकाशित नगरेकोले काउन्सिलबाटै आवश्यक कारवाही गरिपाउँ भनी स्थानीय सरकारको जवाफदेहिता अभिवृद्धि परियोजनाका व्यवस्थापन सल्लाहकार कपिलदेव घिमिरेले यस काउन्सिलमा मिति २०७२/०१/२८ गते दर्ता गराउनुभएको उजुरी निवेदनका सम्बन्धमा खण्डन प्रकाशनार्थ काउन्सिलबाट कान्तिपुर दैनिकलाई पत्राचार र ताकेता गरिएको ।

## ४४) रामचन्द्र कँडेल (उपाध्यक्ष, राष्ट्रिय प्रजातन्त्र पार्टी जिल्ला कमिटि रामेछाप) र दीपक कार्की (सहसचिव, राष्ट्रिय प्रजातन्त्र पार्टी जिल्ला कमिटि रामेछाप)

**विरुद्ध**

**कान्तिपुर दैनिक :**

कान्तिपुर दैनिकको मिति २०७२/०१/२४ गतेको अङ्कमा 'पीडितलाई थोत्रा कपडा' शीर्षक राखी समाचार प्रकाशन भएको र उक्त समाचार खण्डनको लागि अनुरोध गर्दा पनि प्रकाशित नगरेकोले काउन्सिलबाटै आवश्यक कारवाही गरिपाउँ भनी राष्ट्रिय प्रजातन्त्र पार्टी जिल्ला कमिटी रामेछापका उपाध्यक्ष रामचन्द कँडेल र सहसचिव दीपक कार्की समेतले मिति २०७२/०१/२८ गते यस काउन्सिलमा निवेदन दर्ता गराउनुभएको सम्बन्धमा खण्डन प्रकाशनार्थ काउन्सिलबाट कान्तिपुर दैनिकलाइ पत्राचार र ताकेता गरिएको ।

## ४५) **कोपिला भ्याली सेवा समाज, सुर्खेत**

**विरुद्ध**

**हाम्रो नयाँ नेपाल दैनिक :**

हाम्रो नयाँ नेपाल दैनिकको मिति २०७१ चैत्र १९ र २० गतेको अंकमा कोपिला भ्याली सेवा समाजको बारेमा गलत, भ्रामक र कपोलकल्पित समाचार प्रकाशित गरेको र खण्डन गरिदिन आग्रह गर्दा उल्टै धम्काउने गरेको भन्नेसमेत व्यहोरा उल्लेख गरी मिति २०७२/०१/०८ गते संस्थाका अध्यक्ष टोपबहादुर मल्लले उजुरी निवेदन दर्ता गराउनुभएकोले निवेदकले पठाएको खण्डन किन प्रकाशित नगरिएको हो ? प्रकाशन गर्न नमिल्ने कुनै कारण भए ७ (सात) दिनभित्र आधार प्रमाणसहित जवाफ पेश गर्न, अन्यथा निवेदकको खण्डन अविलम्ब प्रकाशन गरी काउन्सिललाई जानकारी दिन मिति २०७२/०१/२७ गते पत्राचार गरिएको र खण्डन प्रकाशनार्थ मिति २०७२/०३/२४ गते ताकेता गरिएको ।

## ४६) **श्री विष्णु भुसाल** (संयोजक, कोम्याट आस्था जे. भी. ब्यवस्थापन समिति) **र श्री प्रणव भट्टराई** (प्रवन्धक, स्थानीय सरकारको जवाफदेहिता अभिबृद्धि परियोजना)

**विरुद्ध**

**कान्तिपुर दैनिक :**

कान्तिपुर दैनिकको मिति २०७१/१२/२४ को अङ्कमा 'जवाफदेहिता अभिवृद्धि कार्यक्रम विवादमा', मिति २०७१/१२/२९ को अङ्कमा ' सुशासन परियोजनामै फर्जी प्रतिवेदन' शीर्षकको समाचार प्रकाशन भएको र खण्डन प्रकाशित नगरी निराधार समाचारको प्रकाशनलाई निरन्तरता प्रदान गरेको भन्ने समेत व्यहोरा राखी कोम्याट आस्था जे. भी. ब्यवस्थापन समिति / एसएलजिपीका संयोजक बिष्णु भुसाल र स्थानीय सरकारको जवाफदेहिता अभिबृद्धि परियोजनाका नि. प्रबन्धक प्रणव भट्टराई समेतले २०७२/०१/०८ गत दर्ता गराउनुभएको उजुरीका सम्बन्धमा खण्डन प्रकाशनार्थ काउन्सिलबाट कान्तिपुर दैनिकलाई पत्राचार र ताकेता गरिएको ।

## ४७) बृजकिशोर साह

### विरुद्ध

### हत्कडी दैनिकका पत्रकार रमेश सुवेदी समेत ४ (चार) :

हत्कडी दैनिकका पत्रकार रमेश सुवेदी, राहत दरबन्दीमा कार्यरत शिक्षक तथा पत्रिकाका सम्पादक पन्नालाल दाश, पत्रिकाका कलैया संबाददाता मुकेश यादव र पत्रकार महासंघका सचिव जयनारायण यादब समेतले आफूसँग रकम माग्ने गरेको र रकम नदिंदा चरित्र हत्या गर्दै आइरहेको भन्नेसमेत व्यहोराको उजुरी बारा, मटिहर्वा - ९ का बृजकिशोर साहले प्रेस काउन्सिल नेपालको सचिवालयमा मिति २०७१/०६/२९ गते दर्ता गराउनुभएको र सोको बोधार्थ अख्तियार दुरुपयोग अनुसन्धान आयोग समेतलाई दिएकोमा अख्तियार दुरुपयोग अनुसन्धान आयोग, टङ्गालबाट समेत आवश्यक कार्यार्थ लेखिआएकोले हत्कडी दैनिकका पत्रकारहरुसँग सो सम्बन्धमा के कसो भएको हो ? भनी २०७१/०७/२६ गते जवाफ मागिएको ।

## ४८) अशिम पोखरेल

### विरुद्ध

### अन्नपूर्णपोष्टः

अन्नपूर्णपोष्ट दैनिकको मिति २०७२/०३/१८ गतेको अङ्कमा आफू जीवित रहँदारहँदै हार्दिक श्रद्धाञ्जलीको विज्ञापन प्रकाशित गरेको र आफू स्वयंले यसको खोजी गर्दा पनि अन्नपूर्णपोष्टले गैरजिम्मेवार जवाफ दिई व्यक्तिगत रुपमा मानमर्दन गरेकोले पत्रिकामाथि हदैसम्मको कारवाही गरीपाऊँ भनी अशिम पोखरेलले मिति २०७२/०३/२८ गते दर्ता गराउनुभएको उजुरीउपर अविलम्व खण्डन प्रकाशित गर्न र कुन स्रोतबाट त्यस्तो विज्ञापन आएको हो ? जवाफ पेश गर्न काउन्सिलबाट मिति २०७२/०३/२८ गते अन्नपूर्णपोष्टलाई पत्राचार गरिएको ।

## ४९) फिरोज अन्सारी

### विरुद्ध

### आर्थिक दैनिकः

आर्थिक दैनिकको मिति २०७२/०३/१७ गतेको अङ्कमा आफू, आफ्नो दिवंगत भाई मोहम्मद अहमद अन्सारी र राष्ट्रिय मानव अधिकार आयोगको माननीय सदस्य मोहना अन्सारीको फोटो सहित प्रकाशित समाचार तथ्यहिन, भ्रामक एवम् आरोपपूर्ण भएकोले आवश्यक कारवाहीको लागि इमेलबाट फिरोज अन्सारीले प्रेस काउन्सिल नेपालमा मिति २०७२/०३/२५ गते दर्ता गराउनुभएको उजुरी प्रकृयामा रहेको ।

## ५०) प्रकृति ओली

### विरूद्ध

### onlinejagat.blogspot.com र nepalitajakhabar.blogspot:

इजरायलमा बस्दै आउनुभएकी आफ्नो आमा संगीता ओलीको मान प्रतिष्ठामा आँच आउने गरी सामाजिक सञ्जाल फेसबुकमा स्टाटस राखी निच शब्द प्रयोग गरेकोमा सो स्टाटसको आधारमा onlinejagat.blogspot.com र nepalitajakhabar. blogspot.com ले गलत समाचार सम्प्रेषण गरी आमाको बाँच्न पाउने अधिकारलाई कुण्ठित गरेकोले आवश्यक कारवाहीको लागि प्रकृति ओलीले मिति २०७२/०३/०९ गते दर्ता गराउनुभएको उजुरी प्रकृयामा रहेको ।

## ५१) श्याम थापासमेत ३ (तीन)

### विरूद्ध

### समय अधिकार राष्ट्रिय दैनिकः

बाँके जिल्लाबाट प्रकाशित समय अधिकार राष्ट्रिय दैनिकको मिति २०७१ भाद्र ३० गतेको अंकमा प्रकाशित 'दशैं कसको चाड ?' शीर्षक समाचारले सामाजिक र धार्मिक दुर्भावना फैलाउने प्रयास गरेकोले आवश्यक कारवाहीको लागि श्याम थापा, इस्तियाक खाँ र राजु श्रेष्ठ समेतले आवश्यक कारवाहीको लागि यस काउन्सिलमा मिति २०७१/०७/२३ गते उजुरी दर्ता गराएको विषयमा आचार संहिता अनुगमन उपसमितिको मिति २०७१ मंसीर ५ गतेको बैठकमा छलफल हुँदा दशैंलाई महान चाडको रुपमा मनाउने धार्मिक समुदायको भावनामा चोट पुग्नेगरी र सामाजिक एवं धार्मिक सद्भावमा प्रतिकूल प्रभाव पर्नेगरी पत्रकार आचारसंहिता-२०६० (संशोधित तथा परिमार्जित-२०६४) को दफा ४ (१), (२) र (५) विपरित प्रकाशन भएको भन्ने सम्बन्धमा सो पत्रिकाबाट ७ (सात) दिन भित्र प्रतिक्रिया माग गर्ने निर्णयानुसार प्रतिक्रिया माग गरिएकोमा समय अधिकार राष्ट्रिय दैनिकले पठाएको प्रतिक्रिया प्रकृयामा रहेको ।



# sfplG;nsf]:j-cgudgM

**१)  प्रेस काउन्सिल नेपाल**

**विरुद्ध**

**नयाँ विकल्प साप्ताहिकः**

नयाँ विकल्प साप्ताहिकको २०७१ असार १६, २०७१ असार २३, २०७१ मंशीर ८ गतेका अङ्कहरुमा प्रकाशित प्रेस काउन्सिल नेपालसँग सम्बन्धित भ्रामक र असत्य समाचारहरुप्रति काउन्सिलको ध्यानाकर्षण भई समाचार सम्प्रेषण गर्दा पत्रकारले पालना गर्नुपर्ने आचारसंहिताप्रति सचेत रहन काउन्सिलबाट मिति २०७१/०९/२१ गते ध्यानाकर्षण गराइएको ।

**२)  प्रेस काउन्सिल नेपाल**

**विरुद्ध**

**महाप्रतिबादः**

मिति २०७१ असार १४गते शनिवारदेखि असार २० गते शुक्रवारसम्मको महाप्रतिवाद साप्ताहिकमा प्रकाशित 'संसार छाड्ने तरखरमा कोइराला' शीर्षकको समाचारका सम्बन्धमा काउन्सिलको ध्यानाकर्षण भई महाप्रतिवाद साप्ताहिकलाई पत्राचार गरिएकोमा महाप्रतिवाद साप्ताहिकले क्षमायाचना गरी पठाएको जवाफ काउन्सिल सचिवालयमा मिति २०७१/०४/२७ गते दर्ताभएको ।

**३)  प्रेस काउन्सिल नेपाल**

**विरुद्ध**

**विभिन्न अनलाइन**

२०७२ बैशाख १२ गतेको भूकम्पपछि  विभिन्न अनलाइनहरुले प्रकाशित गरेका लेखहरु एवं समाचारहरुबाट आम जनतामा भय, त्रास र आतंक सृजना हुन गएकोले राष्ट्रिय विपत्तिको संवेदनशील घडीमा पत्रकारिताका मूल्य, मान्यता र आचारसंहिताको पालना गर्दै पूर्ण उत्तरदायी र जिम्मेवारपूर्ण भइ समाचार सामग्री प्रस्तुत गर्न विभिन्न आलाइनहरुलाई ध्यानाकर्षण गराइएको ।

## विद्युतीय सञ्चारमाध्यमको अभिलेख तथा अनुगमन

विद्युतीय सञ्चार माध्यमहरुले प्रेस काउन्सिलद्वारा जारी गरिएको आचारसंहिता पालना गरे नगरेको अनुगमन गर्नु यसको प्रमुख उद्देश्य हो । सञ्चार माध्यमहरुलाई समाज र राष्ट्रप्रति उत्तरदायी बनाई तथ्यपरक, वस्तुपरक तथा आधिकारिक सूचना प्रवाह गराउन जिम्मेवार बनाउनु अति आवश्यक रहेको परिप्रेक्ष्यमा आफ्नै स्रोत र साधन प्रयोग गरेर प्रारम्भिक रुपमा गत २०७१ फागुन-चैत महिनामा एवं परीक्षणको रुपमा विद्युतीय संचारमाध्यमको अनुगमन कार्य प्रारम्भ गरी प्रतिवेदन काउन्सिलसमक्ष पेश गरिएको छ ।

यसै सन्दर्भमा काउन्सिलअन्तर्गत विद्युतीय र छापा माध्यमको अनुगमनका निमित्त अलग अलग शाखा निर्माण गरी कार्य प्रारम्भ गरिएको छ । विद्युतीय संचारमाध्यम अनुगमनको निमित्त काउन्सिलका सूचना प्रविधि अधिकृतको संयोजकत्वमा ३ सदस्यीय अनुगमन टोली गठन गरी कार्य प्रारम्भ गरिएको छ । अनुगमन टोलीले प्रारम्भमा अनलाइनबाट प्रसारित रेडियो, केही टेलिभिजन र अनलाइन माध्यमलाई अभिलेखीकरण र अनुगमन कार्य प्रारम्भ गरेको थियो । बृहत अनुगमनको लागि तोकिएको जनशक्ति अपर्याप्त त छँदै छ तथापि कार्य प्रारम्भ गर्दै जाँदा यसको समस्या र चुनौतीहरु देखा पर्नेछन् र सोहीबमोजिम समाधानका उपायहरु पनि खोजी गरिने गरी अनुगमन कार्य प्रारम्भ गरिएको र हाल राष्ट्रिय प्रसारणको रुपमा रहेको टेलिभिजनको रेकर्डिङ्ग गरी अभिलेखीकरण कार्यसमेत भइरहेको छ ।

प्रसारित सामग्रीलाई लिएर उठ्ने प्रश्नको निरूपणका निम्ति पनि अनुगमन अपरिहार्य छ, तर व्यवस्थित अभिलेख नभएका कारण अनुगमन प्रणाली व्यवस्थित छैन । यससम्बन्धमा सञ्चारमाध्यमहरूलाई समाज र राष्ट्रप्रति उत्तरदायी बनाई तथ्यपरक, वस्तुपरक तथा आधिकारिक सूचना प्रवाह गराउन जिम्मेवार बनाउन तथा आचारसंहिताको पालना गरे/नगरेको अनुगमन गर्ने उद्देश्यसहित विद्युतीय सञ्चारमाध्यमको अनुगमन गर्नु अत्यन्तै जरुरी भइसकेको सन्दर्भलाई उल्लेख गरी आ.व. २०७०।७१ मा विद्युतीय सञ्चारमाध्यमको अनुगमन गरी स्वस्थ, स्वच्छ र मर्यादित पत्रकारिताको विकास गर्नका लागि विस्तृत कार्ययोजना बनाई सञ्चारमाध्यमको अभिलेखीकरण र अनुगमनको कार्ययोजनासहित सञ्चार मन्त्रालयमार्फत नेपाल सरकारसँग बजेट माग गरिएको भएतापनि प्राथमिकतामा परेको थिएन तर आ.व. २०७२।७३ को बजेटमा विद्युतीय सञ्चारमाध्यमको अनुगमनका लागि थोरै भएपनि बजेट विनियोजन भएको छ र अनुगमनका लागि आवश्यक डिभाइस तथा सफ्टवेयर खरिद गरी अनुगमन कार्य अगाडि बढाउने लक्ष्य काउन्सिलले लिएको छ ।

## विद्युतीय सञ्चारमाध्यमका विकृति

(फागुन-चैत, २०७१)

### १ पृष्ठभूमि :

प्रेस काउन्सिल नेपाल स्वस्थ एवं मर्यादित पत्रकारिताको विकासका लागि स्थापित अविच्छिन्न उत्तराधिकारवाला स्वशासित र संगठित संस्था हो । यसको स्थापना वि.सं.२०२७ साल आश्विन ६ गते भएको हो । प्रेस काउन्सिल ऐन, २०४८ बमोजिम स्वतन्त्र र स्वशासित संगठित संस्थाको रुपमा मर्यादित पत्रकारिताको विकासका लागि आचार संहिता निर्माण गरी कार्यान्वयनका लागि क्रियाशील रहँदै आएको छ । यसको अलावा पत्रकारितासम्बन्धी नीतिलाई

समय समयमा पुनरावलोकन गरी सम्बन्धित क्षेत्रको राय सल्लाह नेपाल सरकारलाई सुझाव दिने, पत्रपत्रिका वितरण स्थितिको अद्यावधिक अभिलेख राख्ने, पत्रपत्रिकामा प्रकाशित समाचारसँग सम्बन्धित विषयलाई लिएर कसैले उजुर दिएमा आवश्यक कारबाही गर्ने, प्रकाशित असामाजिक र आपत्तिजनक विषयउपर छानविन गर्ने जस्ता कार्य यसले गर्दै आइरहेको छ ।

प्रेस काउन्सिल नेपालले २०६४ सालको प्रथम संविधानसभा निर्वाचनमा आचारसंहिता अनुगमन गरेको थियो । यसअगाडि कुनै पनि संघसंस्थाले त्यसप्रकारको अनुगमन गरेको अवस्था थिएन ।

विद्युतीय सञ्चार माध्यमहरुले प्रेस काउन्सिलद्वारा जारी आचारसंहिता पालना गरे नगरेको अनुगमन गर्नु पनि यसको प्रमुख उद्देश्य हो । सञ्चार माध्यमहरुलाई समाज र राष्ट्रप्रति उत्तरदायी बनाई तथ्यपरक, वस्तुपरक तथा आधिकारिक सूचना प्रवाहको निम्ति जिम्मेवार बनाउन अति आवश्यक रहेको परिप्रेक्ष्यमा हाललाई आफ्नै स्रोत र साधन प्रयोग गरेर प्रारम्भिक एवं परीक्षणको रुपमा विद्युतीय सञ्चारमाध्यमको अनुगमन गर्ने कार्य प्रारम्भ गरिएको छ ।

यसै सन्दर्भमा काउन्सिलअन्तर्गत विद्युतीय र छापा माध्यमको अनुगमनका निमित्त अलग अलग शाखा क्रियाशील छन् । विद्युतीय सञ्चारमाध्यम अनुगमनको निम्ति काउन्सिलका सूचना प्रविधि अधिकृतको संयोजकत्वमा ३ सदस्यीय टोली गठन गरी कार्य प्रारम्भ भएको छ । टोलीले प्रारम्भमा अनलाइनबाट प्रसारित रेडियो र केही टेलिभिजनको अभिलेखीकरण र अनुगमन कार्य प्रारम्भ गरेको छ । बृहत अनुगमनको लागि तोकिएको जनशक्ति अपर्याप्त त छँदै छ तथापि कार्य प्रारम्भ गर्दै जाँदा यसको समस्या र चुनौतीहरु देखापर्नेछन् र सोहीबमोजिम समाधानका उपायहरु पनि खोजी गरिने छ । अनुगमनका लागि देहायको आचारसंहितालाई आधार बनाइएको छ ।

## पत्रकार आचारसंहिता-२०६०

*(संशोधित तथा परिमार्जित-२०६४)*

***पत्रकार र सञ्चारमाध्यमहरूले निर्वाह गर्नुपर्ने कर्तव्य :***

*(१) प्रेस स्वतन्त्रताको संरक्षण र सम्वर्द्धन : विचार र अभिव्यक्ति स्वतन्त्रता नागरिकहरूको आधारभूत अधिकार भएकाले यसको संरक्षण र सम्वर्द्धनका निम्ति सदैव दृढ, सजग र सतर्क रहनुपर्दछ ।*

*(२) मानवीयता, मानवअधिकार र अन्तर्राष्ट्रिय सम्बन्धको सम्मान : मानवअधिकारसम्बन्धी अन्तर्राष्ट्रिय लिखतहरूले प्रत्याभूत गरेका हक, अधिकार, सिद्धान्त, मान्यता र प्रचलनको सम्मान गर्दै लोकतन्त्र, न्याय, समानता, मानवीयता, शान्ति र अन्तर्राष्ट्रिय समझदारीको संरक्षण र सम्वर्द्धन तथा मित्र राष्ट्रहरूबीचको भाइचारा अभिवृद्धि ।*

*(३) सूचनाको हकको रक्षा र प्रचलन : आम नागरिकको सुसूचित हुन पाउने हक-अधिकारको रक्षा गर्न सदैव क्रियाशील एवं समर्पित रहनुपर्ने ।*

*(४) सत्य तथ्य सूचनाको सम्प्रेषण : पत्रकार-सञ्चारमाध्यमले स्रोत र आधार उल्लेख गरी सत्य–तथ्य, वस्तुनिष्ठ एवं सन्तुलित सूचना सम्प्रेषण गर्ने ।*

*(५) सम्पादकीय स्वतन्त्रता र उत्तरदायित्व : सम्पादकीय स्वतन्त्रताको सर्वमान्य सिद्धान्तबमोजिम सञ्चारमाध्यमबाट उत्पादित-प्रकाशित–प्रसारित सामग्रीको उत्पादन तथा सम्प्रेषणको*

अन्तिम जिम्मेवारी र अधिकार सम्पादकमा निहित रहनेछ । सञ्चारमाध्यमले आफ्नो माध्यममा सम्पादकीय स्वतन्त्रताको प्रत्याभूति गर्नुपर्दछ ।

(६) गोपनीयताको हकको सम्मान : सार्वजनिक हितमा प्रतिकूल असर पार्नेबाहेकको अवस्थामा वैयक्तिक एवं व्यावसायिक गोपनीयताको सम्मान गर्नुपर्दछ ।

(७) उच्च व्यावसायिक अभ्यास : पत्रकारिताका आधारभूत मान्यता र सिद्धान्तप्रति प्रतिबद्ध रही जवाफदेही एवं उत्तरदायित्व तथा विश्वसनीयता निर्वाह गर्न निष्ठापूर्वक उच्च व्यवसायिक अभ्यास गर्नुपर्दछ ।

(८) शिष्ट व्यवहार : व्यावसायिक अभ्यासमा सामाजिक शिष्टताको सम्मान गर्दै नैतिक, शिष्ट एवं मर्यादित कार्यशैली र भाषाको प्रयोगमा सजग रहनुपर्दछ ।

(९) गल्ती सच्याउने तत्परता : प्रकाशन तथा प्रसारणका क्रममा भएका त्रुटि एवं गल्तीको जानकारी हुनासाथ यथाशीघ्र त्यस्तो गल्ती एवं त्रुटि सच्याउने तथा सप्रमाण खण्डन वा प्रतिक्रिया आएमा प्रष्ट भाषामा उचित स्थान दिई प्रकाशन-प्रसारण गर्नु पत्रकार तथा सञ्चारमाध्यमको कर्तव्य हुनेछ ।

(१०) सामाजिक दायित्व : असक्त, असहाय, अपाङ्ग, बालबालिका, महिला तथा पिछडिएका वर्ग, क्षेत्र, भाषा-भाषी र अल्पसंख्यक समुदायको उत्थान र विकासमा सूचना र विचार प्रवाहद्वारा विशेष सहयोग पुऱ्याउनु पत्रकार र सञ्चारमाध्यमको सामाजिक दायित्व हुनेछ ।

(११) आपसी सम्बन्ध : पत्रकार तथा सञ्चार-माध्यमहरूबीचको आपसी सम्बन्ध व्यावसायिक, स्वस्थ, संयमित, मर्यादित र पेशानिष्ठ हुनुपर्दछ ।

**पत्रकार र सञ्चारमाध्यमले गर्न नहुने कार्यहरू:**

(१) राष्ट्रिय अखण्डतामा प्रतिकूल प्रभाव पार्न नहुने : बहुभाषिक, बहुधार्मिक र बहुजातीय मुलुक नेपालको सार्वभौमसत्ता, अखण्डता वा विभिन्न जात, जाति वा सम्प्रदायहरूका बीचको सु-सम्बन्धमा खलल पार्ने वा गाली-बेइज्जती वा अदालतको अवहेलना हुने वा सार्वजनिक शिष्टाचार वा नैतिकताको प्रतिकूल हुने समाचार र विचार प्रकाशन, प्रसारण तथा उत्पादन-वितरण गर्नुहुँदैन ।

(२) सामाजिक न्याय र सद्भावमा प्रतिकूल असर पार्न नहुने : सामाजिक न्याय र सद्भावमा प्रतिकूल असर पुऱ्याउने तथा व्यावसायिक मर्यादा विपरीत हुने विकृत र उत्तेजक सामग्री प्रकाशन-प्रसारण तथा उत्पादन-वितरण गर्नुहुँदैन ।

(३) समाचारको गोप्य स्रोत खोल्न नहुने : समाचार प्रस्तुत गर्दा समाचारको आधिकारिकता र विश्वसनीयताका लागि स्रोत उल्लेख गर्नुपर्दछ । तर, गोप्य स्रोतको संरक्षण गर्ने दायित्व पत्रकारको हुने हुँदा स्रोतको इच्छा र अनुमतिबेगर त्यस्ता गोप्य स्रोतको नाम वा पहिचान खुलाउनुहुँदैन ।

(४) निजी स्वार्थपूर्तिका लागि प्रयोग गर्न नहुने : सञ्चारमाध्यम वा पत्रकारले प्रकाशन-प्रसारण वा समाचार सामग्रीको रूपमा वितरण गर्ने उद्देश्यले लिइएका सूचना सामग्री सार्वजनिक प्रयोग नगरी व्यक्ति वा संस्थाको निजी स्वार्थपूर्तिका लागि प्रयोग गर्नुहुँदैन ।

(५) भेदभाव हुने गरी सूचनाको सम्प्रेषण गर्न नहुने : जातीय, लैङ्गिक, धार्मिक, क्षेत्रीय, भाषिक र रङ्गजस्ता आधारमा भेदभाव हुने गरी समाचार र विचारको सम्प्रेषण गर्नुहुँदैन ।

*(६) पीडितलाई थप पीडा पुग्ने गरी सूचना सम्प्रेषण गर्न नहुने : पीडितलाई थप पीडा पुग्ने गरी भाषा, ध्वनि, तस्बिर, चित्र र दृश्यसमेतको प्रयोगमार्फत समाचार तथा विचार प्रकाशन-प्रसारण वा उत्पादन-वितरण गर्नुहुँदैन ।*

*(७) पीडित व्यक्तिको नाम, ठेगाना खुलाउन नहुने : यौनजन्य अपराध र सामाजिक अपहेलना एवं घृणाजन्य घटना वा सन्दर्भमा पीडित व्यक्तिहरूको सचेत स्वीकृतिबिना नाम, ठेगाना र पहिचान खुल्नेगरी समाचार, तस्बिर र दृश्य प्रकाशन-प्रसारण वा उत्पादन-वितरण गर्नुहुँदैन ।*

*(८) हिंसा, आतङ्क र अपराधलाई प्रोत्साहन गर्न नहुने : विध्वंस, हिंसा, आतंक र अपराधलाई प्रोत्साहन हुने गरी तथा त्यस्ता क्रियाकलापलाई अतिरञ्जित गर्ने गरी समाचार, विचार, तस्बिर, मत सर्वेक्षण, ध्वनि वा दृश्यहरू प्रस्तुत गर्नुहुँदैन ।*

*(९) बिभत्स दृश्य र तस्बिर प्रकाशन/प्रसारण गर्न नहुने : समाजमा नैराश्य, घृणा, सन्त्रास र उत्तेजना फैलाउने किसिमका नग्न, क्षतविक्षत र बिभत्स दृश्य एवं तस्बिरहरू असान्दर्भिक, अश्लील र उत्तेजना फैलिन सक्ने प्रकारले प्रस्तुत गर्नुहुँदैन ।*

*(१०) घटनासँग असम्बन्धित व्यक्तिको नाम उल्लेख गर्न नहुने : घटनासँग सम्बन्ध नभएका नातेदार वा नजिकका व्यक्तिको नाम जोडी उसको मर्यादामा आँच पुग्ने वा चरित्रहत्या हुने गरी समाचार सामग्री प्रस्तुत गर्नुहुँदैन ।*

*(११) तथ्य बङ्ग्याउन नहुने : कुनै टिप्पणी वा स्पष्टताबिना तस्बिर, भिडियो दृश्य, ध्वनि वा तथ्यलाई तोडमोड गरी पहिचान नै बदल्ने वा गलत पहिचान दिने वा गलत अर्थ लाग्ने गरी समाचार सामग्री प्रकाशन-प्रसारण वा उत्पादन-वितरण गर्नुहुँदैन ।*

*(१२) विज्ञापनलाई समाचारका रूपमा प्रस्तुत गर्न नहुने : विज्ञापनलाई समाचारको रूपमा प्रस्तुत गर्नु, विज्ञापनमार्फत समाचारको खण्डन गर्नुहुँदैन । त्यस्तै, एउटा सञ्चारमाध्यमबाट प्रकाशित प्रसारित समाचारको खण्डन सामान्यतः अर्को सञ्चारमाध्यमले गर्नुहुँदैन ।*

*(१३) स्रोत उद्धृत नगरी पुनः प्रयोग गर्न नहुने : कुनै समाचार संस्था वा माध्यमले प्रवाहित गरेको समाचार वा प्रकाशित-प्रसारित सामग्री उपयोग गर्दा त्यसको मूल स्रोत उद्धृत नगरी पुनः प्रकाशन, प्रसारण वा वितरण गर्नुहुँदैन । त्यसरी उद्धृत गर्दा सामान्यतः मूलस्रोतको सहमति लिनुपर्दछ ।*

*(१४) स्रोतसँग सम्बन्ध : पत्रकार वा सञ्चारमाध्यमले समाचारस्रोतसँग व्यावसायिक मर्यादा र सीमा बाहिर हुने गरी अनुचित सम्बन्ध राख्न एवं व्यक्ति वा संस्थाको निहित स्वार्थका निम्ति सञ्चारमाध्यमको दुरुपयोग गर्नुहुँदैन ।*

## ३. मिडिया अनुगमन विधि

विद्युतीय सञ्चारमाध्यमको अनुगमन गर्दा प्रायः वस्तुगत विधि (Quantitative Method) र विषयगत विधि (Qualitative Method) को अवलम्बन गर्ने गरिन्छ । विषयगत विधिमा तथ्यगत प्रशोधन समेत गर्नुपर्नेमा श्रोत साधनको अभावका कारण सम्भव नभएकोले यो अवधिको वस्तुगत विधिबाट अनुगमन गरिएको छ ।

## ४ सञ्चारमाध्यम छनोटको आधारः

१) उपत्यकाका सरकारी, निजी र सामुदायिकरुपमा सञ्चालनमा रहेका सञ्चारमाध्यमहरुमध्ये
२) उपत्यकाबाट प्रसारित लोकप्रिय र नियमित सञ्चारमाध्यमहरु,
३) राजनीतिक दलहरुप्रति झुकाव राख्ने केही सञ्चारमाध्यम,

## ५. टेलिभिजन तथा रेडियो माध्यममा प्रसारण हुने कार्यक्रमहरूको छनौट

विद्युतीय सञ्चारमाध्यमबाट प्रसारित हुने सम्पूर्ण सामग्री वा २४ सै घण्टाको अनुगमन गर्न सके निकै प्रभावकारी हुन सक्तछ । विश्वका केही देशमा २४ सै घण्टा सञ्चारमाध्यमबाट प्रसारित सामग्रीको अभिलेखीकरण तथा अनुगमन गर्ने गरिन्छ । स्रोत र साधनको अपर्याप्तता रहेकोले हाललाई विद्युतीय सञ्चारमाध्यममा प्रसारित सामग्रीमध्ये अधिक जनचासोको विषयमा अनुगमन अध्ययन गर्नु उपयुक्त ठानी समाचार र समाचारसम्बन्धी कार्यक्रमलाई आधार बनाई अनुगमन कार्य गरिएको छ ।

१) समाचार (News)
२) समाचारसम्बन्धी कार्यक्रम (News Related Program)
३) अन्तरवार्ता (Interview)
ख) अनलाइनबाट प्रकाशित तथा प्रसारित हुने सामग्रीको छनौट
१) समाचार (News)
२) लेख (Articles)
३) अन्तरवार्ता (Interview)
६ अनुगमनका लागि छनोट गरिएका सञ्चारमाध्यमहरु

## रेडियो

| क्र.सं | मिडिया |
|---|---|
| १. | कान्तिपुर एफएम |
| २. | रेडियो नेपाल |
| ३. | रेडियो सगरमाथा |
| ४ | रेडियो मिर्मिरे |
| ५ | उज्यालो ९० नेटवर्क |
| ६ | नेपालवाणी नेटवर्क (रेडियो उपत्यका) |
| ७. | सिटिजन एफएम |
| ८. | टाइम्स एफएम |
| ९. | नेपाल एफएम |

## टेलिभिजन

| क.सं | मिडिया |
|---|---|
| १. | नेपाल टेलिभिजन |
| २. | कान्तिपुर टेलिभिजन |
| ३. | सगरमाथा टेलिभिजन |
| ४ | इमेज टेलिभिजन |
| ५ | न्यूज २४ टेलिभिजन |
| ६ | एभिन्यूज टेलिभिजन |
| ७. | हिमालय टेलिभिजन |
| ८. | माउण्टेन टेलिभिजन |
| ९. | तराई टेलिभिजन |
| १०. | नेपाल वन टेलिभिजन |
| ११ | एबिसी टेलिभिजन |

*दैनिक २ वटा टेलिभिजनका दरले पालैपालो अभिलेखीकरण र अनुगमन गरिएको छ ।*

## अनलाइन

| क.सं | मिडिया |
|---|---|
| १. | www.ekantipur.com |
| २. | www.onlinekhabar.com |
| ३. | www.bizmandu.com |
| ४ | www.nepalpati.com |
| ५ | www.himalkhabar.com |

रेकर्डिङ अवधि (Recording Hours)

| | |
|---|---|
| टेलिभिजन | बेलुकी ६:०० बजेदेखि ९०० बजेसम्म (दैनिक ३ घण्टा)<br>बिहान ६:०० बजेदेखि ९:०० बजेसम्म (दैनिक ३ घण्टा) |
| रेडियो | बेलुकी ६:०० बजेदेखि ९०० बजेसम्म (दैनिक ३ घण्टा)<br>बिहान ६:०० बजेदेखि ९:०० बजेसम्म (दैनिक ३ घण्टा) |
| अनलाइन | बिहान ६:०० बजेदेखि बेलुका ९:०० बजेसम्म (दैनिक १५ घण्टा) |

# फागुन-चैत २०७१को अनुगमनबाट देखिएका तथ्यहरूको विवरण

**२०७१।१०।२५**

काठमाडौंबाट प्रसारित हुने रेडियो मिर्मिरे एफएमको २०७१।१०।२५ गते बिहान ६:०० को समाचारमा 'नेकपा एमालेका अध्यक्ष भीम रावलले पनि सडक संघर्ष...'. भनी गलत प्रसारण गरेको र सोलाई नसच्याएकोले पत्रकार आचारसंहिता २०६० (संशोधित तथा परिमार्जित २०६४) को दफा ३ उपदफा (७) र (९) आकर्षित ।

**२०७१।१०।२७**

२०७१।१०।२७ गते बेलुका ६:३० को 'कान्तिपुर हेडलाइन' मा समाचारको हेडलाइन समाचार वाचनपछि विना जानकारी विज्ञापन प्रसारण गरिएको । पूर्व जानकारीबिना उच्च व्यावसायिक अभ्यासको कमी र विज्ञापनलाई समाचारको रुपमा प्रसारित गरेको देखिन्छ। पत्रकार आचारसंहिता दफा ३ उपदफा (७) र दफा ४ उपदफा (१२) आकर्षित ।

सोही दिनको सोही समाचार बुलेटिनमा भक्तपुरबाट समाचारको रिपोर्टिङ्गमा समाचार शुरु भएको १५ देखि १७ औं मीनेटसम्म भाषागत त्रुटिसमेत देखिएको छ ।

**२०७१।१०।२८**

२०७१।१०।२८ गते बिहान ६:३० को 'कान्तिपुर डायरी' मा समाचारको हेडलाइन समाचार वाचनपछि निरन्तर विना जानकारी विज्ञापन प्रसारण गरिएको छ । त्यसैगरी सोही समाचारको बीचमा ६:५१ बजे KSA Business School को विज्ञापन प्रसारित भएको छ ।

**२०७१।११।३**

नेपालवाणी नेटवर्क २०७१।११।३ गते बेलुका ७:३० को 'आर्थिक परिवेश' मा फोनबाट लिइएको अन्तरवार्तामा कार्यक्रम प्रस्तोताले नेपाल विद्युत प्राधिकरण कर्मचारी युनियनका अध्यक्ष रामप्रसाद रिमाललाई '...तपाईंहरु कमिशन खानुहुन्छ, संगठन खोलेर बस्नुभएको छ, काम गर्नुहुन्न, कमिशन कहाँबाट आउँछ भनिरहनुहुन्छ भन्ने आरोप लागिरहेको हैन र ? " भनेर सोधिनु, अन्तिममा '...उहाँ हुनुहुन्थ्यो नेपाल विद्युत प्राधिकरण कर्मचारी युनियनका अध्यक्ष रामप्रसाद रिसाल' भनी नाम उच्चारणमा गल्ती गरिनु ।

**२०७१।११।६**

१) उज्यालो ९० नेटवर्क २०७१।११।६ गते बेलुका ७:००-७:३० बजेसम्म प्रसारित समाचार र ८:०० बजेको नेपालदर्पणमा क्रमशः समाचार प्रसारण र हेडलाइनसँगै विनाजानकारी विज्ञापन प्रसारण गरेको ।

१) सोही नेटवर्कको २०७१।११।७ गते बिहान ६:०० बजे प्रसारित कायाकैरनको हेडलाइन र ७:०० बजे प्रसारित समाचारको जनकपुरको स्थलगत रिपोर्टिङ्गसँगै विनाजानकारी विज्ञापन प्रसारण गरेको ।

**२०७१।११।४ र ५**

१) कान्तिपुर एफएमको २०७१।११।४ गते बेलुका ६:३० मा प्रसारित कान्तिपुर डायरी समाचार प्रसारणसँगै विना जानकारी विज्ञापन प्रसारण ।

२) सोही एफएमको २०७१।११।५ गते बेलुका ६:३० बजे प्रसारित कान्तिपुर डायरीमा '...ती दललाई पूर्व राजा ज्ञानेन्द्रकै हालतमा पुऱ्याइदिने भन्नुभयो' भनी समाचारवाचकबाट बोलिएको र सोही समाचारको बझाङ डायरी रिपोर्टिङ्गमा 'एचआइभी संग्रामित' भनी अशुद्ध वाचनसमेत गरेको ।

**२०७१।११।१० बेलुका र ११ गते बिहान**

१) नेपालवाणी नेटवर्कको २०७१।११।१० गते बेलुका ६:०० बजेसम्म प्रसारित राष्ट्रिय खबरमा समाचारवाचन अशुद्ध र अस्पष्ट देखिएको र ७:३० बजे प्रसारित घटना र विश्लेषणमा समाचार प्रसारण गर्दागर्दै विना सूचना हेडलाइनसँगसँगै विज्ञापन प्रसारण गरेको । ८:०० बजे राष्ट्रिय खबरमा पनि समाचार हेडलाइनसँगसँगै विना सूचना विज्ञापन प्रसारित गरिएको ।

२) सोहीनेपालवाणी नेटवर्कको २०७१।११।११ गते बिहान ७:०० बजे प्रसारित वाणीबहसमा कार्यक्रम सञ्चालकबाट '...एक्कासी आएर एडीसीले हान्यो भनी प्रतिक्रिया दिएका छन्' मा भाषागत शुद्धता नभएको ।

३) रेडियो नेपालबाट २०७१।११।९ गते बेलुकी ७:०० बजे प्रसारित समाचारमा रिपोर्टको बीच विना जानकारी विज्ञापन प्रसारण ।

**२०७१।११।११ बेलुका र १२ गते बिहान**

१) काठमाडौंबाट प्रसारित हुने सिटिजन एफएमको २०७१।११।११ गते बेलुका करिब ६:०२:३५ '...संविधान निर्माणको निर्णायक आन्दोलनमा युद्धकालको सेनाको जस्तो भूमिका निर्वाह गर्न कार्यकर्तालाई दाहालको निर्देशन' भनी मूल समाचार प्रशारण गरिएको ।

२) सोही एफएमको २०७१।११।११ गते सिटिजन मूल समाचारमा करिब ६:०३:०९ मूल हेडलाइनसँगै विनाजानकारी विज्ञापन प्रसारण भएको ।

३) २०७१।११।११ गते बेलुका ६:०० बजे करिब ६:०६:३० 'अध्यक्ष दाहालले ३० दलीय आन्दोलनलाई युद्धको संज्ञा दिँदै......' भनी समाचार प्रसारण गरेको ।

४) सिटिजन एफएमले नै २०७१।११।११ गते बेलुका ६:०० करिब ६:१२:१३ बजे समाचार वाचन गर्दागर्दै बीचमा अन्य धुन प्रसारण भएको । ६:२३:४४ मा स्थलगत रिपोर्टसँगै विनाजानकारी विज्ञापन प्रसारण गरेको ।

६) बेलुका ७:०० बजे तपाईंको आवाज कार्यक्रममा '...यिनीहरुलाई आर्मी शासन लाएर.... भ्रष्टाचारी...' जस्ता भाषा प्रयोग गरी स्रोताको आवाजलाई स्थान दिएको । यसमा पत्रकार आचारसंहिता २०६० (संशोधित तथा परिमार्जित २०६४) को दफा ३ उपदफा (८) र दफा ४ को उफदफा (२) आकर्षित भएको देखिन्छ ।

७) सिटिजन एफएमले २०७१।११।११ गते बेलुका ७:०० बजे तपाईंको आवाज नामक कार्यक्रममा '...खसी पार्नुपर्छ, भाले खोज्ने पोथीहरुलाई...' जस्ता भाषा प्रयोग गरेको ।

८) तपाईंको आवाज कार्यक्रममा '..एउटा लास...६०१ सभासद...ज्यूँदा मूर्दा...' र

'...औंठाछाप....भेडाबाखा...' जस्ता संविधानसभा र सभासद्‌लाई लक्ष्यित अपमानजन्य भाषा प्रसारण गरेको ।

९) २०७१।११।१२ गते बिहान ६:०० देखि ६:४५ बजेसम्म प्रसारित सिटिजन मूल समाचारमा मूल हेडलाइनसँग विनाजानकारी विज्ञापन प्रसारण भएको ।

**२०७१।११।१२ बेलुका र १३ गते बिहान**

१) २०७१।११।१२ गते बेलुका ६:३० बजे कान्तिपुर डायरी समाचारको हेडलाइनसँगै विना जानकारी विज्ञापन प्रसारण गरेको, बीचमा पनि विज्ञापन प्रसारण गरेको, बेलुका ९:०० बजे समाचारबीच विना जानकारी विज्ञापन प्रसारण गरेको । २०७१।११।१३ गते बिहान ६:३० बजे पनि यहि भूल दोहोरिएको ।

३) नेपालवाणी नेटवर्क एफएम २०७१।११।१३ गते बेलुका ७:३० को घटना र विश्लेषणमा एकतर्फी एउटा पार्टीको पक्षमा समाचार सम्प्रेषण गरी अर्को पार्टीको विपक्ष वा विरुद्धमा मात्रै समाचार रिपोर्ट गरेको जस्तै-'वार्ता र संवादको विपक्षमा एमाओवादी नेता बाबुराम भटट्राई (एक रिपोर्ट)', सहमतिको आन्दोलनबाट अघि बढ्ने एमाओवादीभित्र विवाद (अन्तरवार्ता)', सबै राजनीतिक रिपोर्ट तथा समाचारहरु एमाओवादीविरुद्धमात्र लक्ष्यित, बेलुका ८:०० बजे समाचारको मुख्य हेडलाइनसँगै विना जानकारी विज्ञापन प्रसारण गरेको ।

४) काठमाडौंबाट प्रसारित हुने  रेडियो सगरमाथाको २०७१।११।१२ गते बेलुका ६:४५ को अन्तर्राष्ट्रिय समाचारमा '...इस्लामिक स्टेट ९क्ष्क्० लडाकुहरुको लडाइँका लागि न्यूजिल्याण्डले १०० भन्दा बढी सैनिक इराक पठाउने...' भनिएको, क्ष्क विरुद्ध लडाइँको लागि सैनिक पठाउने हुनुपर्नेमा उल्टो अर्थ लाग्ने गरी समाचार प्रसारण गरेकोले आचारसंहिता २०६० (संशोधित तथा परिमार्जित २०६४) को दफा ४ उपदफा (११)  आकर्षित भएको ।

**२०७१।११।१५ बेलुका र १६ गते बिहान**

१) रेडियो मिर्मिरेको २०७१।११।१५ गते बेलुका ६:०० बजेको समाचार प्रसारण हुँदाहुँदै अन्य धुन बजेको ।

२) २०७१।११।१६ गते बिहान ६:०० बजेको समाचार हेडलाइनसँगै विना जानकारी विज्ञापन प्रसारण गरेको ।

३) २०७१।११।१६ गते बिहान ६:०० बजेको समाचारमा अशुद्धवाचन भएको ।

**२०७१।११।१९ बेलुका**

१) काठमाडौंबाट प्रसारित हुने कान्तिपुर एफएमको २०७१।११।१९ गतेको बेलुका ६:३० बजेको कान्तिपुर डायरीमा समाचार हेडलाइनसँगै विना जानकारी विज्ञापन प्रसारण गरेको गरेकोले  पत्रकार आचारसंहिता २०६० (संशोधित तथा परिमार्जित २०६४) को दफा ४ उपदफा (१२)  आकर्षित भएको ।

**२०७१।११।२२ बेलुका र २०७१।११।२३ बिहान**

१) रेडियो मिर्मिरे २०७१।११।२३ गते बेलुका ६:०० बजेको मिर्मिरे खबरमा मुख्य समाचारसँगै विना जानकारी विज्ञापन प्रसारण गरेको । त्यसैगरी समाचारका विभिन्न अंशमा भाषागत अशुद्धता

रहेको देखिन्छ ।

**२०७१।११।२६ बेलुका र २०७१।११।२७ बिहान**

१) कान्तिपुर एफएम २०७१।११।२६ गते बेलुका ६:३० बजेको कान्तिपुर डायरीमा समाचारसँगै विना जानकारी विज्ञापन प्रसारण गरेको ।

२) २०७१।११।२७ गते बिहान ६:३० बजेको कान्तिपुर डायरीमा '...यसबाट भारी रकम दोहन गरी ....श्रमसम्बन्धी सभापति (सभासद्)....प्रचलित मूल्यभन्दा बढी टिकट मिलाएर...' (श्रोत बिना नै ठोकुवासहित) समाचार प्रसारण गरेकोले पत्रकार आचारसंहिता २०६० (संशोधित तथा परिमार्जित २०६४) को दफा ३ उपदफा (४) आकर्षित ।

**२०७१।१२।१ बेलुका र २०७१।१२।२ बिहान**

१) नेपालवाणी नेटवर्कको रेडियो उपत्यकालगायत २०७१।१२।१ गते बेलुका ८:०० बजेको नेपालवाणी समाचारमा आदिवासी जनजाति महासंघका पूर्व महासचिव आङकाजी शेर्पाको बाइट- '...केपी ओलीलाई हामी चेतावनी दिन चाहन्छौं, केपी ओली तिम्रो मानसिक सन्तुलनको उपचार भएन, बर्बराउने थुतुनोमा चाबी लागेन भने आदिवासी जनजाति, मधेशी, मुस्लिमले लिबियाको कर्नेल गद्दाफीजस्तो गल्ली गल्लीमा छ्यानेर हत्या गर्न नपरोस्' भन्ने प्रत्यक्ष भनाईसहित ज्यान लिने आशययुक्त समाचार गरेकोले पत्रकार आचारसंहिता २०६० (संशोधित तथा परिमार्जित २०६४) को दफा ४ उपदफा (१), उपदफा (२) र उपदफा (८) आकर्षित भएको ।

**२०७१।११।३० बेलुका**

१) काठमाडौंबाट प्रसारित हुने न्यूज २४ टेलिभिजन २०७१।११।३० गते बेलुका ७:०० बजेको ल्भधक२ठ मा समाचार हेडलाइनसँगै विना जानकारी विज्ञापन प्रसारण र विज्ञापन सकिएपछि पनि समाचारवाचिकाले 'हामी निरन्तर न्यूजमा छौं' भनेर पत्रकार आचारसंहिता २०६० (संशोधित तथा परिमार्जित २०६४) को दफा ४ उपदफा (१२) उल्लंघन ।

**२०७१।१२।११ बेलुका र २०७१।१२।१२ बिहान**

१) उज्यालो ९० नेटवर्क २०७१।१२।१२ गते बिहान ६:०० बजेको कायाकैरनमा समाचार हेडलाइनसँगै विना जानकारी विज्ञापन प्रसारण ।

**२०७१।१२।१२ बेलुका**

१) नेपाल टेलिभिजनको २०७१।१२।१२ गते बेलुका ७:०० बजेको समाचारमा मुख्य समाचार हेडलाइनसकिनासाथ विना जानकारी विज्ञापन प्रसारण ।

२) नेपाल टेलिभिजनको २०७१।१२।१२ गते बेलुका ८:०० बजेको समाचारमा मुख्य समाचार बीचमा विज्ञापन प्रसारण ।

**२०७१।१२।१६ बेलुका**

१) सिटिजन एफएमको २०७१।१२।१६ गते बेलुका ६:०० बजेको समाचारमा मुख्य समाचार हेडलाइन सकिनासाथ विना जानकारी विज्ञापन प्रसारण ।

**२०७१।१२।१७ बेलुका**

१) हिमालय टिभीको २०७१।१२।१७ गते बेलुका ७:०० बजेको हिमालयन प्राइम न्यूजमा मुख्य समाचार हेडलाइनसँगै विना जानकारी विज्ञापन प्रसारण ।

**२०७१।१२।२१**

१) अनलाइन पत्रिकाको रुपमा प्रकाशित www.sanopati.com को २०७१।१२।२१ गते 'मोटरसाइकल बसमा ठोकिंदा सिरहामा चार युवाको घटनास्थलमै मृत्यु शीर्षक दिई प्रकाशित समाचारमा पूरा सूचना प्राप्त नभएको, मोटरसाइकलमा ४ जना सवार थिए त ? कसरी ४ जनाको मृत्यु भयो ? भन्ने तथ्य खुल्न नसकेको । साथै यसमा विभत्स तस्वीर प्रकाशन गरेको । पत्रकार आचारसंहिता २०६० (संशोधित तथा परिमार्जित २०६४) को दफा ३ उपदफा (४) र दफा ४ को (९) आकर्षित ।

सिरहा, २१ चैत । सिरहा र सप्तरी जिल्लाको सिमानामा पर्ने बलान पुलमा मोटरसाइकल एक रात्री बसमा ठोकिँदा चार युवाको घटनास्थलमै ज्यान गएको छ । ना. ५ ख. ४९७३ नम्बरको चिनारी यातायात बसमा स. ४ प. ९६८९ नम्बरको मोटरसाइकल विपरित दिशामा गएर ठोकिएपछि दुर्घटना भएको हो । उक्त दुर्घटनामा मोटरसाइकलमा सवार सप्तरी दौलतपुर १ का अमन सिंह, सोही ठाउँका अभिनाश सिंह, शोभितलाल महतो र शत्रुघ्न महतोको ज्यान गएको ईलाका प्रहरी कार्यालय लहानले जनाएको छ ।

ज्यान गुमाएका चारै जनाले मदिरा र गाँजा सेवन गरेको प्रहरीको अनुमान छ । उनीहरुको साथबाट गाँजा खाने चिलिम, पराग, चुरोट, केही नगद रकम पनि बरामद भएको छ । नशामा मातेर मोटरसाइकल चलाउँदा दुर्घटना भएको प्रहरीको भनाई छ । दुर्घटनाग्रस्त मोटरसाइकल, बस र बसका चालकलाई ईलाका प्रहरी कार्यालय लहानले नियन्त्रणमा लिएको छ ।

**यात्रुहरु यसरी अलपत्र परे**

दुर्घटनामा परेको बसलाई प्रहरीले नियन्त्रणमा लिएपछि यात्रुहरु अलपत्र परेका छन् । दुर्घटना शुक्रवार राति करिब ९ बजे भयो । भद्रपुरबाट काठमाडौं हिँडेको बस थियो । उक्त बसमा करिब तीन दर्जन यात्रु थिए । सबै यात्रुले ईलाका प्रहरी कार्यालय लहान परिसरमै रात बिताएको एक प्रहरीले जनाए । उनीहरु आज मात्र अर्को बस चढेर काठमाडौं जान पाउँछन् ।

**२०७१।१२।२४**

## अनलाइन–

१) अनलाइन पत्रिकाको रुपमा प्रकाशित www.bizmandu.com को २०७१।१२।२४ गतेको **'सिएमसीले मेलम्ची खानेपानी आयोजनाको काम रोक्यो, सरकारी पक्ष र ठेकेदार कम्पनीबीच विवाद'** शीर्षकमा प्रकाशित सामग्री चैत २५ गतेको कान्तिपुर दैनिक, सोको अनलाइन संस्करण तथा इपेपरमा प्रकाशित समाचारसँग हुबहु ।

***सिएमसीले मेलम्ची खानेपानी आयोजनाको काम रोक्यो, सरकारी पक्ष र ठेकेदार कम्पनीबीच विवाद***

काठमाडौं । बहुप्रतिक्षित मेलम्ची खानेपानी आयोजना निर्माणको ठेक्का पाएको सिएमसी डि राभेन्नाले काम रोकेको छ । गत शुक्रबार आयोजनाको बोर्डलाई पत्र लेख्दै काम बन्द गर्ने जनाएको हो । इटालियन कम्पनी सिएमसीले अधिकाँश काम रोकिसकेको छ । आयोजनाका तर्फबाट काम गरिरहेका इञ्जिनियरलाई नटबोल्ट कस्ने र अन्य केही सामान्य काम मात्रै भइरहेको जानकारी दिइएको छ । काम बन्द नभएको जनाउन मात्रै यस्ता सानातिना काम भएको देखाउन खोजिएको हो । अहिलेको विवादले आयोजनाबाट ठेकेदार सिएमसी बाहिरिने संभावना बढेको छ ।

आफूसँग भएको सामानको सबै स्टक सकिएको र सामान किन्न पैसा पनि नभएकोले काम रोक्न लागेको ठेकेदारले जनाएको छ । 'ठेकेदारले लेखेको पत्र हामीले पाएका छौं, आयोजना प्रमुख घनश्याम भट्टराईले भने, उसले हामीलाई दवाव दिन खोजेको छ ।'

सिएमसीले केही स्थानमा टनेलको सामन्य 'मोडिफाइ' गर्नुपर्ने जनाएको छ । तर, आयोजनाका इञ्जिनियरलाई कुन स्थानमा मोडिफाई गर्नुपर्ने र त्यसको लागत कति हुने भन्ने जानकारीसमेत दिएको छैन । 'हाम्रा इञ्जिनियरले लागतको ब्रेक डाउन माग्दा पनि ठेकेदारले दिएन, प्रमुख भट्टराईले भने, हामीले भुक्तानी दिन बाँकी रकमका लागि आवश्यक कागजात माग्दा अप्रिल १५ तारिखसम्मको समय माग्यो । यस्तो अवस्थामा ठेकेदारलाई आयोजनाले कसरी भुक्तानी दिने ?'

आयोजना प्रमुख भट्टराईका अनुसार ठेकेदार कम्पनीसँग मोडिफिकेसनको ब्रेक डाउन मागेको आठ महिना वितिसक्यो । तर मोडिफिकेसन र यसको लागत ठेकेदार कम्पनीले दिएको छैन । ठेकेदारलाई आयोजनाले ठूलो रकम भुक्तानी दिन बाँकी पनि नरहेको उनले बताए । सबै कागजात दिए आयोजनाले रकम भुक्तानी दिने जानकारी उनले दिए ।

चिनियाँ ठेकेदारसँग सम्झौता तोडिएपछि सिएमसीले सन् २०१२मा मेलम्ची आयोजनाको ठेक्का पाएको हो । यो अवधिमा ६ किलोमिटर सुरुङ खनिएको छ । चिनियाँ ठेकेदारले खनेको समेत जोड्दा हालसम्म जम्मा १५ किलोमिटर सुरुङ खनियो । मेलम्चीको पानी सुन्दरीजलसम्म ल्याउन २७.५८ किलोमिटर सुरुङ खन्नुपर्छ । २०७३ साल वैशाख एक गते मेलम्चीको पानी काठमाडौं ल्याइसक्ने प्रतिवद्धता सरकारले जनाएको थियो । आयोजना एशियाली विकास बैंकको सहायतामा बनाउन लागिएको हो । मेलम्चीको काम सुरु भएको २४ वर्ष पुरा भइसक्यो ।

लो बिड भयो भनेर ठेकेदार कम्पनी तर्किने गरेको जानकारी पनि भट्टराईले दिए । 'लो बिड भएको हो भने तरलता व्यवस्थापन कसरी गर्ने, काम कुन गतिमा अघि बढाउने जस्ता विषयमा बारम्बार सोध्दा ठेकेदार कम्पनीका प्रतिनिधि भेट्नै चाहँदैनन्', उनले भने, अब आयोजनाले कडा कदम चाल्नु पर्ने अवस्था सिर्जना भइसकेको छ । सिएमसीको क्षेत्रीय कार्यालय सांघाईले नेपालको काम हेर्छ । नेपालमा जितेन्द्रमान प्रधानले दोस्रो आधिकारिक व्यक्तिका रुपमा काम गर्छन ।

**सिएमसीले ८० करोड तिर्न बाँकी**

सिएमसीले सामान आपूर्तिकर्तालाई करिब ८० करोड रुपैयाँ तिर्न बाँकी रहेको छ । आयोजनाको नगद व्यवस्थापन र पेट्रोलियम पदार्थ उपलब्ध गराइरहेको कम्पनीलाई समेत पैसा दिइएको छैन । आयोजना प्रमुख भट्टराईसँग गत साता आठ वटा सप्लायर्सले भेटेका थिए । पाँच करोडभन्दा बढी भुक्तानी लिनुपर्ने सप्लायर्सले आयोजना प्रमुख गुहारेका हुन् ।

सामान आपूर्तिकर्ताले गत सेप्टेम्बरदेखि नै भुक्तानी पाएका छैनन् । यसअघि आयोजना पक्ष र ठेकेदारबीच भएको वार्तामा तरलता व्यवस्थापनमा कुनै समस्या नरहेको ठेकेदारले बताउँदै आएको थियो । लामो समयसम्म भुक्तानी नपाएपछि आपूर्तिकर्ताले सामान दिन रोकेका हुन् ।

आयोजना पक्ष र ठेकेदारबीच भएको सम्झौताअनुसार न्यूनतम एक महिनालाई पुग्ने सामान मौज्दातमा राख्नुपर्ने प्रावधान छ ।

*- See more at: http://www.bizmandu.com/content/-11258.html#.VST3U9yUeSo*

## टेलिभिजन–

१) काठमाडौंबाट प्रसारित हुने एबिसी टेलिभिजनको २०७१।१२।२४ गते बेलुका ७:२० मा प्रसारित ट्वीट अफ द डे कार्यक्रममा आम हड्ताललाई एकपक्षीय समर्थन गर्दै बन्दको पक्षमा एकतर्फी भनाइ राखेको देखिएकोले यसमा पत्रकार आचारसंहिता २०६० (संशोधित तथा परिमार्जित २०६४) को दफा ३ उपदफा (१०) र दफा ४ को (५) आकर्षित ।

२) सोही टेलिभिजनको २०७१।१२।२४ गते बेलुका ८:०० प्रसारित समाचारमा करिब ६:०० बजेतिर नै नेपाल बन्द फिर्ता भएपनि बन्द जारी भनी बजाएकोले पत्रकार आचारसंहिता २०६० (संशोधित तथा परिमार्जित २०६४) को दफा ३ को उपदफा (४) र दफा ४ को (५, ११) आकर्षित ।

## अप्रिल फूलको नाममा यसो गर्न पाइन्छ ?

माइसंसार ब्लगले स्थापनाकालदेखि नै यो दिन विदेशी मिडियाको सिको गरिएको भन्दै एउटा सामग्री राख्दै आएको रहेछ । यस ब्लगले 'हेटौंडामा गैंडा सुटिङका लागि दौडाइएको, दुर्घटना भएपछि गुपचुप, सुन्नुस् अडियो' शीर्षकमा फेक न्यूज राखेको पाइयो । त्यसलाई अनलाइन खबर, नारायणीको सेरोफेरो, साझा पोष्ट, एस काठमाण्डूलगायतले हुबहु कपी पेष्ट गरी प्रकाशन गरेको पाइयो । अनलाइन खबर र माइसंसार ब्लगले क्षमा याचना गरिसकेका छन् तर अरु अनलाइनहरुले कुनै प्रतिक्रिया दिएका छैनन् ।

## अनलाइनका क्लिपहरू:

### माइसंसार अप्रिल फूल ब्लग : गैंडा

By mysansar, on April 1st, 2015

अपडेट अप्रिल २ : अप्रिल १ का दिन माइसंसारले स्थापनाकालदेखि नै एउटा ब्लग राख्दै आएको छ । बिबिसीलगायत विश्वका अन्य प्रमुख मिडियाले पनि यो दिन राख्ने यस्तै समाचारहरुकै सिको गरेर माइसंसारले राख्ने यस्ता हरेक ब्लगको सबैभन्दा मुनि लिङ्कमा वा भिडियोमा यसबारे जानकारी दिइएको हुन्छ । तथापि हिजोको ब्लगलाई आर्थिक दैनिकलगायत केही अनलाइन (रातोपाटी, अनलाइनखबर) ले साँच्चिकै भन्ने ठानेर साभार पनि नभनी ठाउँ दिँदा पाठकहरुलाई पर्न गएको भ्रमप्रति दुःखी हुँदै माइसंसार माफी माग्छ । काल्पनिक समाचारका कारण कसैलाई चोट पर्न गएको भए पनि माफी माग्छौं । हाम्रो उद्देश्य आधारहीन खबरलाई पनि कसरी साँच्चिकै जस्तो बनाउन सकिन्छ र पाठक कसरी आफै सचेत हुनुपर्छ भन्ने मात्र थियो । यसअघि पनि एफ१ सफ्टलाई फेसबुकले किनेको, पूर्व युवराज्ञी हिमानी फिल्ममा खेल्न लागेको

अप्रिल फूल ब्लगलाई केही मिडियाले साभार गरेका थिए । यस्तो थियो ब्लग -

हेटौंडामा गैंडा सुटिङका लागि दौडाइएको, दुर्घटना भएपछि गुपचुप, सुन्नुस् अडियो

हेटौडाको सडकमा गएको सोमबार मच्चिएको गैंडा आतंकबारे नयाँ तथ्य खुलेको छ। गैंडा खासमा एउटा विदेशी फिल्मको सुटिङका लागि नियोजित रुपमा दौडाइएको भए पनि अनियन्त्रित पशुले मान्छे नै मारेपछि घटनालाई गुपचुप राख्न खोजिएको दावी गरिएको छ । घटनाबारे डब्लुडब्लुएफ (वर्ल्डवाइड फन्ड फर नेचर) ले गरेको अनुसन्धानका क्रममा यो तथ्य खुलेको हो। डब्लुडब्लुएफले विश्वव्यापी प्रचारमा आएको यो घटनापछि अनुसन्धान गर्न नेपालस्थित कार्यालयलाई निर्देशन दिएलगत्तै काम सुरु गरेको थियो । माइसंसारलाई प्राप्त अडियोमा विदेशी फिल्मका निर्देशक श्रीनिवास सुन्दरराजन र नेपालमा सुटिङको व्यवस्थापन जिम्मा लिएका अधिकारीबीच कुराकानीले पनि यसलाई पुष्टि गरेको छ। प्राप्त जानकारीअनुसार हलिउडको जुमान्जी फिल्मको शैलिमा भारतको तमिल भाषामा बन्न लागेको फिल्मको सुटिङका लागि एक सिङ्गे गैंडा सडकमा दौडिएको दृश्य सुटिङ गर्न यो तयारी गरिएको थियो । जुमान्जी सन् १९९५ मा रिलिज भएको रबिन विलियम्स र क्रिस्टिन डन्स्ट अभिनित फिल्म थियो । राष्ट्रिय निकुञ्जको जंगलबाट ल्याइएको गैंडालाई सडकमा एकछिन दौडाएर सुटिङ सम्पन्न गर्ने र त्यसपछि गैंडालाई पुनः त्यहाँबाट लगी जंगलमा छाड्ने सहमति भएको थियो ।

निकुञ्ज प्रशासनका केही व्यक्तिलाई विश्वासमा लिएर गरिएको यो काम त्यतिबेला नसोचिएको मोडमा पुग्यो, जब सुटिङ भन्ने थाहा नपाएका हेटौंडावासीले होहल्लाका साथ गैंडालाई लखेटे। होहल्लाका कारण गैंडा पनि बिच्किन पुग्यो। अनियन्त्रित गैंडाले सुटिङ टिमले सोच्दै नसोचेको ठाउँमा गई एक वृद्धालाई हानेर ज्यानसमेत लियो भने केही घाइते भए । गैंडा नबिच्किएको भए शालिक चोकबाट दायाँ मोड्नेबित्तिकै जालले छोपेर निकुञ्ज लगिने थियो । सहायक सडक हुँदै मुख्य सडकमा दौडिएको दृश्य नै सुटिङका लागि पर्याप्त थियो ।

अनुगमनका क्रममा अधिकांश रेडियो, टेलिभिजनले पूर्व जानकारी नदिई विज्ञापन बजाउने गरेको र ‘हामी निरन्तर न्यूजमा छौं’ पनि भन्ने गरेकोले समाचार हो कि विज्ञापन ? यसमा प्रष्ट हुनुपर्ने ।

## cf= a= @)&!÷)&@ df k|Kt hgu'gf;f]x?

१) प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालयलाई संबोधन गरी सूचना तथा सञ्चार मन्त्रालयमा प्राप्त 'विज्ञापन बारे' को जनगुनासो आवश्यक कारवाहीको लागि लेखिआएकोले विज्ञापन सम्बन्धमा पत्रकार आचारसंहितामा विस्तृत उल्लेख नभएको र सो संशोधनको क्रममा छलफल भइरहेको व्यहोरा उल्लेख गरी सूचना तथा सञ्चार मन्त्रालयलाई मिति २०७२/०३/०८ गते पत्राचार गरिएको ।

२) प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालयलाई संबोधन गरी सूचना तथा सञ्चार मन्त्रालयमा प्राप्त धादिङ, केवलपुर - ९ की अनिता आचार्यको रेडियो राजधानीबाट '४ (चार) महिनाको तलब उपलव्ध गराई पाऊँ' भन्ने गुनासो आवश्यक कारवाहीको लागि प्रेस काउन्सिल नेपालमा आएकोले के कसो भएको हो ? यथार्थ विवरणसहित जवाफ पेश गर्न रेडियो राजधानीको नाममा मिति २०७१/०४/०८ गते पत्राचार गरिएको ।

३) 'पत्रकारमाथि दुर्व्यवहार गर्नेलाई कारवाही होस्' भन्ने व्यहोराको चितवन, रत्ननगर निवासी प्रनिश थापाको गुनासो प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालयलाई संबोधन गरी सूचना तथा सञ्चार मन्त्रालयमा प्राप्त भएको सम्बन्धमा आवश्यक कारवाहीको लागि पत्र प्राप्त हुँदा काउन्सिलबाट पत्रकारमाथि भएको भौतिक आक्रमणको विषयमा कारवाही गर्ने अधिकार क्षेत्र प्रेस काउन्सिलसँग नभएको व्यहोरा उल्लेख गरी मिति २०७२/०३/०८ गते सूचना तथा सञ्चार मन्त्रालयमा पत्राचार गरिएको ।

४) फेसबुकलगायत पोखरापोष्ट डट कमले ७.८ रेक्टर स्केलको भूकम्प जान्छ भनेर सम्प्रेषण गरेको समाचार सम्बन्धमा चितवन, रत्ननगर निवासी प्रनिश थापाको गुनासो प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालयलाई लेखिएबमोजिम पोखरापोष्ट डट कमलाई मिति २०७२/०२/३१ गते सचेत गराइएको ।

## cf= a= @)&!÷)&@ df k|Kt af]wfy{x?

१) श्री शारदा उच्च माध्यमिक विद्यालय, इनरुवा-०९, सुनसरीविरुद्ध नागरिक दैनिक - २०७१/०९/२२

२) मध्य भोटेकोशी जलविद्युत कम्पनी लिमिटेडविरुद्ध राजधानी दैनिक - २०७१/०९/११

३) सुगम ग्याँस उद्योग प्रा. लि. विरुद्ध नागरिक दैनिक - २०७१/०९/३०

४) उषा बरुवाल,अध्यक्ष, ऋर्याभिअतष्खभ ऋकउबष्नल ायच (ऋयअबउ) विरुद्ध आर्थिक राष्ट्रिय दैनिक - २०७१/०९/३०

५) पारस समशेर ज.व.रा., कम्पनी सचिव, होटल डेला अन्नपूर्णविरुद्ध आर्थिक राष्ट्रिय दैनिक - २०७१/१०/०४

६) कपिल समशेर ज.व.रा. र सृष्टि राणाविरुद्ध न्यूज ट्वान्टी फोर टेलिभिजन र एभिन्यूज टेलिभिजन - २०७१/१०/२६

७) सृजना राणा, होटल डेला अन्नपूर्ण विरुद्ध आर्थिक राष्ट्रिय दैनिक - २०७१/११/०१
८) ई. फणिन्द्र बराल, प्रहरी उपरीक्षकविरुद्ध गोलमेच साप्ताहिक - २०७१/०४/१२
९) मध्यपुर थिमि नगरपालिकाविरुद्ध जनआस्था साप्ताहिक - २०७१/०४/१९
१०) बयोधा हस्पिटल, काठमाडौंविरुद्ध स्वास्थ्य खवर डट कम - २०७१/०५/१२
११) मुँक जैविक विविधता संरक्षण तथा नागरिक अभियान, रौतहटविरुद्ध हतकडी दैनिक - २०७१/०६/२९
१२) भरतराज सुवेदी विरुद्ध कान्तिपुर दैनिक - २०७१/०७/३०
१३) वालिङ नगरपालिकाविरुद्ध सगरमाथा टेलिभिजन - २०७१/०८/१७
१४) नेपाल आयल निगम कर्मचारी संघ, नेपाल आयल निगम राष्ट्रिय कर्मचारी संगठन, नेपाल आयल निगम स्वतन्त्र कर्मचारी यूनियनविरुद्ध नयाँ पत्रिका दैनिक - २०७१/०८/२२
१५) नेपाल आयल निगम कर्मचारी संघविरुद्ध नयाँ पत्रिका दैनिक - २०७१/०८/२८
१६) ई. लोकेशचन्द्र सिंह, प्रहरी उपरीक्षकविरुद्ध साँघु साप्ताहिक - २०७१/०७/०३
१७) सुदर्शन सिग्देल, अध्यक्ष, राष्ट्रिय शहीद तथा शान्ति पार्क (स्मारक), गोकर्ण विरुद्ध तामाकोशी सन्देश साप्ताहिक - २०७१/०६/०१
१८) निर्देशक, बीमा समितिविरुद्ध शेयर बजार साप्ताहिक - २०७१/०५/२४
१९) भरतराज राउत (उप-महानिर्देशक, पुरातत्व विभाग) विरुद्ध साँघु साप्ताहिक - २०७१/०४/११
२०) एवल नेपाल ट्राभल्स एण्ड टुर्स प्रा. लि. विरुद्ध दृष्टि साताहिक - २०७१/११/२०
२१) डा. ल्हारक्याल लामाविरुद्ध नागरिक दैनिक - २०७१/१२/०२
२२) राम शर्मा (उप निर्देशक), समाज कल्याण परिषद्विरुद्ध साँघु साप्ताहिक - २०७१/१२/२०
२३) सन्तोष बि. क. र रतन लिम्बुविरुद्ध बिद्युतीय संचार माध्यम फेसबुक संजाल - २०७२/०१/२२
२४) तारा सिंह कठायत, अध्यक्ष, नेपाल क्याम्पस क्रुसेड फर क्राइष्टविरुद्ध कान्तिपुर दैनिक - २०७२/०२/०३
२५) लघु स्वास्थ्य सहकारीबाट पीडितहरुविरुद्ध लोकतन्त्र सन्देशका हरिप्रसाद उप्रेती र बिलबहादुर अधिकारी - २०७२/०२/२०
२६) नेपाल अर्थोपेडिक अस्पतालविरुद्ध अन्नपूर्ण पोष्ट राष्ट्रिय दैनिक - २०७२/०२/१९
२७) लीलामणि पौड्याल, मुख्यसचिवविरुद्ध कान्तिपुर दैनिक - २०७२/०२/२८
२८) ई. लोकेशचन्द्र सिंह, प्रहरी उपरीक्षकविरुद्ध साँघु साप्ताहिक - २०७२/०२/३१

परिच्छेद
५

# आर्थिक स्थिति

प्रेस काउन्सिल नेपालका लागि आर्थिक वर्ष २०७१।७२ मा रु. २ करोड ४२ लाख ६० हजार बजेट निकासा भएको थियो । यसमध्ये पूँजीगत खर्चका लागि रु. ५२ लाख ६० हजार र चालु खर्चका लागि रु. १ करोड ९० लाख विनियोजन भएको हो । चाल र पुँजीगत खर्चको २०७२ असार मसान्तसम्म मौज्दात रकम नेपाल राष्ट्र बैंकमा रहेको छ। आ.व. २०७१।७२ असार महिनासम्मको विनियोजित तथा खर्च विवरण निम्नानुसार छ ।

**आ.व. ०७१/०७२ को श्रावणदेखि असार मसान्तसम्मको खर्च विवरण**

| खर्च शी.नं | खर्च शिर्षक | ०७१/०७२ को बजेट बाँडफाँड | खर्च |
|---|---|---|---|
| २१११ | तलब | ८,९३९,३२०.०० | ७,६७९,३५५.७० |
| २१११३ | महंगी भत्ता | ३७२,०००.०० | ३८५,०७६.७५ |
| २१११९ | अन्य भत्ता | २,५००,०००.०० | २,१७३,४२४.१३ |

| | | | |
|---|---|---|---|
| २११२१ | पोशाक | २०८,०००.०० | १८०,०००.०० |
| २११२३ | औषधी उपचार खर्च | १७०,०००.०० | १४०,९६२.०० |
| २२१११ | पानी तथा बिजुली | २००,०००.०० | २०७,९०४.६१ |
| २२११२ | सञ्चार महसुल | ५००,०००.०० | ४०६,२०९.०० |
| २२२११ | इन्धन | ४२५,०००.०० | ४०७,७३०.२८ |
| २२२१२ | सञ्चालन तथा मर्मत संभार | ४००,०००.०० | ३७९,९८७.९५ |
| २२३११ | कार्यालयसम्बन्धी खर्च संहिता र वा.प्र छपाइसमेत | २,०७५,०००.०० | १,४०७,२९२.११ |
| २२४११ | परामर्श तथा सेवा शुल्क | १,२६०,६८०.०० | १,११३,६६४.७७ |
| २२५११ | कर्मचारी तालिम | ५०,०००.०० | ४५,२५०.०० |
| २२५१२ | सीप विकास र जनचेतना तालीम तथा गोष्ठीसम्बन्धी खर्च | ३००,०००.०० | ३००,०००.०० |
| २२६११ | अनुगमन मूल्याँकन(सञ्चार माध्यम) | २००,०००.०० | २००,०००.०० |
| २२६१२ | भ्रमण खर्च | ७००,०००.०० | ८४०,१७२.०० |
| २२७११ | विविध खर्च /लेखा परीक्षण खर्च | ७००,०००.०० | ४८०,३३४.४४ |
| **जम्मा** | | १९,०००,०००.०० | १६,३४७,३६३.७४ |
| २७३०० | सेवा निवृत्त सुविधा | ३,०००,०००.०० | ३,०००,०००.०० |
| १९३११ | फर्निचर तथा फिक्चर्स | १,४६०,०००.०० | २१,८३१.०० |
| २९५११ | मेशिनरी औजार(सञ्चार अनुगमन उपकरण) | ८००,०००.०० | ५७६,५५७.०० |
| **जम्मा** | | ५,२६०,०००.०० | ३,५९८,३८८.०० |
| **कूल जम्मा** | | २४,२६०,०००.०० | १९,९४५,७५१.७४ |

## आ.व. ०७१/०७२को श्रावणदेखि असार मसान्तसम्मको मौज्दात रकमको खर्च विवरण

| सि.नं. | कार्यक्रम खर्च | प्रस्तावित | खर्च |
|---|---|---|---|
| १ | वितरण सम्परीक्षण खर्च | ७३५,०००.०० | १,०२७,०२९.०० |
| २ | त्रैमासिक जर्नल/बार्षिक प्रतिवेदन | ४००,०००.०० | ३१०,०००.०० |
| ३ | आचारसंहिता | १,७००,०००.०० | १,०६०,७८०.०० |
| ४ | मिडिया संवाद | ३००,०००.०० | ११६,०४८.०० |
| ५ | विधागत पत्रकारिता पुरस्कार | २६५,०००.०० | २६५,०००.०० |
| ६ | आचारसंहिता अनुगमन तथा विकेन्द्रीकरण कार्यक्रम | ७५०,०००.०० | ०.०० |
| ७ | पत्रपत्रिका स्क्यानिङ तथा पुस्तकालय शुद्धिकरण | १५०,०००.०० | ५६,७५६.५४ |
| ८ | अन्तर्राष्ट्रिय एवं सार्क क्षेत्र प्रेस काउन्सिल सम्बन्ध विस्तार | ५००,०००.०० | ९७,७३०.१६ |
| ९ | भवन निर्माण | १,०००,०००.०० | ११४,१४१.३० |
| १० | कर्मचारी अवकास कोष | १,०००,०००.०० | १,०००,०००.०० |
| जम्मा | | ६,८००,०००.०० | ४,०४७,४८५.०० |

## कर्मचारी अवकाश कोषः

प्रेस काउन्सिल सचिवालयमा कार्यरत कर्मचारीहरुको अवकाशपश्चात भुक्तानी गर्नुपर्ने सुविधा (उपदान, औषधोपचार सुविधा, सञ्चित बिदाको रकम) का लागि व्यवस्था गरिएको कर्मचारी अवकाश कोषमा २०७२ असार मसान्तसम्म रु.२,१२,२९,५०२।२९ रहेको छ। उक्त कोष निम्न बैंक खाताहरु र कर्मचारी सापटीको रुपमा रहेको छ।

| विवरण | यस वर्ष (रु.) | गत वर्ष (रु.) |
|---|---|---|
| कर्मचारी अवकाश कोष | १८,५३१,३२१.९० | १४,६६९,९६९.०८ |
| जोड : ब्याज आम्दानी (एनआइडिसीबाट) | ९१७,८७७.१२ | १,००७,३८९.९४ |
| जोड : ब्याज आम्दानी (रा.बा. बैंकबाट) | २,३२८.२७ | - |
| जोड : बजेट बिनियोजनबाट यस आ.व. को | ३,०००,०००.०० | ३,०००,०००.०० |
| जोड : मौज्दातबाट | १,०००,०००.०० | ५००,०००.०० |
| जोड : ब्याज आम्दानी (कर्मचारी सापटी) | ९५,४३४.०० | ८९,२००.०८ |
| जम्मा | २३,५४६,९६१.२९ | १९,२६६,५५९.१० |
| घटाउ : बैंक चार्ज | ४०.०० | - |
| घटाउ : अवकाशकोषको भुक्तानी यस वर्षको | २,३१७,४१९.०० | (७३५,२३७.२०) |
| जम्मा | २१,२२९,५०२.२९ | १८,५३१,३२१.९० |
| उपरोक्त रकम निम्न बैंक खाताहरु र पेश्कीको रुपमा राखिएको छ। | | |
| एन.आई.डि.सी.क्यापिटल मार्केट्स -मुद्दती खाता | १३,०००,०००.०० | १३,०००,०००.०० |
| एन.आई.डि.सी.क्यापिटल मार्केट्स -चल्ती खाता | ४१२,३९१.०० | २,५७७,९३५.८८ |
| रा.वा. बैंक सिंहदरबार-बचत खाता | ४,८५९,९५०.५४ | ६१,५१७.२७ |
| कर्मचारी पेश्की (सापटी) | ३,२३२,६९६.०० | ३,१६७,४०४.०० |
| पत्रकार कल्याण कोषको खाताबाट सार्नुपर्ने | ०.०९ | ०.०९ |
| जम्मा | २१,५०५,०३७.६३ | १८,८०६,८५७.२४ |
| भुक्तानी गर्न र दाखिला गर्न बाँकी | (२७५,५३५.३४) | (२७५,५३५.३४) |
| जम्मा | २१,२२९,५०२.२९ | १८,५३१,३२१.९० |

मुद्दती खाताबाट प्राप्त ब्याज रकमबाट कर्मचारीलाई विनियममा व्यवस्था भएअनुसार छ महिने, एक वर्षे, तीन वर्षे तलब सापटी उपलब्ध हुने गरेको छ। उक्त सापटी दिएबापत काउन्सिलका कर्मचारीहरुबाट सयकडा ३ प्रतिशतका दरले ब्याज असूल गरिएको छ।

उक्त कोषबाट २०७२ असार मसान्तसम्म रु.३२,३२,६९६।- कर्मचारीहरुलाई तलब सापटीस्वरुप उपलब्ध गराइएको छ। कर्मचारी विनियमावली अनुसार दिइएको उक्त सापटी रकम सम्बन्धित कर्मचारीको तलबबाट नियमानुसार प्रत्येक महिना कट्टी गरिने व्यवस्था छ।

## मिडिया विकास कोषः

स्वतन्त्र मिडियालाई आधुनिकीकरण तथा व्यवसायीकरण गरी नेपाली पत्रकारिता क्षेत्रको समुचित विकासका लागि मोफसलका पत्रपत्रिकाहरूको गुणात्मकतामा अभिवृद्धि ल्याई आत्मनिर्भर बनाउन नेपाल सरकार र डेनमार्क सरकारको संयुक्त सहयोगमा सन् १९९५ को अक्टुबरमा मिडिया विकास कोष स्थापना भएको हो । मोफसलका साना पत्रपत्रिकाहरूले भोग्नुपरेका विविध समस्याको प्रारम्भिक निराकरणमा सहयोग पुऱ्याउनु नै मिडिया विकास कोषको तात्पर्य रहेको छ । यसले मिडिया क्षेत्रको विकास गर्नुका अतिरिक्त जनस्तरबाट लोकतन्त्रको सुदृढीकरणका लागि समेत ठूलो मद्दत मिल्न गएको छ ।

मिडिया विकास कोषको अक्षय कोषमा नेपाल सरकारबाट प्राप्त १ करोड ५० लाख र डेनिस सरकारबाट प्राप्त रु. १ करोड ७५ लाख र ब्याजबाट खोलेको मुद्दतीसमेत जम्मा ४ करोड २५ लाखको मुद्दती खाता रहेको छ । जसबाट यस आवमा २३,५९,६५२।९४ ब्याज प्राप्त भएको छ ।

यस आ.व. मा रु. ८९४३२१।८३ प्रेस तथा रेडियो उपकरणतर्फ ब्याज अनुदान, सञ्चार केन्द्रलाई अनुदान रु. ३,००,०००।- छात्रबृत्ति एवं अनुसन्धान कार्यका लागि रु. २५,०००।-, ल्यापटप लगायत उपकरण खरिदमा रु.११३०३३।- र प्रशासनिक खर्चबापत १३६११०५।- गरी जम्मा २६९३४५९।८३ भुक्तानी गरिएको छ । मिडिया विकास कोषको २०७१ श्रावणदेखि २०७२ आषाढसम्म भुक्तानी गरिएको अनुदान र प्रशासनिक खर्च निम्नानुसार छ ।

**मिडिया विकास कोषको २०७१ साउन देखि ०७२ आषाढसम्म प्रदान गरिएको अनुदान र खर्च विवरण**

| क्र.स. | विवरण | रकम | जम्मा |
|---|---|---|---|
| | प्रशासनिक खर्च | | १३६११०५.०० |
| | क. बैठक भत्ता | २५,०००.०० | |
| | ख. कार्यक्रम खर्च | ३६१०३५.०० | |
| | ग. युनेस्को कार्यक्रम खर्च | ५३८८९२.०० | |
| | घ. आर्थिक अनुदान | ३२००००.०० | |
| | ङ. विज्ञापन खर्च | १९४५०.०० | |
| | च. उपकरण खरिद | ९६७२८.०० | |
| १ | शोधपत्र लेखन | | २५,०००.०० |
| | भिष्मराज ओझा | २५,०००.०० | |
| २ | नेपाल पत्रकार महासँघ, सञ्चारकेन्द्र | | ३००,०००.०० |
| | झापा र सल्यान | ३००,०००.०० | |

| | | | |
|---|---|---|---|
| ३ | उपकरण खरिदमा दिएको अनुदान | | ११३,०३३.०० |
| | क. विकास बञ्जाडे (कपिलवस्तु) | १६८०८.०० | |
| | ख. किसनबहादुर नेपाली (लमजुङ) | १३०००.०० | |
| | ग. प्रमोद सुवेदी (मोरङ) | २५०००.०० | |
| | घ. सुदर्शन आचार्य (सिन्धुपाल्चोक) | २३०००.०० | |
| | ङ. धना गिरी (प्यूठान) | २४७२५.०० | |
| | च. जनार्दन पोखेल (महोत्तरी) | १०५००.०० | |
| ४ | व्याज अनुदान | | ८९४,३२१.८३ |
| | रेडियो नेपालवाणी, इलाम | १४,६८८.९८ | |
| | नवजनचेतना दैनिक, पाल्पा | ८,०४७.९४ | |
| | जनविश्वास अफसेट प्रेस, धनकुटा | ३५,०१६.६७ | |
| | चितवन पोष्ट प्रकाशन, चितवन | ७१,९८६.३० | |
| | टिकापुर दैनिक, कैलाली | ६०,५६०.०० | |
| | न्यू कालीगण्डकी छापाखाना, पर्वत | ७३,६४२.०० | |
| | मुस्ताङ अफसेट प्रेस | १६७,२५८.०४ | |
| | रमाइलो सामुदायिक रेडियो | २०,६०२.७४ | |
| | रेडियो निकास, मकवानपुर | १६३,३३६.३२ | |
| | रेडियो शारदा | ९३,९९८.०० | |
| | आशिष अफसेट प्रेस | ३८,६३०.१४ | |
| | काँकेबिहार प्रकाशन प्रा.लि. | ४८,३३९.०४ | |
| | रेडियो मध्यपश्चिमाचल प्रा.लि. | ३२,४२८.०० | |
| | रेडियो पश्चिम टुडे | ६५,७८७.६६ | |

मिडिया विकास कोषबाट सञ्चार केन्द्र स्थापनाको लागि हालसम्म अनुदान दिएका जिल्ला शाखाहरु निम्नानुसार छन् ।

| | | | |
|---|---|---|---|
| १. सिन्धुपाल्चोक | ११. पाँचथर | २१. जाजरकोट | ३१. प्युठान |
| २. धनकुटा | १२. बाजुरा | २२. इलाम | ३२. दोलखा |
| ३. रुकुम | १३. खोटाङ | २३. दार्चुला | ३३. नुवाकोट |
| ४. कैलाली | १४. बाग्लुङ | २४. रोल्पा | ३४. कञ्चनपुर |
| ५. भोजपुर | १५. रामेछाप | २५. बैतडी | ३५. बाँके |
| ६. सिन्धुली | १६. मुगु | २६. स्याङजा | ३६. सर्लाही |
| ७. जुम्ला | १७. सुर्खेत | २७. हुम्ला | ३७. मोरङ |
| ८. धादिङ | १८. गुल्मी | २८. कपिलबस्तु | ३८. महोत्तरी |
| ९. डोटी, अछाम संयुक्त शाखा | १९. दाङ | २९. पाल्पा | ३९. सिराहा |
| १०. अर्घाखाँची | २०. डडेलधुरा | ३०. पर्वत | ४०. कालिकोट |
| ४१. मकवानपुर | ४२. झापा | ४३. सल्यान | |

## पत्रकार कल्याण कोषः

यो कोषबाट उपसमितिको निर्णयानुसार स्वास्थ्योपचार गराउनुपर्ने पत्रकारहरुलाई नेपाल पत्रकार महासंघ (केन्द्रीय कार्यालय) को सिफारिसमा ऐन, नियम र प्रक्रियाको अधिनमा रही औषधोपचार सुविधा उपलब्ध गराउने गरिएको छ । औषधोपचार सुविधा उपलब्ध गराउने प्रयोजनका निमित्त, काउन्सिलले २०५२ सालमा पत्रकार कल्याण कोष नामक एउटा छुट्टै कोष (अक्षय कोष) को स्थापना गरेको थियो । रु. १० लाखबाट प्रारम्भ भएको अक्षय कोष हाल रु.५० लाख पुगेको छ । अक्षय कोषको रकम मुद्दती खातामा राखिएको छ र सोबाट आर्जित ब्याज रकमबाट बिरामी पत्रकारहरुलाई सहयोग गरिँदै आएको छ । रोगको अवस्था हेरी कुन बिरामी पत्रकारलाई के कति रकम उपलब्ध गराउनुपर्ने हो भन्ने विषयमा छानबिन गरी रकम सिफारिश गर्न पत्रकार कल्याण कोष उपसमिति गठन गरिएको छ ।

पत्रकार कल्याण कोषमा देहायअनुसारको ब्याज आम्दानी र खर्च भएको छ । रु. ५० लाखको अक्षय कोष मुद्दती खाताको रुपमा एनआईडीसी क्यापिटल मार्केट्स, कमलपोखरीमा रहेको छ । आ.व.०७१।७२ मा रु.३५५२०८।०६ व्याज आम्दानी भएको छ । उक्त व्याज आम्दानीबाट यस आर्थिक वर्षमा ४० जना पत्रकारलाई स्वास्थ्योपचारका लागि रु. ३,३१,०००।- आर्थिक सहयोग प्रदान गरिएको छ । कोष स्थापनादेखि हालसम्म ३२२ जना विरामी पत्रकारलाई रु. २३५३१५६।०९ औषधी उपचार सुविधा प्रदान गरिएको छ ।

| विवरण | यस वर्ष (रु.) | गत वर्ष (रु.) |
|---|---|---|
| पत्रकार कल्याण कोष | ५,३८०,१५५.०५ | ५,११८,९५१.०१ |
| जोड : विविध आम्दानी | - | ४२,०००.०० |
| जोड : बजेट विनियोजनबाट थप कोष (पुँजीगत) | - | - |

| | | |
|---|---|---|
| जोड : ब्याज आम्दानी | ३५५,२०८.०६ | ४८२,२०४.०४ |
| जम्मा | ५,७३५,३६३.११ | ५,६४३,१५५.०५ |
| घटाउ : उपचार सहायता | (३३१,०००.००) | (२६३,०००.००) |
| जम्मा | ५,४०४,३६३.११ | ५,३८०,१५५.०५ |
| उपरोक्त रकम निम्न बैंक खाताहरुमा राखिएको छ । | | |
| १. एन.आई.डी.सी. क्यापिटल मार्केट्स मुद्दती खाता | ५,०००,०००.०० | ५,०००,०००.०० |
| एन आई. डि.सीं क्यापिटल मार्केट्स चल्ती खाता | ४०४,३६३.२० | ३८०,१५५.१४ |
| जम्मा | ५,४०४,३६३.२० | ५,३८०,१५५.१४ |
| कर्मचारी अवकाश कोषमा सार्नुपर्ने | (०.०९) | (०.०९) |
| जम्मा | ५,४०४,३६३.११ | ५,३८०,१५५.०५ |

आ.व.०७१।७२ मा पत्रकार कल्याण कोषबाट वितरण गरिएको रकम र बिरामी पत्रकारहरुको नामावली यसप्रकार रहेको छ ।

| क्र.सं. | पत्रकारको नाम | जिल्ला | रकम रू. |
|---|---|---|---|
| १ | श्री हरि आधिकारी | काठमाडौं | ६,००० ।- |
| २ | श्री गमबहादुर लम्जेल | सुनसरी | १२,००० ।- |
| ३ | श्री विजय पोखरेल | काठमाडौं | १५,००० ।- |
| ४ | श्री बन्धु पोखरेल | मोरंङ | १०,००० ।- |
| ५ | श्री मालफुर्वा तामाङ | रसुवा | ६,००० ।- |
| ६ | श्री सोमवहादुर तामाङ | रसुवा | ५,००० ।- |
| ७ | श्री जे.वी. देउजा | काठमाडौं | ५,००० ।- |
| ८ | श्री किशोर विश्वकर्मा | मोरंङ | ६,००० ।- |
| ९ | श्री धर्मरत्न शाक्य | काठमाडौं | १०,००० ।- |
| १० | श्री रोहितप्रसाद पौडेल | काठमाडौं | १५,००० ।- |
| ११ | श्री नवराज भुसाल | गुल्मी | ७,००० ।- |
| १२ | श्री शम्भु खनाल | काठमाडौं | १५,००० ।- |
| १३ | श्री लाल साह | ललितपुर | १५,००० ।- |
| १४ | श्री जीवनकुमार शाक्य | सुर्खेत | ७,००० ।- |
| १५ | श्री दिनेशकुमार श्रेष्ठ | काठमाडौं | १२,००० ।- |
| १६ | स्व. सागर उपाध्याय | पर्वत | १०,००० ।- |

| | | | |
|---|---|---|---|
| १७ | श्री विश्वास खड्काथोकी | काठमाडौं | ५,००० ।- |
| १८ | श्री सुवाषचन्द्रलाल कर्ण | धनुषा | ८,००० ।- |
| १९ | श्री अर्जुन काफ्ले | स्याङ्जा | ७,००० ।- |
| २० | श्री रमेश पौडेल | कास्की | ९,००० ।- |
| २१ | श्री रेजिना रोदन | झापा | ७,००० ।- |
| २२ | श्री खेमराज बराल | झापा | ८,००० ।- |
| २३ | श्री दीपेन्द्र रावल | झापा | १२,००० ।- |
| २४ | श्री चुनबहादुर गुरूङ | स्याङ्जा | १५,००० ।- |
| २५ | श्री राजेन्द्र कार्की | मकवानपुर | ५,०००० ।- |
| २६ | श्री मनोजकुमार साह | धनुषा | १०,००० ।- |
| २७ | श्री जी.एन. शर्मा | झापा | ७,००० ।- |
| २८ | श्री पवन थापा, कुन्तल | काठमाडौं | ८,००० ।- |
| २९ | श्री विकास गिरी | काठमाडौं | ८,००० ।- |
| ३० | श्री पवित्रा सुनार | बागलुङ | ५,००० ।- |
| ३१ | श्री सरन बहादुर के.सी. | सिन्धुपाल्चोक | ५,००० ।- |
| ३२ | श्री मानध्वज लामा | रामेछाप | ५,००० ।- |
| ३३ | श्री लेखनाथ कोइराला | झापा | १०,००० ।- |
| ३४ | श्री नारायणी सापकोटा | झापा | ६,००० ।- |
| ३५ | श्री गजेन्द्र बुढाथोकी | सुर्खेत | ७,००० ।- |
| ३६ | श्री कुवेर बहादुर कार्की | मोरङ | ६,००० ।- |
| ३७ | श्री गोविन्द बहादुर शर्मा | बांके | ५,००० ।- |
| ३८ | श्री नवराज ढकाल | चितवन | ५,००० ।- |
| ३९ | श्री इन्दिरा कोइराला | काठमाडौं | ५,००० ।- |
| ४० | श्री नारायणप्रसाद अधिकारी | चितवन | ७,००० ।- |
| जम्मा | | | ३,३१,००० ।- |

## कोष स्थापना भएदेखि वितरण गरिएको रकम विवरण

| आ.व. | रकम रु. | जना |
|---|---|---|
| ०५३/५४ | ३५,०००।- | ५ जना |
| ०५४/५५ | १,०९,१५६।०९ | १२ जना |
| ०५५/५६ | ८६,५००।- | ११ जना |
| ०५६/५७ | ६०,५००।- | १३ जना |
| ०५७/५८ | ७२,०००।- | १५ जना |
| ०५८/५९ | ८८,०००।- | १२ जना |
| ०५९/०६० | ९३,५००।- | १८ जना |
| ०६०/६१ | ७१,०००।- | ११ जना |
| ०६१/०६२ | १,७१,५००।- | २२ जना |
| ०६२/६३ | ६४,०००।- | १२ जना |
| ०६३/०६४ | १,५४,०००।- | २५ जना |
| ०६४/०६५ | १,२८,५००।- | २४ जना |
| ०६५/०६६ | १,१४,५००।- | २० जना |
| ०६६/६७ | ४५,०००।- | ७ जना |
| ०६७/०६८ | १,३३,५००।- | १९ जना |
| ०६८/०६९ | २,११,०००।- | २० जना |
| ०६९/०७० | १,४३,५००।- | १५ जना |
| ०७०/०७१ | २,४१,०००।- | २१ जना |
| ०७१/०७२ | ३३१०००।- | ४० जना |
| **जम्मा** | २३५३१५६।०९ | ३२२ जना |

